# को थिए ड्युहरिंग ? जसको एंगेल्सले मत–खण्डन गरे

ड्युहरिंग यूजेन कार्ल (१८३३–१९२१) जर्मन दार्शनिक तथा अर्थशास्त्री र यान्त्रिक विज्ञानका प्राध्यापक थिए । सारसंग्रहवादी दार्शनिक ड्युहरिंगले प्रत्यक्षवाद, असंगत, यान्त्रिक, भद्दा भौतिकवाद र आदर्शवादलाई मिलाए । राजनीतिक अर्थशास्त्र तथा समाजशास्त्रमा उनले निम्नपूँजीपति वर्गको विचारधारालाई व्यक्त गर्दथे । उनले माक्र्स तथा एंगेल्सको त्यस अवधिमा विरोध गरे, जब दुई पूर्ववर्ती स्वतन्त्र पार्टीहरुको (लासालवादीहरुको पार्टी तथा आइजेनाखवादीहरुको पार्टीको) एकीकरणको आधारमा निर्मित जर्मन सामाजिक–जनवादी पार्टीले आप्mना समूहहरुलाई एकजुट गरिरहेको थियो, जब सैद्धान्तिक प्रश्नहरुले विशेष महत्व प्राप्त गरेका थिए । दर्शनशास्त्र, राजनीतिक अर्थशास्त्र तथा समाजवादका प्रश्नहरुमाथि ड्यूहरिंगका भ्रामक तथा हानिकारक विचारहरुलाई केही सामाजिक–जनवादीहरुको बीचमा समर्थन प्राप्त भएको थियो । त्यस बेलाको अपरिपक्व जर्मन मजदूर आन्दोलनको लागि ड्यूहरिंगका रचनाहरुको खतरालाई अनुभव गरेर एंगेल्सले विशेष रुपमा लेखिएको आफ्नाे सुविख्यात पुस्तक ‘ड्यूहरिंग मत–खण्डन’ मा तिनीहरुमाथि मर्मान्तक प्रहार गरे । ड्यूहरिंग पछि गएर यहूदीविरोधको सीमासम्म पुगे र नश्लवादको प्रचार गर्न लागे । उनका मुख्य कृतिहरु हुन्–

दर्शनशास्त्रको मार्ग (१८७५), राष्ट्रिय अर्थशास्त्र तथा समाजवादको आलोचनात्मक इतिहास (१८७५) ।

*ड्यूहरिंग मत–खण्डन*

यो नामबाट फ्रेडरिख एंगेल्सको ‘श्री यूजेन ड्यूहरिंगद्वारा विज्ञानमा प्रवर्तित क्रान्ति’ शीर्षक पुस्तकले इतिहासमा प्रसिद्धि पायो; यसमा माक्र्सवादका तीन भागहरुको सवर्तोमुखी वर्णन गरिएको छ । तिनीहरु हुन् :

*१) द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिक ,*
*२) राजनीतिक अर्थशास्त्र*
*३) वैज्ञानिक साम्यवादको सिद्धान्त*

एंगेल्सले निम्नपूँजीवादी सिद्धान्तकार ड्यूहरिंगमाथि, जसका विचारहरुको नवोदित जर्मन सामाजिक–जनवादी पार्टीका केही सदस्यहरुले समर्थन गर्दथे, प्रहारहरुबाट माक्र्सवादी सिद्धान्तको रक्षाको लागि यो पुस्तक लेखेका थिए । माक्र्सले ‘ड्यूहरिंग मत–खण्डन’ को पाण्डुलिपि पढेका थिए र राजनीतिक अर्थशास्त्रको इतिहासमाथि एउटा अध्याय लेखेका थिए (भाग २ को अध्याय १०) । सन् १८७८ मा यो पुस्तक प्रकाशित भयो र त्यही वर्ष यसमाथि प्रतिबन्ध लगाइएको थियो । ड्यूहरिंग मत –खण्डनका तीन भागहरु छन् ः दर्शनशास्त्र, राजनीतिक अर्थशास्त्र तथा समाजवाद । प्रस्तावनामा एंगेल्सले दर्शनशास्त्रको विकासको रुपरेखा खिच्दछन् तथा वैज्ञानिक साम्यवादको आगमनको अवश्यम्भाविता दर्शाउँदछन् । भाग १ मा उनी द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादको वर्णन गर्दछन् ; दर्शनका आधारभूत प्रश्नको भौतिकवादी उत्तर दिन्छन् , जगतको भौतिकता, जगतको ज्ञानका मुख्य नियमहरु , सत्ताका रुपहरु – समय र स्थान – र पदार्थ तथा गतिको एकताको विषयमा प्रस्थापनाहरु निर्दिष्ट गर्दछन् । ड्यूहरिंग मत –खण्डनमा पदार्थको गतिका रुपहरु तथा विज्ञानहरुको वर्गीकरणका प्रश्नको विवेचना गरिएको छ । एंगेल्सले द्वन्द्ववाद, त्यसका आधारभूत नियमहरु र द्वन्द्वात्मक तथा आकारगत तर्कशास्त्रका परस्पर सम्बन्धहरुका विशेषताहरु बताएका छन् ।

ड्यूहरिंग मत–खण्डनमा प्रकृतिविज्ञानका महत्वपूर्ण समस्याहरुमाथि – डार्विनको सिद्धान्त , जीवकोषहरुको भूमिका तथा जीवनको प्रकृति , कान्टको विश्वोत्पत्ति –परिकल्पनामाथि – द्वन्द्वात्मक भौतिकवादको दृष्टिकोणबाट विचार गरिएको छ । एंगेल्सले नैतिकता , समानता, स्वतन्त्रता तथा आवश्यकता , आदिको पनि अध्ययन गरे । भाग २ मा एंगेल्सले राजनीतिक अर्थशास्त्रको विषयमा ड्यूहरिंगका विचारहरुको आलोचना गरे, राजनीतिक अर्थशास्त्रको विषयवस्तु तथा विधिको व्याख्या गरे , माल तथा मूल्य , अतिरिक्त मूल्य तथा पूँजी , भूमिको किराया , आदिको बारेमा माक्र्सको सिद्धान्तको वर्णन गरे । बलप्रयोगको आदर्शवादी सिद्धान्तको आलोचना गर्दै उनले समाजको विकासमा अर्थव्यवस्थाको निर्णायक महत्व दर्शाए , निजी सम्पत्ति र वर्गहरुको उत्पत्तिमाथि प्रकाश पारे । भाग ३ मा एंगेल्सले वैज्ञानिक साम्यवादको सिद्धान्त र इतिहासको सुस्पष्ट रुपरेखा प्रस्तुत गर्दछन् , काल्पनिक समाजवादप्रति त्यसको दृष्टिकोणमाथि प्रकाश पार्दछन्, समाजको साम्यवादी रुपान्तरणका कार्यभारहरु र तरीकाहरुको गहन प्रतिपादन गर्दछन्, समाजवाद तथा साम्यवादका विभिन्न मूलभूत प्रश्नहरुको बारेमा – समाजवाद र साम्यवादअन्तर्गत उत्पादन र वितरणको बारेमा , राज्य, परिवार, शिक्षाको बारेमा, शहर तथा गाउँको बीचमा, मानसिक तथा शारीरिक श्रमको बीचमा प्रतिपक्षताको उन्मूलन , आदिको बारेमा – माक्र्सवादी सिद्धान्तको रुपरेखा प्रस्तुत गर्दछन् । ड्यूहरिंग मत–खण्डन वैज्ञानिक विश्वदृष्टिकोण र क्रान्तिकारी सर्वहारा वर्गका हितहरुको सुसंगत तर्कको नमूना हो, विज्ञानमा तोडमोड र राजनीतिमा अवसरवादप्रति माक्र्सवादी अनम्यताको नमूना हो । एंगेल्सको पुस्तकले वर्तमान समयमा पनि द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादको विश्वदृष्टिकोणलाई अपनाउनमा मार्गदर्शकको काम गर्दछ, यो बर्जुवा विचारधाराको विरुद्ध तथा माक्र्सवादका सम्पूर्ण विचलनहरुको विरुद्ध संघर्षमा श्रमजीवीहरुको हतियार हो ।

# एक्काइसौं शताब्दीको समाजवादको लागि नयाँ मार्गहरु

*लेखिकाः मार्ता हार्नेकर*
*अनुवादकः रमेश सुनुवार*

## परिचय

मैले यो पुस्तक राष्ट्रपति ह्युगो चाभेजको देहावसान भएको एक महिनापछि पूरा गरेकी थिएँ । वहाँको ल्याटिन अमेरिकामा हस्तक्षेपबिना यो पुस्तकको लेखन हुनै सक्दैनथ्यो । तपाईंले यहाँ जे पढ्नुहुनेछ , त्यो अधिकांश कुनै न कुनै रुपमा उही बोलिभारियन नेतासँग, वहाँका विचार र कार्यसँग जोडिएको छ , जुन भेनेजुएलाभित्रका तथा क्षेत्रीय र विश्वस्तरका छन् । चाभेजले प्राप्त गर्नुभएको ल्याटिन अमेरिका र वहाँले आज हामीलाई छोडेर जानुभएको ल्याटिन अमेरिकाको बीचमा ठूलो भिन्नता छ भन्ने कुरा कसैले पनि अस्वीकार गर्न सक्दैन ।

सन् १९९८ मा ह्युगो चाभेजले राष्ट्रपतिको चुनाव जित्नुहुँदा नवउदारवादी पूँजीवादले जरा गाडिसकेको थियो । त्यसवेला विकल्प नवउदारवादी पूँजीवादी ढाँचा (निःसन्देह त्यसमा केही परिवर्तनहरु भएका थिए , उदाहरणार्थ सामाजिक प्रश्नहरुमा ठूलो सरोकार राखिएको थियो, तर त्यो अझै नाफामुखी उद्देश्यद्वारा प्रेरित थियो) पुनस्थापित गर्ने वा अगाडि गएर अर्को ढाँचा निर्माण गर्नको लागि प्रयन्त गर्ने भन्ने थियो । राष्ट्रपति चाभेजले नै पूँजीवादको यो विकल्पलाई त्यसका नकारात्मक अर्थहरुको बावजुद "समाजवाद" भन्ने साहास गर्नुभएको थियो । वहाँले यसलाई "एक्काइसौं शताब्दी " विशेषण थपेर "एक्काइसौं शताब्दीको समाजवाद" भन्नुभयो । यो विशेषण यो नयाँ समाजवादलाई ती गल्तीहरु र विचलनहरुबाट अलग गर्नको लागि थपिएको थियो , जुन बीसौं शताब्दीमा समाजवाद कार्यान्वयन गर्दा हुनगएका थिए । यो नयाँ समाजवाद "विगतका ती गल्तीहरु " मा फस्नुहुँदैन र यसबाट उही "स्टालिनवादी विचलनहरु" पनि हुनुहुँदैन, जसले गर्दा पार्टी नोकरशाही बन्यो र जनप्रभुत्वको अन्त भयो ।

*पेरुका समाजवादी जोसे कार्लोस् मारियारेगीजस्तै ह्युगो चाभेज पनि एक्काइसौं शताब्दीको समाजवाद कुनै "कार्वन कपी " हुन सक्दैन , बरु "साहसिक सिर्जना " हुनुपर्दछ भन्ने कुरामा विश्वास गर्नुहुन्थ्यो । त्यसकारण वहाँ बोलिभारियन , क्रिष्चियनर, रबिन्सनियन र अमेरिण्डियन समाजवादको कुरा गर्नुहुन्थ्यो । वहाँ समाजवादलाई एउटै सामूहिक जीवनपद्धतिको रुपमा लिनुहुन्थ्यो, जहाँ समानता, स्वतन्त्रता र वास्तविक तथा पूर्ण जनवादको राज हुन्छ , जहाँ आर्थिक प्रणाली नाफामा केन्द्रित नभएर मानवजातिमा केन्द्रित हुन्छ, र जहाँ एउटा बहुलवादी, उपभोक्तावाद विरोधी संस्कृतिको अस्तित्व हुन्छ , जसमा स्वामित्वको सट्टा जीवनले प्राथमिकता पाउँदछ ।*

भेनेजुएलाका राष्ट्रपतिका भाषणहरुमा बारम्बार दोहोरिने विषय जनताको सहभागिताको आवश्यकता थियो । त्यो एउटा यस्तो तत्व थियो , जसले वहाँको जनवादी समाजवादको कार्यध mमलाई अन्य समाजवादहरुबाट अलग गर्दथ्यो । वहाँ कुन कुरामा विश्वस्त हुनुहुन्थ्यो भने सवै क्षत्रहरुमा सहभागिताले नै मानिसहरुलाई विकास गर्न र आत्मविश्वास प्राप्त गर्न सक्षम बनाउँदछ, अर्थात उनीहरुले मानवजातिको रुपमा आफूलाई विकसित गर्न सक्दछन् ।

तर यदि चाभेजले सहभागितामूलक प्रक्रियाहरु फष्टाउनको लागि उपयुक्त स्थानहरुको प्रबर्धन गर्नुभएको भए तिनीहरु शब्दमा सीमित भएर रहन्थे होला । त्यसकारण सामुदायिक परिषद (स्व –व्यवस्थित सामुदायिक स्थान), श्रमिक परिषद र विद्यार्थी परिषद निर्माण गर्ने वहाँको महलकदमी एउटा वास्तविक सामूहिक संरचनाको उदयमा केन्द्रीय विषय बन्यो । त्यो संरचना अन्ततोगत्वा (अन्तिममा) विकेन्द्रीकृत राज्यको नयाँ स्वरुपमा अभिव्यक्त हुनुपर्दथ्यो , जसमा समुदायहरु ऋाधार तत्व हुन्छन् ।

चाभेज अरुले सोचेजस्तो अपरिपक्व हुनुहुन्थ्यो । वहाँलाई के थाहा थियो भने यो कार्यक्रमको विरोध गर्ने

शक्तिहरु अत्यन्तै शक्तिशाली छन् । तर पनि , एउटा यथार्थवादी हुनुको अर्थ राजनीतिको परम्परागत दृष्टिकोणलाई स्वीकार गर्नुपर्छ भन्ने होइन , जसले राजनीतिलाई सामान्यतया सम्भावनाको कलाको रुपमा हेर्दछ । चाभेजको लागि राजनीति असम्भवलाई सम्भव बनाउने कला थियो, जुन केवल इच्छाशक्तिद्वारा मात्र हुँदैन, त्यसको लागि त विद्यमान यथार्थलाई आफ्नो प्रस्थानबिन्दु त्यसलाई बदल्न सक्षम सामाजिक शक्तिहरुको सहसम्बन्ध र अनुकूल अवस्था निर्माण गर्ने प्रयत्न गर्नु पर्दछ । वहाँलाई यो पनि थाहा थियो वर्तमान कालमा असम्भव देखिने कुरालाई भविष्यमा सम्भव बनाउनको लागि राष्ट्रिय र अन्तराष्ट्रिय दुवै स्तरमा ती शक्तिहरुको सहसम्बन्ध बदलिनुपर्दछ । सरकारमा हुँदा वहाँले यो लक्ष्य प्राप्त गर्नको लागि कुशलतापूर्वक काम गर्नुभयो । वहँले के बुझ्नुभयो भने राजनीतिक सत्ता निर्माण गर्नको लागि उच्च नेताहरुसँगको सम्झौता पर्याप्त हुँदैन , सवैभन्दा महत्वपूर्ण कुरा त सामाजिक शक्तिहरुको सहसम्बन्ध निर्माण गर्नु हो । भनेजुएलाका नेताले के बुझ्नुभयो भने पूँजीवादको वैकल्पिक समाज निर्माण गर्नको लागि सँगसँगै जनउदावादी भूमण्डलीकरणको वैकल्पिक भूमण्डलीकरण आवश्यक छ । वहाँले कहिल्यै पनि एउटा देशमा समाजवाद बनाउन खोज्नुभएन । चाभेज यो सम्भव छैन भन्ने कुरामा पूर्णरुपले स्पष्ट हुनुहुन्थ्यो । त्यसैकारण वहाँले राष्ट्रिय र अन्तर्राष्ट्रिय दुवै स्तरमा सामाजिक शक्तिहरुको सहसम्बन्धको परिवर्तनमाथि यति धेरै जोडदिनुभएको थियो ।

वहाँले तुरुन्तै आफ्नो देशमा चलिरहेको संक्रमणप्रक्रियाका विशिष्टताहरुका उस्तै प्रक्रियाहरुका लागि पूर्वगामीको रुपमा काम गर्दथे । तिनीहरुमध्ये एउटा संक्रमण प्रक्रिया शून्यबाट आरम्भ हुँदैन भन्ने कुराको बोध थियो । त्यसको प्रस्थापना बिन्दु परम्पराबाट प्राप्त राज्य यन्त्र आर्थिक प्रणाली र संस्कृति हुन् । त्यसकारण संस्थागत मार्ग ग्रहण गर्नको लागि महिलो कदम संस्थागत खेलका नियमहरुलाई बदल्नु हुनुपर्दथ्यो । त्यसपछि त्यो मार्गमा विशाल अवरोधहरु उत्पन्न हुनेछन् भन्ने कुरा वहाँलाई थाहा थियो । तिनीहरुलाई पार गर्नुपर्दथ्यो । वहाँले के बुझ्नुभयो भने एउटा यस्ले सामाजतिर अगाडि बढ्नको लागि, जहाँ राज्य समाजलाई दमन गर्ने संस्था हुनुको सट्टा समाजको सेव गर्ने साधन र समाजद्वारा नियन्त्रित हुन्छ , शक्तिशाली राज्यको आवश्यकता पर्दछ । यही शक्तिशाली महादेशीय एकता हासिल गर्नको लागि अन्तर्राष्ट्रिय परिवेशहरु सिर्जना गर्न संभव हुनेछ । यो राज्यले संस्थाहरुबाट नयाँ संस्थाहरुतिर संक्रमण प्रक्रियालाई अगाडि बढाउँदछ , जसले नयाँ समाजको निर्माण गर्नको लागि परिवेशहरु सिर्जन गर्न सक्दछ । तिनीहरु हुन् – नयाँ संविधान, नयाँ कानून, स्थानीय सत्ताहरुको विकास, आदि । र, सबैभन्दा महत्वपूर्ण कुरा के हो भने यो पुरानो समाजबाट राज्यमा अब क्रान्तिकारी कार्यकर्ताहरु कर्मचारी हुन्छन् , त्यसकारण जन संगठनहरु र जननायकत्वलाई प्रवर्धन गर्नको लागि प्रोत्साहन दिन सकिन्छ, जुन तलबाट नयाँ राज्य बनाउनका लागि अनिवार्य तत्वहरु हुन् ।

*यी विचारहरुमध्ये अधिकांशको थप विकास यो पुस्तकमा गरिनेछ । यसले मन्थली रिभ्युको ग्रीष्म २०१० अंकमा प्रकाशित “ल्याटिन अमेरिका र एक्काइसौं शताब्दीको समाजवादः गल्तीहरु प्रिहार गर्न खोज ” मा सम्बोधन गरिएका विषयहरुलाई अद्यावधि, विस्तार र गहन बनाउँछ । मैले यो संस्करणमा मेरा पछिल्ला लेखहरुका अनुच्छेदहरु पनि समावेश गरेकी छु ।*

यो पुस्तकमा तीन भागहरु छन् । पहिलो भाग “ल्याटिन अमेरिकाको अग्रगमन” हो । यसमा विगतका दशकहरुमा हाम्रो अमेरिकामा भएको घटनाको संक्षिप्त वर्णन छः राजनीतिक तस्वीरको परिवर्तन सामाजिक परिचालनहरु, जसले यी परवर्तनहरुको व्याख्या गर्दछन्, संयुक्त राज्य अमेरिका र हाम्रो क्षेत्रको बीचमा शक्तिहरुको सहसम्बन्ध बदलिएको छ भन्दा ठूलो साम्राज्यवादी शक्तिद्वारा हाम्रो उपमहाद्वीपलाई दमन गर्ने र उपनिवेश बनाउन गरिएका प्रयत्नहरु । पहिलो भाग ल्याटिन अमेरिकी सरकारहरुको चित्रण गरेर सकिन्छ । किनभने सरकारहरुलाई कुनै एउटा वर्गीकरणमा सीमित गर्नुभन्दा तिनीहरु क्रियाशील हुने शक्तिहरुको सहसम्बन्धलाई सदा मनमा राखेर तिनीहरुको कामको मूल्यांकन गर्नु महत्वपूर्ण हुन्छ भन्ने मलाई लाग्दछ । यसको लागि हामीले यी सरकारहरुले गरेको परिवर्तनमा कम र यिनीहरुले दिएको दिशामा बढी ध्यान केन्द्रित गर्नुपर्दछ , किनभने

यिनीहरुले चाल्ने कदम धेरै मात्रमा अवरोधहरुको सामना गर्ने यिनीहरुको तरीकामाथि निर्भर हुन्छ ।

दोस्रो भाग "हामी कता गइरहेका छौं ? एक्काइसौं शताब्दीको समाजवाद" हो । यसमा पाठकहरुलाई यसमा समाजवादसँग यति धेरै नकारात्मक अर्थ जोडिएको भए पनि यसको महत्व बुझाउने प्रयत्न गरिएको छ । त्यसैगरी यसमा मूल मार्क्सवादी चिन्तनका कुन भागहरुको संरक्षण गर्नुपर्दछ , केही ल्याटिन अमेरिकी सरकारहरुका अनुभवहरुबाट कुन नयाँ विचारहरु आउका छन्, हामी बाँतिरहेको संक्रमण अवधिका विशेषताहरु के हुन्, आफ्ना विशाल सीमाहरुको बावजुद यी सरकारले के काम गर्न सक्दछन् र अन्त्यमा , यिनीहरुको कामलाई समर्थन गर्ने मापदण्ड के हुनुपर्दछ भन्ने कुराहरुको बारेमा विचार गरिएको छ । मलाई के विश्वास छ भने यी सबै विषयहरुले हामीलाई आफ्नो बाटो पत्ता लगाउन मद्दत गर्न सक्दछन् ।

तेस्रो भाग "नयाँ बर्चस्वको लागि नयाँ राजनीतिक उपकारण" हो । यो भागमा नयाँ समाजको निर्माण गर्दा आउने अवरोधहरुलाई पार गर्नको लागि आवश्यक शक्तिहरुको सहसम्बन्ध हासिल गर्ने तरीका र नयाँ बर्चस्वको विषयसँग यसको सम्बन्ध समेटिएको छ । मेरो तर्क के छ भने विश्वका अधिकांश भागहरुमा बुर्जुवा वर्गको सांस्कृति बर्चस्व त भत्किरहेको छ , तर यसको अर्थ अनिवार्य रुपले त्यसको स्थानमा नयाँ जनताको बर्चस्व उदय भएको छ भन्ने होइन । किनभने यस्तो बर्चस्व स्वतःस्फूर्त उत्पन्न हुँदैन । एउटा राजनीतिक उपकरणको आवश्यकता पर्दछ । त्यो भनेको राजनीतिक संगठन हो, जसले हामीलाई यो नयाँ बर्चस्व निर्माण गर्नमा सहयोृग गर्नसक्दछ । राजनीति र राजनीतिहरुलाई व्यापक रुपले अस्वीकार गरिएको विद्यमान परिस्थितिको बारेमा सचेत हुँदै म के स्पष्ट पार्न चाहन्छु भने मैले परम्परागत पुराना बामपन्थी पार्टीहरुको कुरा गरेको होइन । मैले त यहाँ विल्कुलै नयाँ स्वरुपको राजनीतिक पार्टीको कुरा गरेको हो , जसले सामाजिक आन्दोलनहरुलाई आफ्नो लागि उपयोग गर्दैन , बरु आफूलाई नै तिनीहरुको सेवामा लगाउँदछ । मैले एक्काइसौं शाताब्दीको समाजवाद निर्माणको लागि राजनीतिक उपकरण निक आवश्यक छ, यसका प्रमुख कार्यहरु के हुन्, आज हामीलाई कस्तो कार्यकर्ता र राजनीतिक संस्कृतिको आवश्यकता छ भन्ने कुराको रुपरेखा प्रस्तुत गरेकी छु । यसो गर्दा म के तर्क गर्छु भने मूलभूत कुरा त्यस्तो नोकरशाही शैलीको विरुद्ध संघर्ष गर्नु हो , जसमा रानजीतिक संगठनका नेताहरु र सरकारहरु प्रायः फस्ने गर्दछन् । त्यसैगरी म यस्तो घटना रोक्नको लागि जनताको आलोचना आवश्यक हुन्छ भन्ने कुरालाई पनि जोड दिन्छु ।

यहाँ के उल्लेख गरिनुपर्दछ भने यो पुस्तकका आधारभूत विचारहरु असंख्य पुस्तकहरुको पुस्तकहरुको अध्ययनबाट आएका होइनन् , यद्यपि मैले नामी विद्वानहरुका विचारहरु र अनुसन्धानहरु समावेश गरेकी छु भन्ने कुरा स्पष्ट हुन्छ । बरु यो कृति त ल्याटिन अमेरिकाका विभिन्न देशहरुमा भएका विविध संघर्षहरु र व्यावहारिक अनुभवहरुको प्रत्यक्ष अध्ययन गर्नसक्नुको परिणाम हो । यो पुस्तकका लागि धेरै अज्ञात सहयोगीहरुले योगदान गरेका छन् । विशेष रुपमा म मेरो सहकर्मी माइकेल लेबोविचको नाम उल्लेख गर्न चाहन्छु , जसका धेरै विचारहरु मैले यो पुस्तकमा समावेश गरेकी छु । त्यसैगरी जिमेना ला बारा प्रति पनि म आभारी छु , जसले यो पुस्तकको अन्तिम स्वरुप पूरै पढेर मलाई अमूल्य सुझवहरु र सहयोग दिनुभएको थियो । म ती सबैलाई धन्यवाद दिन चाहन्छु, जसले आफ्नो क्रान्तिकारी भावनाप्रति दृढ रहेर, अनुसन्धानको माध्यमबाट होस् वा कर्मको माध्यमबाट, यो पुस्तकलाई संभव बनाएरका छन् । मेरो ठूलो आशा के छ भने यो प्रयन्तले एउटा आसन्न सुन्दर भविष्यको निर्माणमा एउटा कण थप्नेछ, जुन यो शताब्दीको चतुर्थांश अगाडि असंभवजस्तै देखिन्थ्यो ।

*बाँकी अध्ययनका लागि पुस्तकको प्रतिक्षा गर्नुहोला । छिटै नेपाली भाषामा बजारमा आउँदै छ ।*

# मार्क्सवादमा एंगेल्सको योगदान

फ्रेडरिक एंगेल्स (१८२० –१८९५) सर्वहारा वर्गका नेता तथा शिक्षक, कार्ल मार्क्ससँग मिलेर मार्क्सवादी विचार, वैज्ञानिक साम्यवादको सिद्धान्त , द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादको दर्शनको सिर्जना गरे । आफ्नाे युवावस्थादेखि नै एंगेल्सले विद्यमान सामाजिक सम्बन्धहरुलाई रुपान्तरित गर्ने संघर्षमा भाग लिने प्रयास गरे ।

एंगेल्स युवा हेगेलवादीहरुको वामपक्षमा सामेल भए र उनले शेलिंगका प्रतिक्रियावादी–रहस्यवादी विचारहरुको तीव्र तथा गहन आलोचना गरे ( 'शेलिंग र इलहाम ', १८४२, तथा अन्य कृति) । साथसाथै उनले हेगेलका रुढिवादी निष्कर्षहरु तथा उनको आदर्शवादी द्वन्द्ववादमा रहेका अन्तर्विरोधहरुको आलोचना गरे । एंगेल्सका विचारहरुमा त्यस बेला आमूल परिवर्तन भयो, जब उनी त्यस बेलाको सबभन्दा विकसित पूँजीवादी देश इंग्ल्याण्डको मजदूर वर्गको जीवनको सम्पर्कमा आए । उनले सर्वहाराहरुको असहय आर्थिक अवस्था, उनीहरुको राजनीतिक अधिकारहीनतामाथि गहन विचार गरे , ती त्रुटिहरुको अध्ययन गरे , जुन चार्टिस्ट आन्दोलनले आफ्नो विचारधारा तथा पूँजीपतिहरुद्वारा सत्ताको स्वेच्छाले परित्यागसम्बन्धी आफ्नो काल्पनिक विचारहरुमा प्रदर्शित गरेको थियो । यो अध्ययनको परिणाम यी कृतिहरु थिए: 'राजनीतिक अर्थशास्त्रको रुपरेखाॅ (१८४४), जसलाई कार्ल

मार्क्सले आर्थिक प्रवर्गहरुको समीक्षामा एउटा भव्य योगदान भनेका थिए, तथा 'इंग्ल्याण्डमा मजदूर वर्गको अवस्थाॅ (१८४५) । यी कृतिहरुमा एंगेल्सले सर्वहारा वर्गको ऐतिहासिक कार्यभारको सैद्धान्तिक जग राखेका थिए, यो प्रदर्शित गरेका थिए कि सर्वहारा केवल दुःख – कष्ट झेलिरहेको वर्ग मात्र होइन , बरु आफ्नो मुक्तिको लागि लडिरहेको वर्ग पनि हो ।

इंग्ल्याण्डमा एंगेल्स समाजवादी बने । शीघ्र नै उनी इंग्ल्याण्डबाट हिँडे र १८४४ मा पेरिसमा उनको भेट कार्ल माक्र्ससँग भयो । यो भेट दुई महान

चिन्तकहरुको प्रगाढ मित्रताको शुरुवात थियो , जसको जगमा उनीहरुको समान विचार तथा पूँजीवादी दासताबाट सर्वहारा वर्गको मुक्तिको लागि व्यावहारिक संघर्ष थियो । १८४४ –४६ मा उनीहरुले मिलेर 'पवित्र परिवार' तथा 'जर्मन विचारधाराॅ शीर्षक कृतिहरुको रचना गरे , जसमा हेगेल , फायरबाख तथा उनका अनुयायीहरुका त्यस बेला प्रभुत्वशाली दार्शनिक विचारहरुको आलोचनात्मक ढंगले पुनव्र्याख्या गरियो र द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादको जग राखियो । १८४७ मा एंगेल्सले कम्युनिष्ट लीगको कार्यक्रमको मस्यौदा 'साम्यवादको सिद्धान्त' को रचना गरे । त्यसको आधारमा पछि गएर कार्ल माक्र्स र फ्रेडरिख एंगेल्सद्वारा 'कम्युनिष्ट पार्टीको घोषणापत्र ' (१८४८) लेखियो, जसमा माक्र्सवादको सम्पूर्ण शिक्षा , मजदूर वर्गको वैज्ञानिक विचारधाराको घोषणा गरियो । जर्मनीमा १८४८–४९ का घटनाहरुमा एंगेल्सले युद्धशिक्षा प्राप्त गरे, जब उनले क्रान्तिकारी सैनिकहरुको तर्फबाट लडे । त्यसपछिका वर्षहरुमा आप्mनो प्रवासकालमा एंगेल्सले 'जर्मनीमा किसान युद्ध ' र 'जर्मनीमा क्रान्ति तथा प्रतिक्रान्ति ' शीर्षक कृतिहरुमा जर्मन क्रान्तिको अनुभवको सामान्यीकरण गरे , सर्वहारा वर्गको मित्रको रुपमा किसान समुदायको भूमिका उद्घाटित गरे र बुर्जुवा वर्गको गद्दारीको भण्डाफोर गरे ।

इंग्ल्याण्ड फर्केपछि, जहाँ कार्ल माक्र्स पनि बसेका थिए, एंगेल्सले मजदूर आन्दोलनमा , प्रथम कम्युनिष्ट अन्तर्राष्ट्रियको स्थापनामा, निम्नपूँजीवादी अवसरवादी तथा अराजकतावादी विचारहरुको विरुद्ध संघर्षमा सक्रिय भाग लिए । उनले कार्ल माक्र्सलाई 'पूँजी' को रचनामा सबै ढंगबाट साहयता गरे र आप्mनो महान मित्रको देहावसानपछि यो कृतिका दोस्रो तथा तेस्रो खण्डहरुको उनी स्वयंले सम्पादन तथा प्रकाशन गरे । यो प्रक्रियामा उनले धेरै अनुसन्धानात्मक कार्य गरे । एंगेल्सले द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादको दर्शनको व्यापक पुष्टिको काम जारी राखे । माक्र्सवादी दर्शनमा उनको योगदान विशाल छ । 'लुडविग फायरबाख र शास्त्रीय जमर्न दर्शनको अन्त ', 'ड्यूहरिंग मत–खण्डन', 'परिवार, निजी सम्पत्ति र राज्यको

उत्पत्ति', आदि कृतिहरु माक्र्सवादी दर्शनको सार र महत्वको शास्त्रीय प्रस्तुतीकरण हुन् । एंगेल्सले द्वन्द्वात्मक भौतिकवादका विचारहरुलाई प्राकृतिक विज्ञानहरुमा लागू गरेर विशेष रुपले ठूलो काम गरे । उनका विचारहरुको गहनता कैयौं दशकहरुपछि मात्र अनुभव गरियो (उदाहरणको लागि, पदार्थ तथा गतिको अविभाज्यता तथा यससँग सम्बन्धित स्थान र समयको एकतासम्बन्धी शिक्षा , पदार्थका रुपहरुको अनन्त विविधता र परमाणुहरुको जटिल संरचना , अजैविक प्रकृतिको कुनै एउटा चरणमा पदार्थको गतिको एउटा रुपको अवस्थामा उत्पन्न जीवनसम्बन्धी विचार, आदि) । उनको सर्वतोमुखी ज्ञानले उनको लागि पदार्थको गतिका वस्तुगत रुपहरुलाई विज्ञानहरुको विभाजनको आधार बनाएर विज्ञानहरुको वर्गीकरणको सामान्जस्यपूर्ण प्रणालीको विस्तार गर्न संभव बनायो ।

एंगेल्सले विज्ञानहरुको अनुपयुक्त भूमिकालाई दर्शनमाथि थोपर्न स्पष्ट रुपले अस्वीकार गरे र अध्ययनविधि, विश्वदृष्टिकोणको रुपमा त्यसको महत्वमाथि जोड दिए । उनले दर्शनशास्त्रलाई अतीतका असंख्य धाराहरु र प्रणालीहरुको बीचमा दिशानिर्धारणको कम्पास प्रदान गरे, दर्शनको आधारभूत प्रश्न निरुपित गरे र त्यसको वर्गीय स्वरुप उद्घाटित गरे । ज्ञानको सिद्धान्तको विकासमा उनको योगदान र अज्ञेयवादको उनीद्वारा आलोचनाको असीमित महत्व छ । द्वन्द्वात्मक तर्कशास्त्रका कैयौं प्रश्नहरुको उनीद्वारा निरुपण तथा विस्तारको दीर्घकालीन महत्व छ । ऐतिहासिक भौतिकवादका आधारभूत प्रस्थापनाहरुको विकास गर्दा एंगेल्सले इतिहासको भौतिकवादी धारणाका भद्दा धारणाहरुको आलोचनातिर धेरै ध्यान दिए । उनले के सिद्ध गरे भने, मानिसहरुको जीवनका आर्थिक अवस्थाहरुको निर्णायक भूमिकाले विचारहरु, चिन्तनको भूमिका र साथसाथै इतिहासमा व्यक्तिको भूमिकालाई बिल्कुलै घटाउँदैन । उनले आर्थिक आधार र उच्च संरचनाको बीचका सम्बन्धहरु तथा पारस्परिक क्रियाको बारेमा यान्त्रिक विचारहरुको विरोध गरे । एंगेल्सले रुसको क्रान्तिकारी आन्दोलनमा गहिरो रुचि लिइरहे , उनले आसन्न रुसी क्रान्तिको भविष्यवाणी गरेका थिए र त्यसमाथि ठूलो आशा गरेका थिए । उनले आप् mनो जीवनको अन्तिम घडीसम्म यूरोपेली देशहरुको राजनीतिक जीवनमा भाग लिइरहे । उनी माक्र्ससँगै मजदूर आन्दोलनका सर्वमान्य नेता थिए ।

# विज्ञान-प्रविधि र नयाँ समाजको उदय

• राजकुमार श्रेष्ठ

लामो समयदेखि मानवजातिले प्रतीक्षा गर्दै आएको उत्कृष्ट समाज व्यवस्था 'समाजवाद/साम्यवाद' अब साकार बन्दै छ । कम्युनिष्ट आन्दोलनभित्रसमेत समाजवाद/साम्यवादलाई सुदूरभविष्यको विषय भनिदै आएको थियो । तर अब यो बहस अर्थहिन बनेको छ । किनभने यसको लागि आवश्यक भौतिक पूर्वाधार अब तयार भइसकेको छ । जडशुत्रको चस्मा लगाएर उदाइरहेको समाजवादी व्यस्थालाई नदेख्ने या नचिन्ने अक्षम्य गल्ती अब कम्युनिष्टहरुले गर्न मिल्दैन ।

विगतमा समाजवाद बहसको विषय मात्र थियो, तर अब यो भौतिक रुपमै उदय भइरहेको देख्न सकिन्छ । कम्युनिष्ट पार्टीहरुले समाजवादलाई बहसमै सीमित गर्न मिल्दैन, बरु कस्तो समाजवाद निर्माण गर्ने ? नेपालमा समाजवाद कस्तो र कसरी ? शुरु कहाँबाट र केबाट गर्ने ? ध्यान यता केन्द्रीत हुनुर्दछ । तर यी सबै कामका लागि चाहिने आइडिया अब माक्र्सवादमा वा माक्र्सको पुँजीमा मात्र खोजेर भेटिंदैन , त्यसका लागि विज्ञान–प्रविधिले कसरी काम गरिरहेको छ भन्ने कुरा बुझ्न आवश्यक हुन्छ । किनभने विगतको पुँजीवादले श्रमिकको अतिरिक्त श्रम शोषण गरेर पुँजीको संकलन गर्दथ्यो तर अहिलेको पुँजीवाद विज्ञान–प्रविधिको जगमा उभिएको छ । यसलाई

अतिरिक्त पुँजीको लागि अब श्रमिकको श्रम शोषण गर्नु पर्दैन , त्यसका लागि अत्याधुनिक स्वचालन मेसिनहरुको उपयोग तीव्र रुपमा बढिरहेको छ । विस्तारै उद्योगहरुबाट मानव श्रम विस्तापित हुँदै

गएको छ । त्यसको स्थापन आर्टिफिसियल इन्टेलिजेन्स, स्वचालित मेसिनहरु र रोबोटले लिइरहेको छ । चिन्ताको विषय के छ भने , रोजगारीबाट श्रमिकहरु विस्थापित हुने प्रक्रिया व्यापक बन्दैछ र बेरोजगारी ठूलो समस्या बन्दै गएको छ ।

पुँजीपतिहरुले विज्ञान –प्रविधिको उपयोग गरेर उद्योगबाट श्रमिकहरु निकालिरहेको घटनासँग समाजवादको गहन सम्बन्ध छ । पुँजीपतिहरुले प्रविधिको प्रयोग गरेर प्रचुर र थोरैभन्दा थोरै लागतमा वस्तुहरुको उत्पादन गर्नुको अर्थ हो धेरैभन्दा धेरै बिक्री गर्नु र बढीभन्दा बढी नाफा कमाउनु । यदि यहीँ निर *समुदायहरु मिलेर समुदायलाई आवश्यक पर्ने वस्तुहरु तथा सेवाहरुको सामुहिक रुपमा विज्ञान – प्रविधिको उपयोग गरेर उत्पादन गर्ने हो भने के हुन्छ ? कल्पना गरौं, यो काम विश्वभरका समुदायहरुले सामुहिक रुपमा गर्न थाल्ने हो भने के हुन्छ ? हामी सहजै अनुमान गर्न सक्छौं कि लगभग शून्य लागतमा प्रचुर उत्पादन सम्भव छ । साथै यसरी उत्पादन गरिएका वस्तुहरु र सेवाहरु लगभग निःशुल्क अथवा थोरै मूल्यमा समुदायले प्राप्त गर्नसक्नेछन् । यसले विश्वका हरेक समुदाय आत्मनिर्भरता तर्फ अग्रसर हुनेछ, एउटा समुदायले अर्को समुदायसँग आफूहरुले उत्पादन गरेका फरक वस्तुहरु शेयर गर्न सक्नेछन् ।* यसो भयो भने नाफामा आधारित पुँजीवादी बजार विघटन हुनेछ । तर यो कल्पनाको विषय मात्रै होइन , यस्तो यथार्थमा देखिन थालेको छ ।

विश्वप्रसिद्ध अर्थशास्त्री तथा समाजशास्त्री जेरेमि रेफ्किनले यस सम्बन्धमा आफ्नो पुस्तक जिरो मार्जिनल कष्ट सोसाइटी सुस्पष्ट रुपमा व्याख्या गरेका छन् । उनले लेखेका छन्–

यदि वाष्प इन्जिनले मानव जातिलाई मुक्त गरेर पुँजीवादी बजारमा भौतिक स्वार्थ खोज्न लगायो भने वस्तुहरुको इन्टरनेटले मानव जातिलाई बजार अर्थतन्त्रबाट मुक्त गरेर सहयोगी समुदायमा अभौतिक साझा हित खोज्न लगाउँदछ । लगभग शून्य सीमान्त लागत समाजमा हाम्रा आधारभूत भौतिक आवश्यकताहरुमध्ये अधिकांश करिब निःशुल्क पूरा हुनेछन् । इन्टेलिजेन्ट टेक्नोलोजीले त्यो अर्थतन्त्रमा अधिकांश भारी काम गर्नेछ , जुन दुर्लभताभन्दा प्रचुरतामा केन्द्रित हुनेछ । अबको आधा शताब्दीपछि हाम्रा भावी सन्ताहरु बजारमा बृहत रोजगारीको युगलाई त्यसैगरी हेर्नेछन्, जसरी हामी विगतका दास व्यवस्था र भूदास व्यवस्थालाई हेर्दछौं । मानव जातिको

मूल्यलाई पूर्ण रुपमा उसको वस्तु तथा सेवामा प्राप्त लाभ र भौतिक सम्पत्तिद्वारा मापन गरिन्छ भन्ने विचार नै आदिम , अझ बर्बर देखिने छ र त्यसलाई अत्यन्तै स्वचालित संसारमा बस्ने हाम्रा बंशको लागि भयानक मानवीय क्षति मानिनेछ, जहाँ अधिकांश जीवन सहयोगी समाजमा रहनेछ ।

जेरेमीको यो तर्क उदीयमान विश्वको चित्रण हो । अहिले विश्वभर ठूलो संख्यामा शिक्षित र दक्ष श्रम रोजगारभन्दा बाहिर छन् र विस्तारै उनीहरु प्रविधिको प्रयोग गरेर स्वरोजगार बन्दैछन् । रोजगारीको खोजीमा हिडेर थाकिसकेका युवाहरु अब आफ्ना लागि आवश्यक वस्तुहरु आफै उत्पादन गर्न लागिरहेका छन् । यो क्रम बढ्दो छ । समायोगी समाजको उदयलाई हेरेर के भन्न सकिन्छ भने केही दशकमै नाफाका लागि पुँजीपतिहरुले उत्पादन गरेका वस्तु तथा सेवाहरु किन्ने ग्राहकहरु घट्दै लगभग शून्य हुनेछ , किनभने समुदायले आफ्नो लागि चाहिने वस्तुहरु आफै उत्पादन गर्नेछन् । त्यो पनि थोरै लागतमा तर प्रचुर । *अब अभावहरु प्रचुरताबाट विस्थापित हुनेछन् । ननलाइन , स्वचालित मेशिन र आर्टिफिसियल इन्टेलिजेन्टको प्रयोग गरेर समुदायहरुले लगभग शून्य सीमान्त लागतमा वस्तुहरु उत्पादन गरेर र लगभग निःशुल्क उपलब्ध गराएर शोषणको अन्त्य गर्दैछन् ।* यसरी पुँजीपतिहरुको शोषणबाट समाज मुक्त हुनेछ । यी सबै कुराहरु आंसिक रुपमा यथार्थमा रुपान्तरण भइरहेका छन् । लाखौं-करोडौं युवाहरु यो कार्यमा सहभागी भइरहेका छन् ।

हामी केही दशक पछाडि फर्केर हेरौं । प्रदेशबाट पठाएको पत्र आइपुग्न महिनौं लाग्थ्यो । त्यो पत्रमा लेखिएको समाचार यतिधेरै बासी हुन्थ्यो कि त्यसबेलासम्म अरु थुप्रै घटनाहरु घटिसकेका हुन्थे , तर पनि हामीलाई केही महिना अघिको पत्रमा आएको सन्देश निकै ताजा लाग्थ्यो । तर अहिले समय बदलिएको छ । केही सेकेन्डमा संसारको जुनसुकै कुनामा भएका आफन्तसँग हामी प्रत्यक्ष कुराकानी गर्न सक्छौं, भिडियोमा गतिविधि हेर्न सक्दछौं । यो सबै गर्न लगभग निःशुल्क सम्भव भएको छ । त्यसैगरी केही दशक अघि कुनै फिल्म हेर्ने कुरा निकै कठिन र महंगो थियो, तर अब त्यो इन्टरनेटमा निःशुल्क प्राप्त गर्न सकिन्छ र त्यो पनि प्रचुरमात्रामा । त्यतिमात्रै होइन, इन्टरनेटमा भएका कुनै पनि सूचना , पुस्तक, भिडियो इत्यादि अर्बौ युजरहरुले एकै समयमा हेर्न सक्दछन् र शेयर गर्न सक्दछन् ।

यतिवेला विश्वभरी लकडाउनको अवस्था छ । यो समयमा सम्पूर्ण जस्तो छलफल, भेलाहरु जूम मिटिङमा भइरहेका छन् । *जूम मिटिङ एउटा एप हो । यो एपमा हजारौं, लाखौं माइल टाढा दूरीमा रहेका सयौं मानिसहरु जोडिन सक्दछन् र आफ्ना संस्थाका बारेमा, राजनीतिक पार्टीका बारेमा या कुनै विषयमा प्रत्यक्ष सम्वाद÷बहस गर्न सक्दछन् । इन्टरनेट र अनलाइन प्रविधिले संसारभरका मानिसहरुलाई एउटै भर्चुअल जोनमा ल्याइदिएको छ । हामी असीमित आवश्यकता र सीमित स्रोत साधनको युगबाट सीतिम आवश्यकता असीमित वस्तु तथा सेवाहरुको युगमा प्रवेस गरिरहेका छौं । धेरै मूल्य तिरेर वस्तु तथा सेवाहरु प्राप्त गर्नु पर्ने युगबाट हामी लगभग निःशुल्क वस्तु तथा सेवाहरु प्राप्त गर्न सकिने युगमा प्रवेस गरिरहेका छौं ।*

उत्पादनको क्षेत्रबाट मानव श्रम विस्थापित हुँदै गएको छ र त्यसको स्थान विज्ञान–प्रविधिले लिइरहेको छ । हामी देखिरेहका छौं विगतमा हजारौं मजदुरहरुले महिनौं र वर्षौं लगाएर गर्ने काम अहिले प्रविधिले असाधारण रुपमा थोरै समयमै मानव श्रमलेभन्दा कुशलतापूर्वक सम्पन्न गरिरहेको छ । थ्रीडी प्रिन्टिङहरुले प्राय सबै वस्तुहरु प्रिन्ट गरिरहेका छन् । मूर्तिलगायतका कलात्मक क्षेत्रका सबै उत्पादनहरु थ्रीडी प्रिन्टिङले थोरै लागतमा थोरै समयमा प्रिन्ट गर्न सम्भव भएको छ । थ्रीडी प्रिन्टिङ मेसिनले अहिले मानिसका लागि आवासहरुसमेत प्रिन्ट गरिरहेको छ । र उत्पादनहरुलाई लगभग शून्यको नजिक लगिरहेको छ ।

इँटा र ढुंगाबाट बनेका पसलहरुबाट ग्राहकहरु तीव्र रुपमा अनलाइन पसलतर्फ आकर्षित भइरहेका छन् । वर्तमान युगका इन्टरनेटहरु सूचनाहरुमा मात्र उत्पादन गरिरहेका छैनन्, बरु वस्तुहरु पनि उत्पादन र डेलिभरी गरिरहेका छन् । वस्तुहरुको इन्टरनेटले सारा सेवाहरु ग्राहकको दैलोमा पुर्याउन शुरु गरिसकेको छ र यो क्रम निकै द्रूत गतिमा बढिरहेको छ । साथै यसले नाफामुखी ठूला उद्योगहरुको स्थान ग्रहन गरिरहेका छन् ।

आउँदो केही दशकभित्र विशाल महाद्वीपीय र विश्वव्यापी नेटवर्कका उपभोक्ताहरूले हरित ऊर्जाका साथै भौतिक वस्तुहरू र सेवाहरू उत्पादन गर्ने , साझा बनाउने र शून्य सीमान्त लागतमा अनलाइन भर्चुअल कक्षा कोठामा शिक्षा लिने गरी अर्थतन्त्रलाई लगभग निःशुल्क वस्तुहरु र सेवाहरु उपलब्ध हुने युगमा पुर्याउनेछन् ।

अनलाइन विश्वविद्यालयहरुले शिक्षालाई व्यापक र लगभग निःशुल्क बनाउँदै लगेको छ । विश्वभरिका मानिसहरु हजारौं माइलको दूरीमा रहेर पनि एकसाथ अनलाइन कक्षाहरुमा सिकिरहेका र अनुभवहरु आपसमा शेयर गरिरहेका छन् र यो शिक्षा लगभग निःशुल्क छ । यति मात्रै होइन , अनलाइन विश्वविद्यालय र कलेजको शिक्षा बन्द कक्षाकोठाको पढाइभन्दा उत्कृष्ट छ । विस्तारै परम्परागत बन्द कक्षाकोठामा सञ्चालित स्कुल, कलेज र विश्वविद्यालयहरुका शिक्षाको स्थापन भर्चुअल अनलाइन स्कुल र विश्वविद्यालयले लिइरहेको छ । अनलाइन कक्षाको प्रभाव कति छ भन्ने कुरा अहिले यो लक डाउनको समयले पनि हामीले केही मात्रामा अनुभव गरिरहेका छौं । हामी अहिले नै सूचना र भिडियोहरु अनलाइनमा निःशुल्क प्राप्प गरिरहेका छौं ।

उत्पादन सम्बन्धमा आएको परिवर्तनले सामाजिक सम्बन्धहरुमा व्यापक फेरबदल आएको छ । सूचना प्रविधिको क्षेत्रमा आएको क्रान्तिले विश्वबाट हुलाक सेवा विस्थापित भएको छ र सूचना सेवा लगभग निःशुल्क बनेको छ र त्यो हरेकको हात हातमा पुगेको छ ।

**समाजवादको उदयको**

समाजवादका मुख्य तीन शर्तहरु थिए – निजी स्वामित्वको अन्त्य , मानवीय आवश्यकता पूरा गर्ने साधनहरुको प्रचुरता र समानता । वर्तमान विज्ञान – प्रविधिले समाजवादको यी तिनै शर्त सर्त पुरा गर्न सम्भव बनाइदिएको छ । महान सोभियतसंघ ढल्नुका थुप्रै कारणहरुमध्ये यी तीन सर्तहरु तत्कालिन मानव श्रमबाट पुरा हुन नसक्नु पनि थियो । सामाजिक र सामूहिक श्रमबाट समाजवादका ती सर्तहरु पुरा गर्न सकिन्छ भन्ने माक्र्सवादको धारणा थियो । तर , व्यवहारत त्यो सर्त मानव श्रमले पुरा गर्न सकेन । सोभियतसंघ ढल्यो । संसारभरका पुँजीवादीहरुले त्यसको उपलक्ष्यमा ठूलो भोज गरे । तर समाजवाद फेरि आफ्नो भौतिक परिस्थितिको मजबुतिसहित उदाएको छ । यसको मुख्य भूमिकामा विज्ञान –प्रविधि रहेको छ ।

समाजवादको पहिलो शर्त हो– निजी स्वामित्वको अन्त्य । निजी स्वमित्वको प्रारम्भ मावन श्रम थियो । आदिम युगमा निजी स्वामित्वका वस्तुहरु थिएनन् । प्रकृतिमा जे भेटिन्छ त्यहि सामूहिक रुपमा संकलन गर्ने र बाँडेर खाने गरिन्थ्यो । त्यतिवेला सजिलो के थियो भने एउटा समूह एउटा परिवार हुन्थ्यो । परिवार र समाजको भेद थिएन । वितरणमा समानता थियो । त्यो व्यवस्थालाई आदिम साम्यवाद पनि भनियो । जब मानिस प्रकृतिमाथिको निर्भरताबाट आफै उत्पादन गर्ने कृर्षी युगमा आयो तब निजी स्वामित्वको जन्म भयो । उत्पादनमा मानव श्रमको प्रयोगसँगै निजीस्वमित्वको सुरुवात भएको पाइन्छ । त्यसकारण *समाजवादको निजी स्वामित्व अन्त्य गर्ने सर्त पुरा गर्न उत्पादनको क्षेत्रबाट मानव श्रमको विस्थापन हुन जरुरी थियो । सोभियत समाजवादको समयमा उत्पादनबाट मानव श्रम विस्थापित गर्न सकिने भौतिक परिस्थितिको निर्माण भएको थिएन । तर वर्तमान युगमा उत्पादनको क्षेत्रबाट मानव श्रम लगभग विस्थापन भएको छ त्यसको स्थान रोबोट, स्वचालन यन्त्र र आर्टिफिसियल इन्टेलिजेन्ट र थ्रीडी प्रिन्टिङ मेसिनले लिएको छ ।*

विज्ञान–प्रविधिको असाधारण क्षमताका कारण वस्तुहरुमाथिको निजी स्वामित्वलाई संकुचित बनाउँदै लगेको छ । धेरैजसो वस्तु तथा सेवाहरु निजी स्वामित्वबाट अलग बनिरहेका छन् । उदाहरणका लागि इन्टरनेट र अनलाइनमा भएका वस्तुहरु लगभग साझा स्वामित्वमा बदलिएका छन् । हामी निजीकरण गर्न नमिल्ने या गर्न नपर्ने युगतर्फ प्रवेश गरिरहेका छौं । यसले समाजवादलाई सम्भव बनाइदिएको छ ।

समाजवादको दोस्रो शर्त मानवीय आवश्यकता पूरा गर्ने साधानहरुको प्रचुरता हो । विज्ञान –प्रविधिको असीमित तथा विशाल क्षमताबाट यो शर्त पूरा भइरहेको छ ।

तपाई अहिले इन्टरनेटमा बस्नुभयो भने त्यहाँ पाइने भेराइटिहरुको तुलनामा तपाईका आवश्यकता सारै थोरै भएका छन् । इन्टरनेटमा भएका चिजहरु हामीले उपयोग गरेर नसक्ने अवस्था छ । हामी आवश्यकता र छनोट गरेर इन्टरनेटमा उपलब्ध सामग्रीहरुको उपयोग गर्छौं । फेरि ती यति व्यपक छन् कि एउटै समयमा एउटै आइटम पृथ्वीका अरवौं मानिसहरुले उपयोग गर्न सक्दछन् ।

*यदि औधोगिक क्षेत्रमा स्वचालन र आर्टिफिसियल इन्टेलिजेन्ट प्रविधिको प्रयोगदर कायम वा बृद्धि हुँदै गयो भने विश्लेषकहरूका अनुसार सन् २०४० सम्म कारखानाको रोजगार केही लाख मात्र हुने सम्भावना छ । त्यसबाट विश्वमा वृहत कारखाना श्रमको अन्त्य हुनेछ । रोबोट निर्माण गर्न , उत्पादन प्रवाह प्रबन्धको लागि नयाँ सफ्टवेयर एप्लिकेशन सिर्जना गर्न र प्रोग्रामहरू र प्रणालीहरू मर्मत र अपग्रेड गर्न आवश्यक पर्ने केही मानव श्रमको स्थान पनि आर्टिफिसियल इन्टेलिजेन्टले लिन थालिसकेको छ, किनभने यो आफै पुनः प्रोग्राम गर्न सक्षम हुँदैछ ।* प्रारम्भिक लागतबाहेक वस्तुको थप इकाईहरूको स्वचालित उत्पादनको सीमान्त श्रम लागत प्रतिदिन शून्यको नजिक हुँदै गइरहेको छ । यसरी शून्य लागतमा प्रचुर उत्पादन सम्भव हुन्छ भने निजी स्वामित्व र शोषणको सवाल किन रहन्छ ? वास्तवमै हामी अभावको युगबाट प्रचरताको युगतर्फ प्रवेश गरिरहेका छौं ।

त्यसैगरी समाजवादको तेस्रो शर्त समानता हो । श्रम –विभाजनको परिणामस्वरुप उदय भएको वर्गहरुको कारण मानिसहरुको बीचमा असमानताको शुरुवात भएको थियो । आज विज्ञान–प्रविधिले सबै कार्यहरुलाई सरल र समान बनाइदिएर मानिसहरुको बीचमा समानता हुने भौतिक परिवेसको सृजना गरिदिएको छ । हिजो पुरुषले काम गरेबापतको ज्याला र महिलाले कम गरेबापतको ज्यालामा असमानता थियो । त्यसको मुख्य कारण शारिरीक श्रम थियो । तर अहिले कुनै अफिसमा चाहिने श्रमिकको ज्याला उसको स्किलमा भर पर्छ, पुरुष र महिलामा हैन् । अहिले पारिश्रमीक काम गर्ने क्षमताका आधारमा हुन्छ । अब पुरुषले गर्न सक्ने काम महिलाले पनि उत्तिकै गर्न सक्छ । जस्तै एउटा हवाइजहाजको पाइलट महिला या पुरुष जो भए पनि त्यसले बोक्ने मान्छेको संख्या उतिनै हुन्छ । तर अब योभन्दा अघि बढेर प्रविधिले मानिसले गर्ने स्किलको काम पनि रोबोट र स्वाचालन यन्त्रहरुले गर्न थालिसकेको छ । यसले मानवलाई पूर्व स्वतन्त्र हुन सम्भव बनाउँदै छ ।

पुँजीवादी व्यवस्था हामीले सोचेजस्तो कमजोर छैन् । यो आफ्नो अस्थित्वका लागि विश्वव्यापी रुपमा एकीकृत बनेको छ , आणविक हतियारसहित विश्वसामु खडा छ । अब यसलाई ध्वंस गरेर यसको खारानीमा नयाँ व्यस्था स्थापना गर्न सम्भव छैन । यदि त्यो गर्ने नै हो भने मानव सभ्यता नै खरानी बन्नसक्दछ । त्यसकारण निजी स्वामित्वका लागि प्रविधिको भरपुर प्रयोग गरेर बाँचिरहेको पुँजीवादी व्यवस्थालाई त्यसको समानान्तरमा विज्ञान –प्रविधिकै जगमा सामुदायिक स्वामित्वमा आधारित व्यवस्था खडा गरेर मात्र विस्थापन गर्न सम्भव छ ।

# सोभियत कम्युनिस्ट पार्टीको विघटनः एक संशोधनवादी प्रयोग

• छवी सुवेदी

मार्च महिनाको १३,सन् १९८८ को दिन । सोभेत्स्काया रोसिया नामक रुसी पत्रिकामा रसायनशास्त्रकी प्राध्यापक निना आन्द्रेयेभाको एउटा खुला चिठी छापियो । शिर्षक थियो, “म मेरा सिद्धान्तहरुलाई त्याग्न सक्दिन ।” त्यो समय सोभियत संघको कम्युनिस्ट पार्टी र सत्ताका प्रमुख मिखाइल गर्वाचोव युगोस्लाभीया भ्रमणमा थिए । उक्त **चिठी नौ सयभन्दा बढी रुसी पत्रिकाहरुले छापे । सोभियत संघभरी चिठीले ठूलो हलचल ल्यायो । चिठीमा निनाले प्रेस्त्रोइका र ग्लास्नोस्तको धज्जी उडाएकी थिइन् । आधारभूत कम्युनिस्ट सिद्धान्तलाई त्यागेर बजार पुँजीवादको शरणमा गएको भन्दै पार्टी नेतृत्वको आलोचना गरेकी थिइन् । त्यो चिठीले लाखौं सोभियत मनहरुलाई तरङ्गीत बनायो । व्यवस्थामा ल्याइएको सुधारले आम नागरिकहरुलाई अभावको पहरोमा लगेर जोतिदिएको थियो । पाउरोटी किन्नसमेत घण्टौ लाइन बस्नु पर्ने अवस्थाबाट आजीत जनताहरुलाई चिठीले जुलुसमा बदल्यो ।** शहरहरुमा र्यालीहरु निस्किए । मिखाइल गर्वाचोव भ्रमण छोट्याएर मस्को फर्किए । उनले कम्युनिस्ट पार्टीको पोलिटब्युरोको बैठक डाके । बैठकले उक्त चिठीलाई एकमतले खारेज गर्यो । सुधारका आलोचकहरुलाई राष्ट्रघातीको आरोप लगाइयो ।

बुढा कोन्स्त्यान्टिन चेर्नेन्कोको सन् १९८५ मा निधन भएपछि ५४ वर्षका मिखाइल गर्वाचोव पार्टी महासचिव बनेका थिए । महासचिव बन्नुपुर्व गर्वाचोवले क्यानडा, बेलायतलगायत केही मुलुकको भ्रमण गरेका थिए । उनी समाजलाई खुकुलो बनाउने र अर्थतन्त्रको पुनर्निर्माण गर्ने सोचमा थिए । ख्रुस्चेभको कार्यक्रमबाट गर्वाचोव प्रभावित थिए । महासचिव बनेलगत्तै गर्वाचोवले जनताका कुरा सडकमै सुन्ने, आफ्नो फोटो चोकहरुमा नटास्ने, पोलिटब्युरोमा छलफललाई बृहत् बनाउनेजस्ता कदमहरु चाले । सोभियत समाजवाद ख्रुस्चेभको पुँजीवादपरस्त कार्यक्रमबाट सन्क्रमित भएकोले त्यो झन मक्किदै गएको थियो। सन् १९८६ मा चेर्नोवील आणविक दुर्घटना भयो। केही पश्चिमा विश्लेषकहरुले त चेर्नोवील आणवीक दुर्घटनाले सुधारका निमित्त दबाब दिएको बताएका छन् । आणवीक होडबाजीले उकुसमुकुस भएको दुनियाका निमित्त चेर्नोवील दुर्घटनाले चर्चा पाउनु अस्वभाविक थिएन । सोही साल भएको पार्टीको सत्ताइसौं महाधिवेशनबाट गर्वाचोवको आर्थिक पुनर्निर्माण “प्रेस्त्रोइका” र राजनीतिक खुलापन “ग्लास्नोस्त“ कार्यक्रम पारित भयो । गर्वाचोवले समाजवादलाई अझ सुदृढ गर्न यस्तो सुधारको कार्यक्रम ल्याएको व्याख्या गरे । **सन् १९८७ को जुनमा सम्पन्न पार्टीको विस्तारित बैठकमा उनले आर्थिक सुधारलाई बल पुग्ने दस्तावेज पेश गरे । उक्त बैठकमा उनले बहुदलीय व्यवस्थाको प्रस्ताव पनि राख्न खोजेका थिए । तर त्यो प्रस्ताव उनले बाहिर ल्याएनन् । आर्थिक सुधारको कार्यक्रमले निजि व्यापारलाई कानुनी मान्यता प्रदान गर्यो । सरकारी उत्पादन कम्पनीहरुले आफ्नो उत्पादनको तीस प्रतिशत निजि व्यापारी र सहकारीलाई बेच्न पाउने प्रावधान बन्यो । खबरपत्रिकाले सरकारका गतिविधिको आलोचना छाप्न पाउने भए । पार्टी र समाजवादविरोधी कार्य गरेको आरोपमा बन्दी बनाइएकाहरु रिहा भए । सुधारको कार्यक्रमपश्चात सरकारी कम्पनीहरूको घाटा बढ्यो । निजि व्यापारीहरुको नाफा तीव्र रुपमा बढ्यो । कालोबजारी र भ्रष्टाचार त्यही मात्रामा वृद्धि भयो ।**

सुधारवादी बाटोको विपक्षमा कम्युनिस्ट पार्टीभित्र आवाज बुलन्द हुँदै गयो । आम नागरिकहरुमा पनि सुधारले आकर्षण पैदा गरेन् । रुसी कम्युनिस्ट पार्टीभित्र हुर्किरहेको नोकरशाहीतन्त्र र कालोबजारीहरु एवं तस्करहरुको गठजोडले नयाँ प्रणाली कामकाजी हुनुपूर्व पुरानो प्रणाली ध्वस्त बनायो । महंगी र अभावले असन्तोष हवात्तै बढ्यो । सरकारका सीमित अधिकारी र केही व्यापारी रातारात धनी बने । आम जनताले नचिताएको गरिबी व्योहोर्नुपर्यो । यही परिवेशमा निना आन्द्रेयेभाको चिठी बाहिरिएको थियो । कम्युनिस्ट नोकरशाह र नाफाखोरहरुमाथि औंला उठाइएको थियो । **लेनिनले भने झै सुधारवादले पुँजीवादको सेवा गर्ने तथ्यको व्यवहारिक रुपले पुष्टि भएको थियो । पश्चिमी पुँजीवादी वृत्तले मिखाइल गर्वाचोवको प्रशन्सामा शब्दहरु खर्चिन शुरु गरेको थियो । सन् १९८८ मा टाइम पत्रिकाले गर्वाचोवलाई “वर्ष पुरुष” घोषणा गर्यो।**

ख्रुश्चेवको उदयपश्चात स्टालीनले लागू गरेको राष्ट्रीय समाजवादको कार्यक्रम अप्ठ्यारोमा पर्यो। पुर्वी युरोपमा सोभियत संघले अनावश्यक हस्तक्षेप गरेर आफ्नो स्वरुप पनि अमेरिकाको झै साम्राज्यवादी भएको झल्को दियो । राज्यको धेरै ठूलो सम्पत्ति आणविक हतियारका निमित्त खर्च हुन थाल्यो । सन् १९६१ मा सम्पन्न पार्टीको बाइसौ महाधिवेशनमा ख्रुश्चेवले आउदो २० वर्षमा साम्यवादको स्थापना गर्ने घोषणा गरे । स्टालीनको नामोनिसान मेटाउन उनको नाम दिइएका शहरहरुको नाम पुरानै राख्ने निर्णय भयो । इतिहासकार आर्की ब्राउनकाअनुसार झुठो वाचा गरिएको भए पनि रुसी इतिहासमा साम्यवाद स्थापनासम्बन्धी त्यो अन्तिम दस्तावेज थियो । ख्रुश्चेवले लेनिनको नयाँ आर्थिक नीतिको खुलेर प्रशन्सा गरे भने स्टालीनलाई इभान जस्तो डरलाग्दो राक्षसको उपमा दिए। चीनसङ्गको वैचारिक सम्बन्ध भङ्ग गरे। सन् १९६२ को क्युबाली मिसाइल संकटले ख्रुश्चेवको नीतिलाईं कमजोर बनाउन मद्दत गर्यो। ख्रुश्चेवलाई ब्रेझनेवले सजिलै अपदस्थ गरे । ब्रेझनेवले लीक बाहिर गैसकेको सोभियत समाजवादलाई सच्याउन सकेनन् । ब्रेझनेवको मृत्युपछि युरी आन्द्रोपोव महासचिव भए । उनले भ्रष्टाचारविरोधी अभियान चलाए। आन्द्रोपोवले मिखाइल गर्वाचोवलाई पार्टीमा अघि सारे। आन्द्रोपोवपछी चेर्नेन्को नेतृत्वमा आए । यी दुवै बुढा र रोगी थिए। आन्द्रोपोवपछी मिखाइल गर्वाचोव महासचिव भए। यहासम्म आउदा ख्रुश्चेवको सुधारवादले लामो भूमिगत यात्रा तय गरिसकेको थियो । उनले बढाएको हस्तक्षेपको नीति शिखरबाट ओरालो झर्ने तरखरमा थियो ।

**गर्वाचोवले पूर्वीयुरोपका समाजवादी मुलुकहरुमा बढेको अमेरिकी सक्रियतालाई रोकेनन । आणवीक अप्रसारको नीति अख्तियार गर्न तयार भए । अफगानिस्तानबाट रुसी सेना फिर्ता गरे । हेर्दाहेर्दै पूर्वी युरोप ढल्यो । बर्लीनको पर्खाल भत्कियो । सन् १९८९ मा टाइम पत्रिकाले गर्वाचोवलाई “दशक पुरुष” घोषणा गर्यो । पुँजीवादको विश्वव्यापीकरण बेलगाम घोडा झै बर्लीन , क्रेमलीन हुँदै तियानमेनसम्म पुग्यो । सोभियत सत्ताले समाजवादको नाममा आफूमाथि आश्रित परजीवी समाजवाद स्थापना गरेको थियो । सोभियत संघ आफै चर्मराउन थालेपछि ती आश्रित सत्ताहरु ढल्नु स्वभाविक नै थियो ।**

गर्वाचोवले बजारको ढोका खोलेपछी उनले भनेका थिए, “हामीले सन् २००० सम्ममा अमेरिकी उत्पादनलाईं भेट्नेछौ ।” उनले भोड्का उत्पादनमा चालीस प्रतिशत कटौती गरे । रक्सी सेवनमा कडाइ गरे । यसरी आर्थिक सुधारसँगै सामाजिक सुधारलाईं पनि अघि बढाए । यी सुधारका कार्यक्रममा उनलाई नजीकबाट सहयोग गर्ने नेतामध्येका एक थिए – अलेक्जेण्डर यकोव्लेव । उनी अमेरिकामा एक वर्ष पढेर आएका थिए । रुसको कम्युनिस्ट व्यवस्था जोगाउन आर्थिक पुनर्निर्माणलाईं उनी अचुक हतियार ठान्थे ।

उनलाई “ग्लास्नोस्त” का पितामह पनि भनिन्छ । सन् १९८७ मा रुसी राष्ट्रवादी सङ्गठन पाम्यातले यकोव्लेवलाई सरकारबाट हटाउन चेतावनी दियो। सन् १९९० सम्म आउदा आर्थिक सुधारको कार्यक्रमले सोभियत सत्तालाई एक सय अरबभन्दा बढीको चुना लगायो। यसको बदलामा मस्कोले केही थान अरबपति जन्मायो। मस्कोमा म्याक डोनाल्ड रेस्टुरेन्ट लगायतका विदेशी व्यापारका केन्द्रहरु खुले । जहाँ धनाढ्यहरु आफ्नो आम्दानीको सानो भाग खर्च गर्न सक्थे । सन् १९९० को शान्तितर्फको नोवेल पुरस्कार गर्वाचोवलाईं दिइयो ।

ग्लास्नोस्त र प्रेस्त्रोइकाले सोभियत संघमा राष्ट्रवादलाई बिउझाए । बाल्टिक गणराज्यहरुले सन् १९८९ को अन्त्यसम्ममा आफुलाई स्वतन्त्र घोषणा गरिसकेका थिए। अन्य गणराज्यहरुमा पनि स्वातन्त्रताको आन्दोलन शुरु भएको थियो । गर्वाचोव सोभियत संघलाईं जोगाउन चाहान्थे । तर उनले अख्तियार गरेको नीतिले विघटनको बीउ रोपिसकेको थियो । सन् १९९० को जुन महिनामा सोभियत संघको कम्युनिस्ट पार्टीको अट्ठाइसांै महाधिवेशन भयो । गर्वाचोवले “मानवीय प्रजातान्त्रिक समाजवादतर्फ” नामक दस्तावेज पेश गरे । यो नै सोभियत कम्युनिस्ट पार्टीको अन्तिम महाधिवेशन थियो । यहाँसम्म आउदा गर्वाचोव मार्क्सवादी लेनिनवादीबाट युरोपेली समाजवादी भैसकेको पुष्टि हुन्छ । सुधारको बाटोबाट छिरेको बजार पुँजीवादले आफू हिडेको सुधारवादी बाटो भत्काएर पुँजीवादलाई फराकिलो बनाइसकेको थियो । राज्य नियन्त्रित उत्पादन फर्महरु बन्द हुने चरणमा पुगेका थिए । किसान र मजदुरको अवस्था सन् १९१७ को झै भैसकेको थियो । राज्यको नियन्त्रणमा रहेका उत्पादनका साधनहरुमा नोकरशाहीतन्त्रले कब्जा जमाएको थियो ।मौका पाउनासाथ नोकरशाहीतन्त्रले ती उत्पादनका साधनहरु कमिसनको भरमा उदारवादलाईं सुम्पिदियो । अब गर्वाचोवसँग पार्टी र सत्ताको पदबाहेक अरु सिन्को पनि बाँकी थिएन । उनी आत्मसमर्पण गर्न टिठलाग्दो गरि उदारवादको कठघरामा उभिएका थिए । गर्वाचोव अब आफ्नो चाहानाले केही गर्न सक्दैनथिए । यो अवसानको यात्रा गर्वाचोवले अचानक शुरु गरेका थिएनन् । जब उत्पादनका साधनहरु मजदुर र गरिब किसानहरुबाट वेतनभोगी नोकरशाहहरुले आफ्नो कब्जामा लिए , त्यही समयबाट यो यात्रा शुरु भएको थियो ।

गर्वाचोवलाई अब कम्युनिस्ट पार्टीको पद भारी लाग्न थालेको थियो । उनी उदारवादी र मार्क्सवादी लेनिनवादीको चेपुवामा निर्णयविहीन भएर तैरिरहेका थिए । सन् १९९१ अप्रिलको केन्द्रिय समिति बैठकमा उनले राजीनामा दिए । पोलिट्व्युरोको बैठक उनीबिना तीन घण्टा चल्यो । केन्द्रिय समितिको आग्रहमा पछि उनले आफ्नो राजीनामा फिर्ता लिए , सन् १९९१ अगस्त १८ को दिन । गर्वाचोव आफ्नी श्रीमती र छोरीको साथ क्रीमियास्थित सरकारी आवासमा विदा मनाइरहेका थिए । अचानक उनको घरमा एउटा टोलि पुग्यो र राजीनामा गर्न भन्याँे । यता मस्कोमा मन्त्रीमण्डलका आठ जनाको एउटा समूहले गर्वाचोवलाई सत्ताच्युत गर्ने योजना बनाएको थियो। गर्वाचोवले राजीनामा गर्न मानेनन् । उनलाई आफ्नै निवासमा बन्दी बनाए। त्यो समय रुसी गणराज्यका प्रमुख कम्युनिस्ट पार्टी छाडिसकेका वोरिस एल्त्सिन थिए। उनले सन् १९८७ मा कम्युनिस्ट पार्टीको पोलिट्व्युरो सदस्यबाट राजीनामा दिएका थिए । गर्वाचोवले उनलाई राजनीतिक निरक्षर भनेका थिए । आफुलाई बहुदलवादी भन्ने एल्त्सिनले गर्वाचोवविरुद्ध गरिएको सत्तापलटको विरोध गरे । उनले रुसमा सत्तापलटका विरुद्ध आम हडतालको घोषणा गरे । मानिसहरु सडकमा जम्मा भए । सैनिक ट्याङ्कहरुलाई घेरा हाले । अन्तमा वोरिस एल्त्सिनको अथक प्रयासको फलस्वरूप सत्तापलटको अभ्यास असफल भयो । २१

अगस्तमा गर्वाचोव मस्को ल्याइए । मस्को आएपछि गर्वाचोवले कम्युनिस्ट पार्टीबाट राजीनामा दिए । केन्द्रिय समिति भङ्ग गरेको घोषणा गरे । २४ अगस्तको दिन इभास्को पाँच दिनको लागि कार्यवाहक महासचिव भए । उनले कम्युनिस्ट पार्टीलाई बिउझाउन सकेनन् । २९ अगस्तमा एल्त्सिनले कम्युनिस्ट पार्टीमाथि प्रतिबन्ध लगाए । त्यो समय सोभियत कम्युनिस्ट पार्टीका झन्डै एक करोड नब्बे लाख सङ्गठित सदस्य थिए ।

१७ डिसेम्बरका दिन एल्त्सिनसङ्गको बैठकमा गर्वाचोवले सोभियत संघ विघटनको प्रस्तावमा हस्ताक्षर गरे । २४ डिसेम्बरमा सोभियत संघको राष्ट्रपतिको हैसियतमा गर्वाचोवले अन्तिम सम्बोधन गरे ( "सुधारका सबै प्रयासहरु असफल भए । .. यो समाजले स्वतन्त्रता प्राप्त गरेको छ ।" २५ डिसेम्बरका दिन उनले राष्ट्रपति पदबाट राजीनामा दिए । आणवीक हतियारको साँचो रुसी गणराज्यका राष्ट्रपति वोरिस एल्त्सिनलाई हस्तान्तरण गरे । त्यो अक्टोबर क्रान्तिको उपज सोभियत सत्ता पूर्णत ढालिएको थियो । पुँजीवादले विजय उत्सव मनाएको त्यो दिन क्रेमलिनमा हँसिया हथौड़ा अंकित रातो झण्डा अन्तिम पटक फहराइएको थियो ।

**सोभियत सत्ताको पतनलाई कम्युनिस्टको अन्त्यका रुपमा खुब प्रचार गरियो । रुसको ऐतिहासिक भूमिले सोभियत सत्ता ढल्दै गर्दा धनी र गरिबबिचको ठूलो खाडल तयार पारिसकेको थियो । जसको दोष कम्युनिस्ट पार्टीमाथि थोपरेर पुँजीवादका एजेन्टहरु क्षणिक समयको लागि आत्मरती लिइरहेका थिए । सुधारवाद पहिरेर संशोधनवाद नामको भाइरस कम्युनिस्ट पार्टीमा छिरेको थियो । त्यसैले विशाल पार्टीलाई एउटा गोली पनि खर्च नगरी ढालेको थियो ।**

अर्थशास्त्री डेविड एफ रुकियोकाअनुसार सोभियत संघको पतनपश्चात आर्थिक असमानता रुसमा एकदमै बढेको छ । यो असमानताले युरोपका धेरै मुलुकहरुलाई उछिनिसक्यो । फोबर्स पत्रिकाको सन् २०१५ को प्रतिवेदन अनुसार रुसको करिव ४० प्रतिशत सम्पत्ति सिमित अर्बपतिहरुको हातमा छ । दुई तिहाइभन्दा रुसी जनता गरिबीमा जिउन बाध्य छन् । यो शाश्वत सत्य हो कि विश्वका सबै सत्ताहरु गरिवहरुको धैर्यमाथि टिकेका हुन्छन् । रुसमा पुँजीवादको पुनर्स्थापना विश्व कम्युनिस्ट आन्दोलनका निमित्त ठूलो पाठ पनि हो । समाजवाद एकपटक ढलेपपछि फेरि उठ्न नसक्ने भौतिक जीवन होइन, यो त आम उत्पीडित भौतिक जीवनहरुका निमित्त कालक्रममा सचेततापुर्वक जन्मिने एक बैज्ञानिक व्यवस्था हो ।

**सन्दर्भ सामाग्रीः**

१. सोभियत संघमा पुँजीवादको पुनर्स्थापना ,मार्टिन निकोलास।
२. द न्युयोर्क टाइम्स , २६ डिसेम्बर १९९१ ।
३. विकिपेडिया ।

# सन्दर्भ लेनिन जयन्ती: महान अक्टोबर समाजवादी क्रान्ति र वर्तमान युग

- रमेश सुनुवार

**महान अक्टोबर क्रान्ति र लेनिनलाई अलग गरेर हेर्न मिल्दैन । हामीले लेनिनलाई सम्झनुको अर्थ हो- उनको नेतृत्वमा सम्पन्न भएको महान समाजवादी अक्टोबर क्रान्तिक । लेनिन जयन्तीको सन्दर्भमा *महान अक्टोबर समाजवादी क्रान्ति र वर्तमान युग* शीर्षकको यो लेख प्रकाशित गर्नु उपयुक्त हुने ठानेर नयाँ समाजमार्फत पाठक समक्ष प्रस्तुत गरिएको छ- सम्पादक ।**

कुनै दुई युगहरुलाई एउटा घटनाले छुट्याउँछ । प्राचीनकालको अन्त्य र मध्यकालको आरम्भ सन् ४७६ मा कन्स्टेन्टीनोपलको पतनबाट भएको थियो । त्यसैगरी मध्यकालको अन्त्य र आधुनिक कालको आरम्भ सन् १४५३ मा बैजन्तियाको पतनबाट भएको थियो । यस्ता घटनाहरुमा कुनै – कुनै त यति साना र साधारण हुन्छन् कि तिनीहरुलाई सीमाना मान्न पनि गाह्रो हुन्छ । उदाहरणको लागि, चैत ३० गते र वैशाख १ गतेको बीचमा कुनै उल्लेखनीय भिन्नता हुँदैन । तर त्यो एक रातले दुई महिनाहरुलाई र सँगसँगै दुई वर्षहरुलाई पनि छुट्याउँछ । प्राचीनकालको अन्त्य र मध्यकालको आरम्भ तथा मध्यकालको अन्त्य र आधुनिक कालको आरम्भ हुने घटनाहरु पनि यस्तै साधारण नै थिए । तर कुनै घटनाहरु चाहिँ यति महान हुन्छन्, जसले उथल–पुथल ल्याउँछन्

र सिङ्गै युगलाई नै बदल्छन् । जस्तो कि कवि गोपालप्रसाद रिमालले लेखेका छन् – 'एक जुगमा एकदिन एकचोटि आउँछ , उलट–पलट उथल–पुथल हेरफेर ल्याउँछ ।'

सन् १९१७ को अक्टोबर २४ मा भएको रुसी क्रान्ति एउटा यस्तै महान घटना थियो । त्यो क्रान्तिले दुई विपरित सामाजिक व्यवस्थाहरुलाई छुट्याएको थियो र पूँजीवादी युगको अन्त्य र समाजवादी युगको आरम्भलाई संकेत गरेको थियो । महान अक्टोबर क्रान्तिले जुन युगको ढोका खोलेको थियो, त्यो हाम्रो वर्तमान युग हो ।

इतिहासमा धेरै क्रान्तिहरु भएका छन् तर अक्टोबर क्रान्तिको समकक्षी चाहिँ सन् १७८९ मा भएको फ्रान्सेली क्रान्ति मात्र देखिएको छ । यी दुई क्रान्तिहरुको बीचमा धेरै समानता छ । दुवै क्रान्तिहरु सुदृढ वैचारिक आधारमा उभिएका थिए । फ्रान्सेली क्रान्तिको पृष्ठभूमिमा अठारौं शताब्दीका फ्रान्सेली प्रबोधनकालीन दार्शनिकहरुको तर्कवाद थियो र अक्टोबर क्रान्तिको पृष्ठभूमिमा मार्क्सवाद थियो । त्यसकारण आफ्नो लक्ष्यप्रति क्रान्तिकारीहरुमा कुनै द्विविधा थिएन । एउटाको लक्ष्य थियो– सामन्तवादको अन्त्य र प्रजातन्त्रको स्थापना । अर्कोको लक्ष्य थियो– पूँजीवादको अन्त्य र समाजवादको स्थापना । यसरी यी क्रान्तिहरुले आफ्नो विगतसँग पूर्णरुपले सम्बन्धविच्छेद गरेका थिए ।

**क्रान्तिको परिवेश**

अक्टोबर समाजवादी क्रान्ति एउटा परिवेशमा भएको थियो, जुन मार्क्सवादको पूर्वशर्तभन्दा भिन्न थियो । यो परिवेशका दुई पक्षहरु थिए – आन्तरिक र बाह्य । आन्तरिक परिवेशको रुपमा रुसको आन्तरिक आर्थिक –सामाजिक अवस्था थियो र बाह्य परिवेशको रुपमा पूँजीवादको अन्तर्राष्ट्रिय स्वरुप थियो । रुसको आर्थिक अवस्था पश्चिमी

युरोपको तुलनामा धेरै पिछडिएको थियो । सन् १८६१ मा भूदास प्रथाको अन्त्य भए पनि किसानहरुको अवस्थामा कुनै परिवर्तन भएको थिएन । पूँजीवादको विकास प्रारम्भिक चरणमा थियो र उद्योग तथा कलकारखानाको स्थापना पनि धेरै कम मात्रामा भएको थियो । अर्थतन्त्रको प्रमुख आधार कृषि थियो । त्यसकारण मार्क्सवादको दृष्टिकोणबाट हेर्दा रुसको अर्थतन्त्र समाजवादी क्रान्तिको लागि तयार थिएन ।

त्यसैगरी बाहृय परिवेशको रुपमा रहेको पूँजीवादको अन्तर्राष्ट्रिय स्वरुप पनि बदलिएको थियो । पूँजीवाद प्रतिस्पर्धी चरणबाट एकाधिकारी चरणमा प्रवेश गरेको थियो । परिणामस्वरुप त्यो प्रतिस्पर्धाको कारण उत्पन्न हुने संकटबाट मुक्त भएको थियो । त्यसकारण केही हदसम्म क्रान्ति टरेको थियो ।

मार्क्सको समयमा पूँजीवाद प्रतिस्पर्धी चरणमा थियो र प्रतिस्पर्धाकै कारण पूँजीवाद संकटमा पर्दथ्यो । त्यही आधारमा मार्क्सले क्रान्तिको सिद्धान्त बनाएका थिए । तर सन् १९०० बाट पूँजीवाद एकधिकारी चरणमा प्रवेश गर्योप । त्यसरी बदलिएको नयाँ परिवेशको कारण समाजवादी क्रान्तिको मार्गमा समस्या उत्पन्न भएको थियो ।

**क्रान्तिको सूत्रधार**

यस्तो विषम परिवेशमा समाजवादी क्रान्ति सम्पन्न गर्नको लागि एकजना विशिष्ट व्यक्तिको आवश्यकता पर्दथ्यो । इतिहासको आवश्यकताले त्यस्तो व्यक्तिको जन्म पनि भयो । त्यो व्यक्ति थिए– भी. आई. लेनिन । वास्तवमा महान अक्टोबर समाजवादी क्रान्तिको सूत्रधार लेनिन थिए । उनको सुझबुझ , दूरदृष्टि र असाधारण परिश्रमबाटै त्यो क्रान्ति सम्भव भएको थियो ।

लेनिनको जन्म सन् १७७० मा रुसको एउटा सानो शहर सिम्बीस्कमा भएको थियो । उनी सानैदेखि कुशाग्र बुद्धि भएका व्यक्ति थिए । तर उनलाई राजनीतिमा लाग्न उत्प्रेरित गर्ने कुरा चाहिँ एउटा भयानक र दुःखद घटना थियो । सन् १८८७ मा उनका दाजुलाई जार अलेक्जेण्डर तृतीयको हत्या गर्ने षडयन्त्र गरेको अभियोगमा फाँसीमा झुण्ड्याएर मृत्युदण्ड दिइयो । लेनिनका दाजु अलेक्जेण्डर 'नरोदनया भोल्या ' नामको एउटा भूमिगत पार्टीमा सम्लग्न थिए । त्यो पार्टीले रुसमा जारको शासनलाई अन्त्य गरेर किसानको नेतृत्वमा समाजवाद ल्याउने लक्ष्य बनाएको थियो । त्यही क्रममा त्यसले जार अलेक्जेण्डर द्वितीयलाई मृत्युको मुखमा पुर्याेइसकेको थियो । त्यसपछि त्यसले सत्तामा आएका जार अलेक्जेण्डर तृतीयको हत्या गर्ने योजना बनाएको थियो, जसमा लेनिनका दाजुलगायत सम्पूर्ण योजनाकारहरु पक्राउ परे । उनीहरुलाई मृत्युदण्ड दिइयो । त्यो घटनाले किशोर लेनिनको मनमा ठूलो चोट लाग्यो । त्यसपछि उनले आफ्नो सम्पूर्ण जीवन क्रान्तिमा लगाउने र जार शासनलाई समूल नष्ट गर्ने प्रण गरे ।

त्यसको लागि उनले मार्क्सवादको गहन अध्ययन गरे । त्यसमा उनले क्रान्तिको सूत्र भेट्टाए । उनले के बुझे भने नरोदवादीहरुको लक्ष्य ठिक छ , तर तरीका मिलेन । जार शासनलाई अन्त्य गर्ने कुरा ठिक छ , तर त्यसको तरीका ठिक छैन । व्यक्तिहत्या, आतंकवाद र नायकवादबाट समस्याको वास्तविक समाधान हुँदैन । निश्चित सिद्धान्तको आधारमा जनआन्दोलनद्वारा सम्पन्न साजाजिक क्रान्तिबाट मात्र समस्याको वास्तविक समाधान हुन्छ । त्यसपछि उनी यस्तो क्रान्तिको मार्गमा अगाडि बढ्छन् ।

लेनिनले आफ्नो क्रान्तिको यात्रामा तीनवटा अवरोधहरुलाई पार गर्नुपरेको थियो । उनले तीनवटा वैचारिक धाराहरुको विरुद्ध कठिन संघर्ष गर्नुपरेको थियो । ती वैचारिक धाराहरु थिए – नरोदवाद, कानूनी मार्क्सवादर मेन्शेभिक धारा । यी

तीन धाराहरुमाथि विजय प्राप्त गरेपछि मात्र महान अक्टोबर समाजवादी क्रान्ति सुनिश्चित भएको थियो ।

नरोदवाद रुसको पहिलो वैचारिक धारा थियो , जसमा लेनिनका दाजु अलेक्जेण्डर पनि लागेका थिए । त्यो माक्र्सवादको घोर विरोधी थियो । त्यसले के निस्कर्ष निकालेको थियो भने रुसमा पूँजीवादको विकास भएको छैन, त्यसकारण मजदूर वर्गको नेतृत्वमा समाजवादी क्रान्ति हुँदैन , त्यसको सट्टा किसान वर्गको नेतृत्वमा किसानहरुको सामुदायिक खेतीलाई समाजवादमा बदल्न सकिन्छ । त्यसैगरी त्यसले व्यक्तिहत्या गरेर शासन बदल्न सकिन्छ भन्ने विश्वास गर्दथ्यो र बहुसंख्यक जनताको भूमिकालाई भन्दा एक – दुईजना बीरहरुको भूमिकालाई महत्व दिन्थ्यो । त्यति मात्र होइन , त्यसले रुसका क्रान्तिकारी युवाहरुको मन–मस्तिष्कमा ठूलो प्रभाव जमाएको थियो । त्यसकारण समाजवादी क्रान्तिको लागि मार्गप्रशस्त गर्नको लागि नरोदवादलाई समाप्त पार्नु आवश्यक थियो ।

नरोदवादको खण्डन गर्ने पहिलो कदम जी. बी. प्लेखानोभले उठाएका थिए । तर त्यसलाई पूर्णरुपले ध्वस्त पार्ने काम लेनिनले गरे । उनले त्यो काम आफ्ना दुई कृतिहरुद्वारा गरेका थिए – 'जनताका मित्र को हुन् ?' र 'रुसमा पूँजीवादको विकास' । लेनिनले 'जनताका मित्र को हुन् ?' मा नरोदवादीहरु जनताका असली मित्र होइनन् , जनताका असली मित्र त माक्र्सवादीहरु हुन् भन्ने कुरा सिद्ध गरेका थिए । त्यसैगरी अर्को कृति 'रुसमा पूँजीवादको विकास ' मा उनले रुसमा पूँजीवादको विकास भएको छैन र त्यसैकारण मजदूर वर्गको नेतृत्वमा समाजवादी क्रान्ति संभव छैन भन्ने नरोदवादीहरुको तर्कलाई खण्डन गर्दै रुसमा पूँजीवादको विकास भइरहेको छ र मजदूर वर्गको नेतृत्वमा समाजवादी क्रान्ति पनि संभव छ भन्ने कुरा तथ्यगत रुपमा सिद्ध गरेका थिए ।

लेनिनका यी दुई कृतिहरुको प्रकाशनपछि नरोदवादको नाम–निशान रहेन ।

समाजवादी क्रान्तिको मार्गमा दोस्रो अवरोध कानूनी मार्क्सवादी धारा थियो ।
कानूनी मार्क्सवादीहरु मार्क्सवादी नै थिए , तर उनीहरुको ज्ञान सतही थियो । उनीहर जार शासनद्वारा स्वीकृत वैधानिक पत्रिकाहरुमा आफ्ना विचारहरु प्रकाशित गर्दथे । त्यसकारण उनीहरुलाई कानूनी मार्क्सवादी भनिन्थ्यो । उनीहरु माक्र्सवादलाई पूँजीवादको हितमा लगाउन चाहन्थे । त्यसैगरी उनीहरु मजदूर वर्गको आन्दोलनलाई पूँजीवादीहरुको अनुकूल बनाउने र मार्क्सवादको क्रान्तिकारी तत्वलाई निकालेर त्यसलाई उदारवादी सिद्धान्तमा बदल्ने प्रयत्न गर्दथे । लेनिनले कानूनी मार्क्सवादीहरुको आदर्शवादी तथा उदारवादी पूँजीवादी स्वरुपको पनि भण्डाफोर गरिदिए ।

कानूनी मार्क्सवादीहरुजस्तै अर्कोथरी माक्र्सवादीहरु पनि थिए, जसलाई 'अर्थवादी' भनिन्थ्यो । उनीहरु मजदूर वर्गलाई आर्थिक संघर्षमै सीमित गर्न चाहन्थे । उनीहरुको दृष्टिमा राजनीतिक कार्य पूँजीवादी पार्टीहरुको जिम्मेवारी हो । यसरी उनीहरुले मजदूर वर्गलाई राजनीतिक भूमिकाबाट वञ्चित गर्न चाहेका थिए । अर्थवादीहरुको यस्तो दृष्टिकोण मार्क्सवादबाट पलायन थियो । त्यसलाई पनि लेनिनले पूर्णरुपमा ध्वस्त पारिदिए ।

तेस्रो र अन्तिम अवरोध मेन्शेभिक धारा थियो , जुन सवभन्दा बलियो र खतर्नाक थियो । किनभने त्यो रुसी सामाजिक –जनवादी पार्टीको बीचबाटै उत्पन्न भएको थियो । त्यसको अतिरिक्त मेन्शेभिक धारामा प्लेखानोभ , मार्तोभ तथा ट्रटस्कीजस्ता मार्क्सवादी विद्वानहरु थिए ।

वास्तवमा मेन्शेभिक धारा अवसरवादी तथा बुर्जुवा वर्गको सहयोगी थियो । त्यसले रुसमा समाजवादी क्रान्तिको कुनै भविष्य देख्दैनथ्यो । त्यो सर्वहारा

वर्गलाई एउटा स्वतन्त्र क्रान्तिकारी शक्ति होइन , पूँजीवादी वर्गको सहायक मात्र बनाउन चाहन्थ्यो ।

मेन्शेभिकको दृष्टिमा जारशासनको उन्मूलनपछि रुसमा धेरै समयसम्म पूँजीवादी सत्ता रहनुपर्दथ्यो, रुसमा समाजवादी क्रान्तिको लागि अवस्था तयार भइसकेको थिएन र मजदूरहरु आफ्नो हातमा सत्ता लिन र राज्य संचालन गर्न समर्थ भइसकेको थिएन । त्यसैगरी मेन्शेभिकलाई बदलिएको पूँजीवादको स्वरुपबारे पनि अत्तोपत्तो थिएन ।

लेनिनले आफ्नो नयाँ क्रान्तिकारी सिद्धान्तद्वारा मेन्शेभिक धारामाथि विजय प्राप्त गरेर समाजवादी क्रान्तिको मार्गप्रशस्त गरे ।

**नयाँ पार्टीको निर्माण**

पश्चिमी युरोपमा मार्क्सवादी पार्टीहरु त्यसवेला शान्तिपूर्ण संघर्षको लागि उपयुक्त हुनेगरी बनाइएका थिए । तर लेनिन एउटा क्रान्तिकारी पार्टी बनाउन चाहन्थे । त्यसको लागि नयाँ प्रकारको पार्टी हुनुपर्दथ्यो ।

लेनिनको दृष्टिकोणमा नयाँ क्रान्तिकारी पार्टी वैचारिक रुपमा स्पष्ट , देशव्यापी, क्रियाशील, संगठित र अन्तर्सम्बन्धित सञ्जालको आधारमा निर्माण हुनुपर्दथ्यो । त्यसप्रकारको सञ्जाल बनाउने विधिको रुपमा उनले एउटा पत्रिका निकाल्ने योजना बनाए । त्यो पत्रिका थियो – 'इस्क्रा' (झिल्को) । 'इस्क्रा' का दुईवटा भूमिकाहरु थिए– मुखपत्र र संगठक ।
लेनिनले परिकल्पना गरेको पार्टी क्रान्तिकारी कार्य सम्पन्न गर्ने पार्टी थियो , जुन पछि बोल्शेभिक पार्टीको रुपमा स्थापित भयो । त्यही पार्टीको नेतृत्वमा अक्टोबर समाजवादी क्रान्ति सम्पन्न भएको थियो । वास्तवमा एउटा सही मार्क्सवादी सर्वहारा पार्टीको निर्माण गर्ने श्रेय लेनिनलाई जान्छ ।

लेनिनद्वारा स्थापित बोल्शेभिक पार्टी सर्वहारा वर्गको अग्रदस्ता थियो , जसले क्रान्तिमा सर्वहारालाई सही नेतृत्व प्रदान गर्नसक्दथ्यो ।

**नयाँ सिद्धान्तको सूत्रपात**

लेनिनको लागि मार्क्सवादको मूल करा 'ठोस परिस्थितिको ठोस विश्लेषण ' थियो । त्यसकारण उनी कुनै सूत्रको मात्र पछि लाग्दैनथे । उनले तत्कालीन आन्तरिक र बाह्य परिवेशको सूक्ष्म अध्ययन तथा विश्लेषण गरेर समाजवादी क्रान्तिको लागि एउटा नयाँ निष्कर्ष निकाले । त्यो थियो एउटा देश वा केही देशहरुमा मात्र क्रान्ति हुन्छ भन्ने निष्कर्ष , जुन परम्परागत माक्र्सवादीहरुले निकाल्न सक्दैनथे । किनभने मार्क्सवादले विश्वभरि एकैपटक क्रान्ति हुन्छ भन्ने निष्कर्ष निकालेको थियो ।

तर त्यसको कारण मार्क्सवाद गलत हुनु थिएन , बरु पूँजीवादको स्वरुपमा परवर्तन हुनु थियो । मार्क्सवादले विश्वभरि (कम्तीमा पनि बेलायत , फ्रान्स र जर्मनीमा) एकैपटक क्रान्ति हुन्छ भन्ने निष्कर्ष पूँजीवादको प्रतिस्पर्धी चरणमा निकालेको थियो । तर सन् १९०० देखि पूँजीवाद एकाधिकारी चरणमा प्रवेश गरेको थियो । त्यसकारण अब विश्वभरि एकैपटक क्रान्ति हुनसक्दैनथ्यो । साम्राज्यवादको कडी कमजोर भएको स्थानमा मात्र क्रान्ति हुनसक्दथ्यो । यसरी साम्राज्यवादी युगमा क्रान्तिको नयाँ सिद्धान्त प्रवत्र्तन गरेर लेनिनले माक्र्सवादको थप विकास गरेका थिए । त्यसलाई पछि लेनिनवाद भनियो । लेनिनवादले नै वास्तवमा अक्टोबर समाजवादी क्रान्ति संभव बनाएको थियो ।

**क्रान्तिको आरम्भ**

रुसमा १९१७मा दुईवटा क्रान्तिहरु भएका थिए । एउटा क्रान्ति फेब्रुअरी २७ मा भएको थियो र अर्को अक्टोबर २४ मा भएको थियो । फेब्रुअरीमा भएको

क्रान्ति पूँजीवादी क्रान्ति थियो , जसले जारशासनलाई अन्त्य गरेको थियो र सत्ता पूँजीवादीहरुको हातमा हस्तान्तरण गरेको थियो । तर लेनिनको निष्कर्ष अर्कै थियो । उनले त्यो क्रान्तिमा सत्ता मजदूर –किसान वर्गको हातमा आउँछ भन्ने सोचेका थिए । परिणाम त्यस्तो नआएपछि उनले क्रान्तिलाई अपूर्ण ठाने । त्यसकारण उनले अब समाजवादी क्रान्तिमा जानुपर्छ भन्ने धरणा अगाडि ल्याए र त्यसको तयारीमा लागे ।

सन् १९१७ को अप्रिलमा लेनिन विदेशबाट रुस फर्किए र प्रसिद्ध अप्रिल थेसिस लेखे । त्यसमा उनले समाजवादी क्रान्तिको मार्गचित्र प्रस्तुत गरे ।

फेब्रुअरी क्रान्तिपछि रुसमा द्वैतसत्ताको अवस्था सृजना भएको थियो । अस्थायी संयुक्त सरकारसँग वैधानिक सत्ता थियो र सोभियतहरुसँग अवैधानिक सत्ता थियो । लेनिनको दृष्टिमा सोभियतहरु भावी समाजवादी सत्ताका भ्रूणहरु थिए र तिनीहरुसँग रहेको अवैधानिक सत्ता नै वास्तविक जनसत्ता थियो । त्यसकारण उनी सोभियतहरुमा आफ्नो पार्टीलाई सुदृढ बनाउनतिर लागे । जब सोभियतहरुमा बोल्शेभिक पार्टीको बहुमत भयो , त्यसपछि उनले 'सम्पुर्ण सत्ता सोभियतलाई सुम्प !' भन्ने नारा अगाडि सारे ।

सोभियतहरु फेब्रुअरी क्रान्तिको बेला स्वतःस्पू mर्त रुपले उत्पन्न जनसत्ताहरु थिए । त्यस्ता सोभियतहरु तीन प्रकारका थिए– मजदूर सोभियत, किसान सोभियत र सैनिक सोभियत । तर आरम्भमा सोभियतहरुमा मेन्शेभिक र अन्य पार्टीहरुको बहुमत थियो , जसले तिनीहरुको महत्वलाई बुझ् mदैनथे । त्यसकारण लेनिनले सोभियतहरुलाई बोल्शेभिक पार्टीको पक्षमा ल्याउन आफ्नो सम्पूर्ण ध्यान केन्द्रित गरे ।

त्यसैगरी लेनिनको कुशल निर्देशनमा बोल्शेभिक पार्टीले अस्थायी संयुक्त सरकारको अर्थहीनताबारे जनतालाई सुसूचित पार्ने र मजदूरहरु तथा किसानहरुलाई समाजवादी क्रान्तिको लागि तयार पार्ने कार्य तीव्र गतिमा अगाडि बढायो ।

र लेनिनको नेतृत्वमा बोल्शेभिक पार्टीले शान्तिपूर्ण ढंगबाट समाजवादी क्रान्तिको तयारी गर्दागर्दै जुलाइ ३ मा अस्थायी संयुक्त सरकारले दमनको नीति लियो र जुलाइ ५ माबोल्शेभिक पार्टीको राजनीतिक गतिविधिमाथि प्रतिबन्ध लगायो । त्यसपछि लेनिन र अन्य बोल्शेभिक नेताहरु भूमिगत हुनुपर्यो । अब सशस्त्र विद्रोहबाट मात्र सर्वहारा वर्गले सत्ता आफ्नो हातमा लिनसक्ने अवस्था सृजना भयो । त्यसकारण लेनिनले सशस्त्र विद्रोहको कार्यक्रम बनाए र बोल्शेभिक पार्टी पूर्णरुपले सशस्त्र विद्रोहको तयारीमा लाग्यो ।

लेनिनले सेप्टेम्बरदेखि अक्टोबरसम्म सशस्त्र विद्रोह गर्ने योजना बनाएका थिए । त्यसअनुसार बोल्शेभिक पार्टीले सशस्त्र विद्रोहको तयारीलाई तीव्र बनायो ।
अक्टोबर १० मा बोल्शेभिक पर्टीको केन्द्रीय समितिको ऐतिहासिक बैठक बस्यो र केही दिनमा सशस्त्र विद्रोह शुरु गर्ने निर्णय गरियो । त्यसैगरी अक्टोबर १६ मा सशस्त्र विद्रोहको संचालन गर्नको लागि पार्टी केन्द्र निर्माण गरियो , जसको प्रमुख जोसेफ स्टालिन थिए ।

स्थायी संयुक्त सरकारले विद्रोहलाई दबाउने अवसर नपाओस् भन्ने उद्देश्यले तोकिएको मितिभन्दा पहिले विद्रोह शुरु गर्ने निर्णय गरिएको थियो ।अन्ततः अक्टोबर २४ को दिन क्रान्तिकारी सेनाले शिशिर दरवारमाथि आक्रमण गर्यो र त्यसलाई नियन्त्रणमा लियो , जहाँ अस्थायी संयुक्त सरकारका प्रतिनिधिहरु बसेका थिए । त्यसको भोलिपल्ट अक्टोबर २५ मा बोल्शेभिक पार्टीले एउटा घोषणापत्र जारी गर्यो , जसमा अस्थायी संयुक्त सरकार अपदस्त भएको र सोभियतले राज्यसत्ता आफ्ने हातमा लिएको घोषणा गरिएको

थियो । यसरी महान अक्टोबर समाजवादी क्रान्ति सम्पन्न भएको थियो ।

**अक्टोबर क्रान्तिको परिणाम**

रुसमा भएको अक्टोबर समाजवादी क्रान्तिलाई एउटा महान ऐतिहासिक घटनाको रुपमा मूल्यांकन गरिएको छ । त्यो क्रान्तिबाट मुख्य रुपमा तीनवटा परिणामहरु आएका थिए ।
पहिलो परिणाम थियो , समाजवादी व्यवस्थाको स्थापना । अक्टोबर क्रान्ति भएपछि विश्वको ६ भागको १ भागमा समाजवादी व्यवस्था स्थापित भएको थियो र 'सोभियत संघ ' नामको एउटा विशाल देश बनेको थियो ।

अक्टोबर क्रान्ति लेनिनवादको विजय थियो । त्यो लेनिनवादद्वारा निर्देशित बोल्शेभिकहरुको लामो , दृढ तथा कठिन परिश्रम र बीरतापूर्ण संघर्षको परिणाम थियो । र , यदि क्रान्तिकारी मार्क्सवादी पार्टीले नेतृत्व गर्यो भने मजदूरहरु र किसानहरु एउटा महान क्रान्तिकारी शक्ति बन्नसक्छन् र उनीहरुले एउटा नयाँ समाजको निर्माण गर्नसक्छन् भन्ने कुराको प्रत्यक्ष प्रमाण थियो ।

अक्टोबर क्रान्तिले रुसमा पूँजीवादी व्यवस्थाको अन्त्य गरेको थियो , मानव इतिहासमा पहिलो पटक सर्वहारा अधिनायकव लागु गरेको थियो र मजदूरहरु तथा किसानहरुको राज्यसत्ता स्थापित गरेको थियो । त्यो क्रान्ति विशुद्ध राजनीतिक परिवर्तन मात्र थिएन , त्यो त जनताको जीवनमा सर्वाङ्गीण परिवर्तनको सूचक थियो । त्यो क्रान्तिले देशको क्रान्तिकारी पुनर्निर्माण गरेर नयाँ समाजवादी समाजको सृजना आरम्भ गरेको थियो ।

दोस्रो परिणाम थियो , विश्वभरि सर्वहारा क्रान्तिको विस्तार । अक्टोबर क्रान्ति भएपछि विश्वभरि त्यसको प्रभाव पर्नथाल्यो , विश्वभरि सर्वहारा क्रान्तिको लहर चल्नथाल्यो । सर्वप्रथम पूर्वी युरोपका देशहरुमा समाजवादी सत्ता स्थापना भए । त्यसपछि चीन , कोरिया, क्युबा, भियतनाम, कम्बोडिया, आदि देशहरुमा सर्वहारावर्गीय क्रान्तिहरु भए । त्यसैगरी त्यो क्रान्तिको प्रेरणाबाट सर्वहारा आन्दोलनहरु पनि विश्वव्यापी रुपमा चल्नथाले । परिणामस्वरुप विश्व दुई धारामा विभाजित भयो – पूँजीवादी धारा र समाजवादी धारा ।

तेस्रो परिणाम थियो, पूँजीवादी व्यवस्थामा सुधार । अक्टोबर क्रान्तिपछि विश्वमा आएको समाजवादको लहरले पूँजीवाद संकटमा पर्यो । अब त्यसले थोरै मात्र भए पनि लोककल्याणकारी काम नगरी आफूलाई बचाउन नसक्ने भयो । त्यसकारण त्यसले आफ्नो शोषणकारी , अमानवीय तथा व्यक्तिवादी चरित्रलाई परिमार्जन गरेर समाजको हितमा ढाल्ने प्रयत्न गर्यो । त्यसैगरी त्यसले विशुद्ध पूँजीवादको सट्टा 'प्रजातान्त्रिक समाजवाद ' नाम दिएर भ्रम छर्नथाल्यो ।

पूँजीवादले समाजवादका धेरै तत्वहरु लिएर आपूmलाई परिमार्जन गरेको छ । तर पूँजीवादको चरित्रअनुसार यो सुधार अस्थायी मात्र हो ।

**अक्टोबर क्रान्तिको मूल्यांकन**

वर्तमान युगको लगि महान अक्टोबर समाजवादी क्रान्तिको ठूलो महत्व छ । किनभने त्यसले वर्तमान युगलाई परिभाषित गरेको थियो । त्यसबाट मानव समाजमा जुन परिवर्तनहरु भए , तिनीहरु वर्तमान युगका विशेषता र गरिमा हुन् । अक्टोबर क्रान्तिले नै सर्वप्रथम पूँजीवादभन्दा भिन्न र पूँजीवादी व्यवस्थाको विकल्पमा नयाँ सामाजिक व्यवस्थालाई अस्तित्वमा ल्याएको थियो ।

तर अक्टोबर क्रान्तिमा केही गल्ती पनि भएको थियो । त्यो गल्ती थियो, राज्यलाई प्रमुख बनाउनु । त्यसले सम्पूर्ण सम्पत्तिको स्वामित्व र सम्पूर्ण शासकीय अधिकार राज्यलाई सुम्पेको थियो ।

परिणामस्वरुप राज्यनियन्त्रित समाजवादको विकास भयो, जुन समाजवादको नकारात्मक पक्ष बन्यो ।

काम गर्दा गल्ती हुनसक्छ, यो स्वाभाविक कुरा हो । जस्तो कि स्वयं लेनिन भन्छन् –'काम गर्ने मानिसले गल्ती गर्छ । गल्ती त त्यसले मात्र गर्दैन, जसले केही काम गर्दैन । तर फेरि त्यो मानिस मात्र अगाडि बढ्न सक्छ , जसले पुरानो गल्तीलाई दोहोर्याउँदैन ।'

हो, त्यसकारण यदि हामी पनि अगाडि बढ्न चाहन्छौं भने, हामीले पुरानो गल्तीलाई दोहोर्याउनु हुँदैन । महान अक्टोबर समाजवादी क्रान्तिबाट हामीले लिने एउटा शिक्षा यही हो ।
त्यसैगरी लेनिनको अर्को कथन पनि मननयोग्य छ । उनले भनेका थिए – 'मार्क्सवादले त्यो विज्ञानको जगमात्र हालेको छ , जसलाई, यदि समाजवादीहरु जीवनमा पछि पर्न चाहँदैनन् भने , चौतर्फी विकास गर्नुपर्छ ।'

अक्टोबर क्रान्तिले पनि समाजवादको जगमात्र हालेको छ । यदि हामी जीवनमा पछि पर्न चाहँदैनौं भने, यसलाई चौतर्फी विकास गर्नुपर्छ । यदि अक्टोबर क्रान्तिबाट स्थापित समाजवादलाई पूर्ण मानियो भने , सोभियत संघ ढलेपछि समाजवाद नै ढल्यो भन्ने निष्कर्ष निस्किन्छ, जुन पूँजीवादीहरु र संशोधनवादीहरुले निकालेका छन् । त्यसकारण हामीले यस्तो सोच्ने गल्ती गर्नुहुँदैन । यो पनि अक्टोबर क्रान्तिबाट हामीले लिने शिक्षा हो ।

अक्टोबर क्रान्तिको अर्को महत्वपूर्ण शिक्षा के हो भने एउटै देशमा पनि क्रान्ति हुनसक्छ । त्यसकारण क्रान्तिकारीहरुले परिस्थिति तयार हुनासाथ क्रान्ति गर्ने प्रयत्न गर्नुपर्छ ।
त्यसैगरी अक्टोबर क्रान्तिबाट हामीले लिने अन्तिम महत्वपूर्ण शिक्षा यो हो – पूँजीवादी वर्गको पक्षपोषक बनेर मेन्शेभिकहरु आउँछदछन् र तिनीहरुलाई परास्त गर्दै क्रान्तिको मार्गमा अगाडि बढ्नुपर्छ ।अन्त्यमा , महान अक्टोबर समाजवादी क्रान्तिको शतवार्षिकीको उपलक्ष्यमा हामी यिनै शिक्षाहरुलाई मनन गर्दै अगाडि बढ्ने प्रतिज्ञा गरौं !

**स्रोत:आधारशीलाको प्रकाशन 'प्रस्थान'**

# सन्दर्भ लेनिन जयन्तीः लेनिनका शिक्षा आत्मसात गरौं

• गोपाल ढुंगेल, बामपन्थी लेखक तथा साहित्यकार

*“सालिक ढाल्दैमा के हुन्छ , मेरो मनभित्रको लेनिनको सालिक कहिल्यै ढाल्न सक्ने छैनौ ”– पारिजात*

लेनिनको नाम भ्लादिमिर इल्यिच उल्यानोभ थियो । उनी भोल्गा किनारस्थित सिम्ब्रीस्क शहरमा सन् १८७० अप्रिल २२ मा आमा मारिया अलेक्सान्द्रभ्नाको कोखबाट यस धर्तिमा आएका थिए । आमा मारिया अलेक्सान्द्रभ्ना डाक्टरकि छोरी थिइन । उनको साहित्य र संगितप्रती अत्यन्तै सौखिन , दृढ स्वभाव , बुद्धिमान र दृढ़ निश्चयी कि थिइन । धेरै भाषाहरुको उनमा ज्ञान थियो । लेनिनका पिता पनि त्यसबेलाका प्रगतिशिल विचार राख्ने व्यक्ति थिए । उनले भोल्गा किनारमा रहेका गाउँहरुमा शिक्षादीक्षाको लागि महत्वपूर्ण योगदान गरेका थिए । उनीहरुका छ सन्तान भए । क्रमशः स्आन्ना , अलेकज्यान्डर, भ्लादिमिर, ओल्गा दमित्री र मारिया । पछि गएर उल्यानोभ परिवारका जम्मै सन्तान क्रान्तिकारी कार्यमा जुटे । करिब तीस बर्षपछि मात्र भ्लादिमिर इल्यिच उल्यानोभबाट उनी लेनिन भए । भूमिगत कालमा सन् १९०१ देखि आफ्नो लेखहरु “इस्क्रा“(झिल्को) पत्रिकामार्फत लेनिन नामबाट छपाउन थाले, जुन साइबेरियाली एक नदी लेनाको नाम थियो । सोहि नामबाट उनी प्रभावित भएका थिए । केटाकेटी छंदैदेखि नै लेनिन साहसी, प्रफुल्ल र ठट्यौली मिजासका थिए । उनी पौडी खेल्न र स्केटिङ गर्न औधी मन पराउंथे । असाधारण प्रतिभाका धनी लेनिन कक्षामा सधैं प्रथम हुन्थे । सानै उमेरमा उनले पुश्किन , लेर्मन्तेभ, गोगल, तुर्गेनेभ र टाल्सटाय आदिका पुस्तकहरू अध्ययन गरिसकेका थिए । त्यसबेलादेखि नै प्रतिबन्धित क्रान्तिकारी डेमोक्रेटहरु बेलेन्स्की , गेर्चेन, चेर्निसेभ्स्की, द्रोब्योल्युवोभर पिसारे आदि जस्ताका कृतिहरु पढ्न भ्याइसकेका थिए । तीमध्ये उनलाई नेर्नीसेभ्कीको उपन्यास “के गर्ने” ? ले बढी प्रभावित पारेको थियोे ।

सन् १८८६ मा लेनिनका पिताको मृत्युपछि घरको सारा बोझ उनको आमा मारियामा पर्न गयो । दई अलेक्ज्याण्डरलाई जारको हत्याको षड्यन्त्र रचेको आरोपमा फांसी दिइयो, तिनै दाजुले नै लेनिनलाई उच्च शिक्षामा अध्ययन गर्न मद्दत गर्दै थिए । उच्छ योग्यताकोसाथ स्नातक बन्नमा लेनिनले १८८७ मा कजान विश्वविद्यालय कानून विभागमा प्रवेश गरे तर छिट्टै नै क्रान्तिकारी प्रदर्शनमा भाग लिएको कारण उनी निष्कासित भए । सन् १८८९ मा उनी समारा गइरहेको बेला उनले स्थानिय मार्क्सवादीहरुको एक मण्डली संगठन स्थापना गरे । सन् १८९१ मा सहरुट पिटर्सबर्ग विश्वविद्यालयबाट कानून परिक्षामा उपाधि प्राप्त गरेर त्यहिं समारामा नै वकालत गर्न थाले । १८९३ देखि सहरुट पिटर्सबर्गलाई उनले आफ्नो निवासस्थान बनाए त्यसपछि उनी त्यहांका मार्क्सवादीहरुका बहुमान्य नेता बने । उनको भेट त्यहिं सुश्री क्रुप्सकायासंग भयो , जो श्रमिकहरुमा क्रान्तिको प्रचार गर्न संलग्न थिइन । त्यसपछि त लेनिनको क्रान्तिकारी संघर्षमा जीवन पर्यन्त उनको घनिष्ठ सहयोग प्राप्त भइरह्यो । सन् १८९५ मा लेनिन जेल परे र १८९७ मा उनलाई तीन बर्षका लागी पूर्वी साइबेरिया पठाइयो । केही समयपछि क्रुप्सकाया पनि निर्वासित भइ त्यहिं आइपुगिन । केहि समयपछि उनीहरुको बिवाह भयो । निर्वासित जीवनमैं उनले तिनवटा पुस्तक लेखे । तीमध्ये “रुसमा पुँजीवादको विकास” वर्ग विश्लेषणमा आधारित छ ।

निर्वासनबाट फर्केपछि सन् १९०० मा “इस्क्रा” मा प्रकाशन गरे । १९०२ मा नै “हामीले के गर्नु छ ? “शिर्षकको पुस्तक तयार पारे , जसको जोड केमा थियो भने, यस्तो अनुशासित दलको हातमा क्रान्तिको नेतृत्व

हुनुपर्छ जसको काम नै क्रान्तिको हितमा होस । सन् १९१६ मा लेनिनले "साम्राज्यवाद" पूँजीवादी विकासको अन्तिम र मरणासन्न अवस्था हो भनेर विश्लेषण गरे । अब साम्राज्यवादको विनाश अनिवार्य छ । फेब्रुअरी – मार्चमा लेनिन पेट्रोगार्ड फर्किए । १९१७ अप्रिल ३ देखि रुसमा क्रान्तिको सुरुवात भयो । उनले क्रान्तिको व्यापक तयारी गरे , श्रमिक तथा सैनिकहरुको बहुसंख्यक सभाहरुमा भाषण गरि राजनैतिक चेतना बढाउने कार्य गरे । जुलाई १९१७ मा क्रान्ति विरोधीहरुको हातमा अस्थायी सरकार गरेकोले उनी भूमिगत हुन बाध्य भए । केरेन्स्कीको अस्थायी सरकारले लेनिन र बोल्सेविकहरु विरुद्ध घृणा तथा दुष्टतापूर्ण रवैया देखायो । लेनिन लगायत धेरै नेताहरुलाई पक्राउ पुर्जी काट्यो । उनले करिब साढे तीन महिना भूमिगत भएर काम गरे । त्यसैबेला उनले "राज्य र क्रान्ति" भन्ने महत्वपूर्ण पुस्तक प्रकाशित गरे । सो पुस्तकमा राज्यसत्तामा सर्वहारा अधिनायकत्व किन आवश्यक छ ? यसको ऐतिहासिक भूमिका बारे खुलस्त लेखे । समाजवाद अनि साम्यवाद क्रान्तिका दुई खुड्किलाका रुपमा व्याख्या गरे , क्रान्तिमा कम्युनिस्ट पार्टीको भूमिका बारे विचार प्रकट गरे जसलेगर्दा जनता बोल्सेविकहरुको पक्षमा ढल्कन थाले । लेनिनले रुसको अस्थायी सरकारले पूँजीपति तथा बिर्तावालहरुको हितमा काम गरेको कुरा प्रष्ट पार्दै उसलाई असहयोग गर्न आम जनतालाई अपिल गरे । गुप्त रुपबाटै उनले संगठन र क्रान्तिको निर्देशनहरु जारी गर्दै रहे , उनको स्वागतमा भेला भएका लाल झण्डा बोकेका हजारौं श्रमिकहरु र नौसेना भेला भएका थिए । त्यही अवसरमा लेनिनले सर्वहारा क्रान्ति र सोभियत सत्ता स्थापनाको लागि संघर्ष गर्न जोडदार अपिल गरे । उनले "संपूर्ण सत्ता सोभियतलाई" भन्ने नारा अघि सारे । सोभियत सत्ताले मात्र आम जनतालाई शान्ति, किसानहरुलाई जमिन र भोकाहरुलाई रोटी दिन सक्छ उनले भने । बिर्ताहरु बिना मुआवजा जफत, समस्त जमिनको राष्ट्रियकरण गरिनुपर्छ, सम्पूर्ण कलकारखाना सामाजिक उत्पादन तथा वाणिज्य व्यवस्थामाथि मजदुर नियन्त्रण कायम हुनुपर्छ भन्ने प्रस्ताव राखे । त्यसपछि उनले बोल्सेविकको ठाउँमा कम्युनिस्ट पार्टी नाम राखे ।

सोभियतहरुको पुनःनिर्वाचनमा बोल्सेविकहरुले बहुमत प्राप्त गरे । उनीहरुले पेट्रोगार्ड र मास्कोका सोभियतहरुमाथि आफ्नो नियन्त्रण कायम गरे । सोभियतहरुको प्रतिष्ठा बढ्यो र उनीहरू फेरि प्रमुख शक्तिको रुपमा देखा परे । विद्रोहको निम्ति लेनिनले विस्तृत योजना तयार गरे । विद्रोहको तयारी गर्दै देशमा सुनियोजित क्रियाकलाप सुरु भयो । २४ अक्टोबरका दिन बेलुकी आफ्नो जीवनलाई खतरा मोल्दै उनी पेट्रोगार्डका सुनसान सडक हुँदै लेनिन स्मोलिन आए र विद्रोहको प्रत्यक्ष नेतृत्व गर्न थाले । भोलिपल्ट २५ अक्टोबरमा पेट्रोगार्डका टेलिफिन , टेलिग्राफ तथा रेडियो स्टेशनका कार्यालयहरु, नेभा नदीका पुलहरु, रेल स्टेशन र राजधानीका अन्य प्रमुख अड्डाहरुमाथि विद्रोही मजदुर, सिपाही र नौसैनिकहरुले कब्जा गरे । त्यसैगरी क्रान्तिकारी सेनाले अस्थायी सरकारको मन्त्रीहरु बस्ने "शिशिरप्रासाद" कब्जा गरे । त्यसपछि कम्युनिस्ट पार्टीले अस्थायी सरकार अपदस्थ भएको घोषणा गर्यो र लगतै रुसमा लेनिनको नेतृत्वमा सर्वहारावर्गको पहिलो सरकार गठन भयो।जसले समाजवादी शासन प्रणालीको स्थापना र विकासकोलागी सर्वहारा वर्गको अधिनायकत्व भएको समाजवादी राज्यसत्ताको सुरुवात गर्यो । यो क्रान्ति नै अक्टोबर क्रान्ति भनेर चिनिन्छ ।

सन् १९१८ मा उनलाई गोली लागेको हुनाले उनको स्वास्थ स्थिति बिग्रदै जान्छ , त्यो घाउले १९२१ को जाडोमा झन ठूलो असर देखाउंछ , १९२४ सम्ममा आइपुग्दा कामको चापले स्वास्थ्य झन नराम्रोसंग बिग्रन थाल्छ । सोही बर्ष ग्लुखोभ कारखानाका मजदुर प्रतिनिधिहरुले गोर्की शहरमा भेट गरेर लेनिनलाई केही उपहार र शुभकामना पत्रहरु दिए , प्रतिनिधि मण्डल फर्केपछि लेनिनले आधारातसम्म शुभकामना बारम्बार पढेर बसे । यो भेट नै उनको मजदुरहरुसंगको अन्तिम भेट थियो । सन् १९२४ जनवरी २१ मा बेलुकी ६ बजेर ५० मिनेट जांदा विश्व सर्वहारा आन्दोलनका महान नेता र मार्क्सवादका सिर्जनात्मक प्रयोगकर्ता महान लेनिनले यो संसारबाट बिदा लिए ।

१) पुँजीवादको अन्तिम चरण साम्राज्यवाद जुन मरणासन्न अवस्थामा छ । अबको युग भनेको सर्वहारा क्रान्तिको युग हो भनेर दिएको विश्लेषण आज पनि उत्तिकै महत्व राख्दछ , जब पूँजीवाद साम्राज्यवादको अन्तिम अवस्थामा पुग्छ । लेनिनले मार्क्सवाद्को रक्षा, विकास र आफ्नै जीवनको अवधिमैं लागू गरेर देखाए । एक देशमा मात्रै पनि क्रान्ति सफल हुन सक्छ भन्ने उदाहरण विश्वलाई दिए ।

२) मार्क्सको अवधारणाको राम्रो प्रयोग गरे सर्वहारा अधिनायकत्व, समाजवाद स्थापनार्थ श्रमजीवी अधिनयकत्व अनिवार्य र अपरिहार्य हुन्छ , जसले समाजलाई समाजवादको बाटोमा अगाडि बढ्न मजदुर वर्गको मुख्य हतियार हो । जहाँ मजदुर अधिनाकत्व कायम हुंदैन । अन्ततः पूँजीपतीहरुले नै फेरि सत्ता लिन्छन भन्ने कुरा रुस चीन लगायत तमाम देशका कम्युनिस्टहरुले भोग्दै आएको सर्व विदितै छ । सर्वहारा अधिनायकत्व मार्क्सवादको प्राण हो । मेरुदण्ड नै हो ।

३) लेनिनले पार्टी संगठनलाई क्रान्ति गर्न लायक क्रान्तिकारी पार्टी निर्माणको सवालमा पार्टीका हरेक सदस्यले पार्टी कार्यक्रममा सहमत हुने र नियमित योगदानले मात्र हुंदैन । हरेक सदस्यले कुनै न कुनै पार्टी संगठनको अनुशासनमा रहि पार्टि काम पनि गर्नु पर्दछ । उनले पार्टिमा जनवादी केन्द्रीयता लागू गरे , सामुहिक निर्णय र व्यक्तिगत जिम्मेवारी हरेक सदस्यले पुरा गर्नु पर्ने,यसैलाई संगठनात्मक सिद्धान्तको रूपमा स्थपित गरे , जसको कारण पार्टिमा बलियो एकता देखिनुको साथै सदस्यको व्यक्तिगत पहल पनि देखिन आउँछ ।

४) लेनिनले मार्क्स एंगेल्सको मूल अवधारणालाई जस्ताको तस्तै राख्न आफ्नो प्रशिद्ध पुस्तक "राज्य र क्रान्ति" मा भनेका छन ,"मजदुर (श्रमजीवी) वर्गले पुँजिपतीहरुको राज्य संयन्त्रलाई क्रान्ति पछि जस्ताको तस्तै प्रयोग गर्न हुन्न त्यसलाई चकनाचुर पारेर मात्र त्यसको ठाउँमा एक बिलकुलै नयाँ राज्य संयन्त्र स्थापना गर्न सक्तछन ।

५) अर्को महत्वपूर्ण शिक्षा वर्ग संघर्षलाई मुख्य कडाइकासाथ लागू गर्नु ,जबसम्म बोल्सेविक पार्टिले साम्राज्यवादी र सोभियत संघ भित्रका दलालहरु विरुद्ध वर्ग संघर्षलाई अघि बढाएको थियो त्यतिबेलासम्म समाजवादको प्रगति भएको देखिन्छ । पचासको दशकमा जब ख्रुश्चोभले अब वर्गसंघर्ष छैन भनेर प्रचार गर्न थाल्यो त्यहिंबाट पतनको प्रक्रिया सुरु भएको देखिन्छ । लेनिनवदसंगको विस्वासघात नै पुँजीवादको पुनस्स्थापना र अन्तमा सोभियत संघको विघटन सुरु भएको सर्व विदितै छ ।

अन्तमा लेनिनको शिक्षाले अरु थुप्रै महत्वपूर्ण बिषयहरुमा सर्वहारा वर्गलाई ज्ञानको नयाँ उचाई हासिल गर्न मद्दत गरे पनि अहिलेको मुख्य आवश्यकता भनेको नयाँ ढंगले अब फेरि सबै देशका कम्युनिस्ट पार्टिहरुले सर्वहारा क्रान्तिको दोश्रो बिगुल फुक्नु छ ,जसले साम्राज्यवादीहरुको साङ्लोको सबभन्दा कमजोर ठाउँमा प्रहार सुरु गर्न सकोस।लेनिनवादलाई तोड मरोड गरेर पेश गर्ने,जनवादी केन्द्रीयता नमान्ने ,वर्ग संघर्ष नदेख्ने वा आवश्यकता छैन भन्ने संसदिय बाटोबाट समाजवाद देख्ने,बुर्जुवा ब्यवस्थालाई जस्ताको तस्तै प्रयोग गर्ने,झिनामसिना सुधारका कार्यक्रम घोषणा गरि आम श्रमजीवी जनतालाई गुमराह पार्न खोज्ने जाली ,प्रतिक्रियावादी,गद्दार ,छद्मभेषीहरुको भण्डाफोर र नकाब च्यात्नु आजका सच्चा कम्युनिस्टहरुको कांधमा झन जिम्मेवारी टड्कारो रुपमा थपिएको छ ,यिनै गद्दारहरुको कारण क्रान्ति केही पछि धकेलिए पनि लेनिनको शिक्षाको महत्व र आवस्यकता झन बढी देखिंदै गएको छ । लेनिनलाई गरिने सम्मान नै दलाल संसदिय व्यवस्थालाई पल्टाएर समाजवादको दिशामा सच्चा कम्युनिस्टहरुले कांधमा कांध र कदममा कदम मिलाएर हिंड्नु नै आजको आवश्यकता हो ।...कमरेड लेनिन–जिन्दावाद, दलाल नोकरशाह पुँजीवाद –मुर्दावाद...विश्वका मजदुर–क हौं ।

# बहसका लागि: समाजवादको यात्रा

• रमेश सुनुवार

**नयाँ समाजले समाजवादबारे बहस उठाउँदै आएको छ । मानवजातिले देखेको समाजवादको सपना अब साकार हुँदैछ । विज्ञान-प्रविधिमार्फत प्रचुर उत्पादनले त्यो सपनालाई संभव तुल्याइदिएको छ । तर यसका लागि समाजवादीहरुको विश्वव्यापी तयारी र सहकार्यबिना यो संभव हुँदैन । वर्तमान युगमा समाजवादको मोडल के हुनसक्छ ? यो विषयमा महान बहस आवश्यक छ । विश्वभरिका समाजवादीहरु एकीकृत भएर यो बहसमा जुट्नुपर्ने आवश्यकता छ । बहसका लागि उपयोगी ठानेर हामीले समाजवादी अध्ययता तथा लेखक रमेश सुनुवारले लेख्नुभएको पुस्तक *समाजवादको यात्रा* यहाँ प्रस्तुत गरेका छौं-सम्पादक ।**

## परिचय

मानव समाज परिवर्तनशील छ । यो निरन्तर निम्नावस्थाबाट उच्चावस्थातिर अग्रसर हुन्छ । हरेक सामाजिक व्यवस्थाले यो परिवर्तनको , यो विकासप्रक्रियाको एउटा चरणको प्रतिनिधित्व गर्दछ । त्यसकारण हरेक सामाजिक व्यवस्था आफूभन्दा पहिलेको सामाजिक व्यवस्थाको तुलनामा उत्कृष्ट हुन्छ, तर आफूभन्दा पछि आउने सामाजिक व्यवस्थाको तुलनामा निकृष्ट हुन्छ । समाजविकासको क्रममा हरेक सामाजिक व्यवस्था आवश्यक हुन्छ । तर आफ्नो अवधि पूरा भएपछि त्यसले अर्को सामाजिक व्यवस्थाको लागि स्थान छोड्नुपर्दछ । हरेक सामाजिक व्यवस्था ऐतिहासिक आवश्यकताले आउँदछ र ऐतिहासिक आवश्यकताले नै जान्छ । मानव समाजको इतिहासमा अहिलेसम्म चारवटा सामाजिक व्यवस्थाहरु आइसकेका छन् । र , यिनीहरुले मानव समाजको विकास वर्तमान स्तरमा आउनको लागि आवश्यक विभिन्न चरणहरुको प्रतिनिधित्व गरेका छन् ।

यिनीहरुमध्ये प्रथम आदिम साम्यवाद थियो । त्यसले मानव समाजलाई जंगली अवस्थाबाट सभ्यातामा प्रवेश गरायो । त्यसपछि दास व्यवस्था आयो । दास व्यवस्थाले मानव श्रमलाई समाजको आधार बनायो ।त्यसले मानव सभ्यताका सम्पूर्ण विषयहरुको जग हालेको थियो । त्यही जगमा उभिएर त्यसपछि प्रगति भएको थियो , आधुनिक सभ्यताको निर्माण सम्भव भएको थियो ।

"दास व्यवस्थाकै कारण पहिलो पटक अपेक्षाकृत ठूलो मात्रामा उद्योग र कृषिको बीचमा श्रम –विभाजन संभव भयो, र त्यसको साथसाथै युनानको सभ्यताको विकास हुन सक्यो , जसमा प्राचीन संसार प्रस्फुटित भएको थियो । दास व्यवस्था नभएको भए, युनानी राज्य पनि हुँदैनथियो; युनानी कला र विज्ञान पनि हुँदैनथिए । दास व्यवस्था नभएको भए , रोमन साम्राज्य कहिल्यै पनि असितत्वमा आउँदैनथियो । र , यदि युनानी कला तथा रोमन साम्राज्यले त्यसको जग नहालेको भए , आधुनिक युरोप पनि हुँदैनथियो । हामीले यो कहिल्यै पनि बिर्सनु हुँदैन कि हाम्रा सम्पूर्ण आर्थिक, राजनीतिक र बौद्धिक विकास एउटा यस्तो व्यवस्थाको जगमा उभिएको छ , जसमा दास व्यवस्था त्यति नै आवश्यक थियो , जति त्यसलाई सार्वत्रिक मान्यता प्राप्त थियो । र , यस अर्थमा हामीलाई यो भन्ने अधिकार पनि छ कि यदि प्राचीन कालमा दास व्यवस्था नभएको भए , आधुनिक कालमा समाजवाद पनि हुँदैनथियो । " (फ्रेडरिक एंगेल्स, ड्युहरिङ मत–खण्डन)

सामन्तवादले मानव समाजलाई विभिन्न जातिहरुमा र श्रेणीहरुमा विभाजन गरेर त्यसको विशिष्टीकरण गर्यो ; मानवीय मूल्यहरुलाई दैवीकरण गरेर तिनीहरुलाई स्थायी, शाश्वत बनायो; र सबैभन्दा बढी मानव श्रमलाई सामाजिक स्तरमा

विभाजन गरेर (सामाजिक श्रम –विभाजन गरेर) त्यसको विशिष्टीकरण ग¥यो । यो नै मानव सभ्यताको लागि सामन्तवादको विशेष योगदान थियो ।

दास व्यवस्थापछि आएको सामन्तवादले मानव श्रमको परिष्कार , जातीय आधारमा श्रम – विभाजनद्वारा मानव कार्यहरु र श्रमका विषयहरुको विशेषीकरण तथा उत्पादक शक्तिको रुपमा भू–सम्पत्ति (जमिन)को विकास ग¥यो । अर्थात् त्यसले श्रमको परिष्कार तथा विशेषीकरण ग¥यो थप उत्पादक शक्तिको रुपमा भू – सम्पत्तिको विकास ग¥यो ।

मानव समाजको विकासको क्रममा अर्को चरण पूँजीवाद हो । यो सर्वाधिक क्रान्तिकारी चरण सिद्ध भएको छ । यसमा मानव सभ्यताको उच्च विकास भएको छ । पूँजीवादले मानवको व्यक्तित्व , क्षमता,श्रम, कार्य, बुद्धि र उत्पादक शक्ति तथा साधनहरुको चौतर्फी विकास गरेको छ । यसले मानवको ज्ञान–विज्ञानमा अभूतपूर्व विकास गरेको छ । यसले मानवको कर्म र योग्यतालाई सबै कुरा प्राप्त गर्ने आधार र साधनको रुपमा स्थापित गरेको छ ।

पूँजीवादले मानवको क्षमतालाई असीमित बनाइदिएको छ । मानवश्रम र श्रमको विषयको विशिष्टतालाई अन्त्य गरेर तिनीहरुलाई सार्विक बनाएको छ । सबै प्रकारका प्राकृतिक सीमाहरु तथा विभाजनहरुको अन्त्य गरेको छ ।

अब समाजवाद आउँदै छ ।यसको उदय वर्तमान पूँजीवादको अनिवार्य परिणामको रुपमा हुँदै छ । विगतको हरेक सामाजिक व्यवस्थाको जस्तै समाजवादको पनि आफ्नो ऐतिहासिक औचित्य वा महत्व छ । मानव समाजको विकास क्रममा आगामी चरण समाजवाद हो । समाजवादले आजसम्म विभिन्न वर्गहरुमा समाजको विभाजनलाई अन्त्य गर्नेछ र त्यसको स्थानहरुमा समाजका सम्पूर्ण सदस्यहरुको एकता , संघबद्धता स्थापित गर्नेछ । मानवजातिले आजसम्म आर्जन गरेको सम्पूर्ण सम्पदामाथि एउटा वर्गको एकाधिकारलाई अन्त्य गरेर त्यसलाई समाजका सम्पूर्ण सदस्यहरुको हातमा सुम्पिनेछ , एउटा वर्गको सम्पन्नता नै अर्को वर्गको विपन्नताको शर्त हुने अवस्थालाई, अर्को वर्गको दुर्गतिको शर्त हुने अवस्थालाई अन्त्य गर्नेछ र त्यसको स्थानमा हरेकको स्वतन्त्र विकास सबैको स्वतन्त्र विकासको शर्त हुने अवस्था स्थापित गर्नेछ । तब मात्र मानव समाज बाध्यताको संसारबाट स्वतन्त्रताको संसारमा जानेछ ।

“जब समाजले उत्पादनका साधनहरुमाथि अधिकार गर्दछ, तब मालहरुको उत्पादन समाप्त हुन्छ , र त्यसैसँग उत्पादकमाथि उत्पादनको प्रभुत्व पनि समाप्त हुन्छ । सामाजिक उत्पादनमा अराजकताको स्थान योजनाबद्ध , सचेतन संगठनले ग्रहण गर्दछ । त्यसपछि व्यक्तिहरुले आफ्नो – आफ्नो अस्तित्वको लागि संघर्ष गर्नुपर्दैन । तब वास्तविक अर्थमा मानवले पहिलो पटक बाँकी पशुजगतबाट आपू mलाई अन्तिम रुपमा अलग गर्दछ, र केवल पाशविक अस्तित्वका परिस्थितिहरुलाई छोडेर वास्तवमै मानव अस्तित्वका परिपिस्थतिहरुमा, जसबाट मानिसको पर्यावरण बन्दछ, र जुन अहिलेसम्म मानिसमाथि शासन गर्दैआइरहेका थिए, तिनीहरु अब मानिसको शासन तथा नियन्त्रणभित्र आउँदछन्, र मानवजाति आफ्नो सामाजिक संगठनको स्वयं मालिक बन्नुको कारण पहिलो पटक प्रकृतिको वास्तविक तथा सचेत स्वामी बन्दछ । अहिलेसम्म उसका आफ्ना सामाजिक कार्यहरुका नियमहरुले बाह्य प्राकृतिक नियमहरुको रुपमा उसमाथि शासन गर्ने गदर्थे । अब ऊ स्वयंले तिनीहरुको पूर्ण विवेकपूर्वक उपयोग गर्दछ र तिनीहरुलाई आफ्नो नियन्त्रणमा ल्याउँदछ । अहिलेसम्म मानिसको आफ्नो सामाजिक संगठनले प्रकृति र इतिहासद्वारा थोपरिएको एउटा अनिवार्य आवश्यकताको रुपमा मानिसको

मुकाविला गर्दथ्यो , अब त्यो स्वयं मानवको स्वतन्त्र कार्यको परिणाम बन्दछ । अहिलेसम्म जुन बाह्य वस्तुगत शक्तिहरुले इतिहासमाथि शासन गर्दैआएका थिए , तिनीहरु अब स्वयं मानवको नियन्त्रणमा आउँदछन् । यही त्यो बिन्दु हो, जसको अगाडि मानिसले जब कुनै सामाजिक कारणहरुलाई गतिशील बनाउनेछ , तब तिनीहरुका मुख्य रुपमा र निरन्तर बढ्दो मात्रामा इच्छित परिणाम हुनेछन् । यो मानवको आवश्यकताको संसारबाट स्वतन्त्रताको संसारमा छलाङ्ग हुनेछ ।" (फ्रेडरिक एंगेल्स, ड्युहरिङ्ग मत–खण्डन)

समाजवादको यात्रा आरम्भ भइसकेको छ , तर पूरा भएको छैन । यो यात्रा पछाडितिर फर्किएर हुँदैन , न त यथास्थितिमा रहेर नै हुन्छ । यो यात्रा त निरन्तर अगाडि बढेर मात्र हुन्छ । यसको लागि हरेक युगका प्रगतिशील तथा क्रन्तिकारी वर्गहरुको आफ्नो ऐतिहासिक कार्यभार हुन्छ । त्यो कार्यभार हो– विगतको समीक्षा , वर्तमानको विश्लेषण र भविष्यको योजना ।

## १. विगतको समीक्षा

युरोपमा प्रजातान्त्रिक क्रान्ति सम्पन्न भएपछि सवै समस्याहरुको समाधान हुन्छ भन्ने मान्यता स्थापित भएको थियो । तर त्यो मान्यता भङ्ग हुन धेरै समय लागेन । सन् १७८९ मा सम्पन्न फ्रान्सेली क्रान्तिको आदर्श स्वतन्त्रता , समानता र भातृत्वको परिणाम ठीक विपरित भयो । स्वतन्त्रता लुटतन्त्रमा बदलियो , समानता असमानतामा बदलियो र भातृत्व मत्स्य न्यायमा बदलियो ।समाजका अधिकांश मानिसहरु सर्वहारामा परिणत भए । प्रजातन्त्रअल्पतन्त्रमा फेरियो । समाजमा एकातिर अति सम्पन्नता र अर्कोतिर अति विपन्नता एकत्रित भयो । तब मानिसहरुले यसको विकल्प खोज्न थाले । केही विचारकहरुले यसको विकल्प समाजवाद हो भन्ने धारणा अगाडि ल्याए । तिनीहरुमध्ये प्रमुख सेन्ट साइमन, चार्ल्स पूmरिये र रोबर्ट ओवेन थिए । सेन्ट साइमनले निजी स्वामित्वको अन्त्यको प्रस्ताव अगाडि सारे । साथसाथै उनले समाजका सवै मानिसहरुले श्रम गर्नुपर्ने आवश्यकता औंल्याए । चार्ल्स पू mरियेले निजी सम्पत्ति र त्यसमा आधारित पूँजीवादको तीव्र आलोचना गरे । रोबर्ट ओवेनले सहकारी आन्दोलन चलाए र सामूहिक स्वामित्वअन्तर्गत सामूहिक रुपमा काम गर्दा कति धेरै प्रगति गर्न सकिन्छ र कति धेरै मानिसहरुलाई सुखी तथा सम्पन्न बनाउन सकिन्छ भन्ने कुरा व्यावहारिक रुपमै देखाए ।

सेन्ट साइमन , चार्ल्स पू mरिये र रोबर्ट ओवेनले पूँजीवादको विकल्पमा ल्याएको समाजवाद सही थियो, तर उनीहरुले प्रस्ताव गरेको विधि गलत थियो । फलस्वरुप उनीहरु कहिल्यै पनि सफल हुन सकेनन् । उनीहरुको सपना सपनामै सीमित रहृयो ।

काल्पनिक समाजवादीहरुले शोषित –उत्पीडित वर्गहरुको बीचमा समाजवादको विचारलाई पैmल्यउने र मुक्तिको आशा जगाउने कार्यमा ठूलो योगदान गरे । तर उनीहरुको समाजवाद काल्पनिक स्वरुपको हुनुको कारण त्यो साकार हुनसकेन ।

त्यसबेला जर्मनीमा वैचारिक आन्दोलन उत्कर्षमा पुगेको थियो । त्यसका प्रतिनिधिहरु थिए जर्ज विल्हेल्म हेगेल र लुडविग फायरबाख । हेगेलले द्वन्द्ववादलाई सम्पूर्ण अंगहरुसहित पूर्णता प्रदान गरेका थिए र फायरबाखले अध्यात्मवाद (आदर्शवाद) लाई अन्तिम रुपमा अन्त्य गरेका थिए र त्यसको स्थानमा भौतिकवादलाई प्रतिष्ठापित गरेका थिए । त्यसबाट के निष्कर्ष निस्किन्थ्यो भने संसार निरन्तर परिवर्तनशील छ र संसारको मूल आधार भौतिक तत्व हो । तर एउटा उच्चतम प्रगतिको बावजुद जर्मन शास्त्रीय

दर्शनका केही कमजोरीहरुथिए ।हेगेलको द्वन्द्ववाद आदर्शवादभित्र कैद थियो । उता फायरबाखको भौतिकवाद अधिभूतवादको शिकार थियो । त्यसकारण दुवै अपांग र अपूर्ण थिए ।

उता बेलायतमा (इंग्ल्याण्डमा) औद्योगिक क्रान्ति सम्पन्न भएको थियो, जसले पूँजीवादलाई उत्कर्षमा पु¥याएको थियो । त्यसले पूँजीवादको स्वरुप, सीमा तथा पूँजीवादभित्र पूँजीपति वर्ग र श्रमिक वर्गको स्थितिलाई स्पष्ट पारेको थियो । पूँजीवादको समुच्च विकासलाई अध्ययन गरेर पूँजीवादी अर्थशास्त्रीहरुले, जसमा एडम स्मिथ र डेविड रिकार्डो प्रमुख थिए , के निष्कर्ष निकालेका थिए भने पूँजीवादको संकट अवश्यम्भावी छ । तर उनीहरुले त्यसको सही कारण बताउन सकेका थिएनन् ।

इतिहासको त्यो निर्णायक चरणमा एउटा यस्तो व्यक्तिको आवश्यकता थियो , जसले यी सम्पूर्ण कुराहरुलाई संश्लेषण गरेर भविष्यको दृष्टि (खष्कष्यल) दिन सकोस् । यस्तो व्यक्तित्वको रुपमा कार्ल माक्र्स र फ्रेडरिक एंगेल्स आए । उनीहरु दुवै जर्मन थिए र आफ्नो जमानाका प्रमुख वैचारिक (बौद्धिक) उपलब्धिहरुसँग पूर्णतया परिचित थिए । विचार , मार्ग र उद्देश्य (लक्ष्य) एउटै भएको हुँदा उनीहरुको छिट्टै भेट पनि भयो र घनिष्ठ मित्रता पनि कायम भयो । त्यसपछि उनीहरुको सहकार्य आजीवन चलिरहृयो । त्यसकै परिणाम थियो माक्र्सवादको उदय ।

माक्र्स र एंगेल्सले सर्वप्रथम त्यसबेला सवैभन्दा अगाडि बढेका तीन देशहरुका प्रमुख उपलब्धिहरुलाई आलोचनात्मक परिष्कार गरे । तिनीहरु थिए – जर्मन शास्त्रीय दर्शन , अंग्रेजी शास्त्रीय राजनैतिक अर्थशास्त्र र फ्रान्सेली काल्पनिक समाजवाद । त्यसपछि तिनीहरुलाई तार्किक निष्कर्षमा पु ¥याएर उनीहरुले एउटा सुस्पष्ट नयाँ दृष्टि संसारको सामु प्रस्तुत गरे – वैज्ञानिक समाजवाद ।

*काल्पनिक समाजवादलाई वैज्ञानिक समाजवादमा बदल्नको लागि माक्र्स र एंगेल्सले चारवटा कुराहरु थपेका थिए– (१) इतिहासको भौतिकवादी धाराणा , (२) वर्ग–संघर्षको सिद्वान्त, (३) अतिरिक्त मूल्यको सिद्वान्त, र (४) क्रान्तिकारी शक्तिको रुपमा सर्वहारा वर्ग ।*

### *१. इतिहासको भौतिकवादी धारणा*

काल्पनिक समाजवादीहरुले पूँजीवादलाई अतर्कसंगतभनेर आलोचना गरेका थिए र त्यसको स्थानमा एउटा तर्कसंगत , आदर्श समाजकोस्थापना गर्ने प्रस्ताव गरेका थिए , जुन समाजवाद थियो। उनीहरुको लागि समाजवाद समाज विकासको अनिवार्य परिणाम थिएन, त्यसको विपरित यो कुनै महान व्यक्तिको चिन्तनको परिणाम थियो । समाजवादमा, त्यति मात्र होइन, सम्पूर्ण ऐतिहासिक विज्ञानमा (समाजशास्त्रमा) व्याप्त यो आदर्शवादी धारणालाई हटाएर माक्र्स र एंगेल्सले भौतिकवादी धारणा अगाडि ल्याए ।

इतिहासको भौतिकवादी धारणाअनुसार मानवजीवनको लागि आवश्यक साधनहरुको उत्पादन र विनिमय प्रणाली प्रत्येक सामाजिक व्यवस्थाको आधार हो । सवै सामाजिक परिवर्तनहरु र राजनीतिक क्रान्तिहरुका अन्तिमकारण मानिसको मस्तिष्कमा होइन , उसको चिन्तनमा होइन , बरु उत्पादन तथा विनिमय प्रणालीमा हुने परिवर्तनहरुमा निहित छन् । तिनीहरुको खोज प्रत्येक युगको दर्शनमा होइन, बरु अर्थव्यवस्थामा गरिनु पर्दछ । यदि कुनै सामाजिक व्यवस्था अविवेकपूर्ण, अतर्कसंगत र अन्यायपूर्ण छ भने त्यसको कारण उत्पादन तथा विनिमय प्रणालीमा भित्र–भित्रैै यस्ता परिवर्तनहरु हुनु हो , जससँग पुरानो आर्थिक प्रणालीमा आधारित

सामाजिक व्यवस्थाको संगति रहेको छैन । यसको साथसाथै जुन असंगति , अव्यवस्थाहरु उत्पन्न भएका हुन्छन्, तिनीहरुलाई हटाउने साधनहरु पनि धेर–थोर विकसित अवस्थामा , तिनै परिवर्तित उत्पादन प्रणालीमा निहित हुन्छन् । त्यस्ता साधनहरुलाई आदर्श , निरपेक्ष सिद्धान्तहरुको निष्कर्षको रुपमा दिमागबाट निकाल्न सकिँदैन , बरुतिनीहरुलाई विद्यमान उत्पादन प्रणालीका ठोस तथ्यहरुमै पाउन सकिन्छ ।

त्यसपछि समाजवाद कुनै महान व्यक्तिको चिन्तनको परिणाम रहेन , त्यसको विपरित यो विद्यमान पूँजीवादी व्यवस्थामा विकसित उत्पादक शक्तिको परिणाम सिद्ध भयो , जसको कारण पूँजीवाद अन्यायपूर्ण, दोषपूर्ण र अतर्कसंग बनेको थियो । अब समाजवाद यही उत्पादक शक्तिको आधारमा स्थापित हुन सक्दथ्यो ।

## २.वर्ग–संघर्षको सिद्धान्त

अतर्कसंगत र अन्यायपूर्ण पूँजीवादको स्थानमा तर्कसंगत र निर्दोष समाजवादको स्थापना गर्ने विधिको रुपमा काल्पनिक समाजवादीहरुले वर्ग –समन्वयलाई मानेका थिए । तर वर्गीय समाजमा वर्गहरुका हितहरु विपरित स्वरुपका हुन्छन् । त्यसकारण यस्ता विपरित हितहरु भएका वर्गहरुको बीचमा समन्वयको अपेक्षा गर्नु आदर्श कल्पनाबाहेक अरु केही हुन सक्दैनथ्यो । यसको बदला माक्र्स र एंगेल्सले इतिहासको गम्भिर अध्ययनबाट वर्गीय समाजमा सामाजिक रुपान्तरणको विधिको रुपमा वर्ग –संघर्षको खोज गरेका थिए । यसअनुसार वर्गीय समाजमा वर्ग –संघर्ष समाज रुपान्तरणको उत्तोलक हो

अब यसबाट यो कुरा सिद्ध भयो – समाजवाद स्थापना गर्ने विधि धनी र गरीबको बीचमा , उत्पीडक र उत्पीडितको बीचमा, शोषक र शोषितको बीचमा, शासक र शासित वर्गको बीचमा मेल –मिलाप, समन्वय वा सम्झौता होइन, बरु अनवरत संघर्ष हो । शोषक वर्गको रुपमा रहेको पूँजीपतिलाई बलपूर्वक निषेध गरेर नै समाजवादको स्थापना हुनसक्दछ । शासक पूँजीपति वर्गलाई सत्ताच्युत गर्नु समाजवादको अनिवार्य शर्त हो ।

“आजसम्म उत्पन्न सम्पूर्ण समाजको इतिहास वग–संघर्षहरुको इतिहास रहेको छ । संक्षेपमा उत्पीडक र उत्पीडितले निरन्तर एक –अर्कोको विरोध गर्दै आएका छन् । उनीहरु कहिले अप्रत्यक्ष र कहिले प्रत्यक्ष रुपमा निरन्तर एक –अर्कोसँग संघर्ष गर्दै आएका छन्, जुन संघर्षको अन्त्य हरेक पटक या त सम्पूर्ण समाजको क्रान्तिकारी रुपान्तरणमा, अथवा संघर्षरत दुवै वर्गहरुको बर्बादीमा भएको छ ।” (माक्र्स–एंगेल्स, कम्युनिस्ट घोषणापत्र)

## ३. अतिरिक्त मूल्यको सिद्धान्त

काल्पनिक समाजवादीहरुले पूँजीवादी अन्यायपूर्ण , शोषणमूलक छ , भनेर यसको आलोचना गरेका थिए र यसलाई त्याज्य घोषित गरेका थिए । तर उनीहरुले यसमा हुने अन्याय , शोषणलाई दर्शाउन सकेका थिएनन्, किनभने त्यो प्रत्यक्ष रुपमा हुँदैन । त्यसलाई माक्र्सको अतिरिक्त मूल्यको सिद्धान्तले उद्घाटित ग¥यो ।

अतिरिक्त मूल्यको सिद्धान्तबिना पूँजीवादको सुन्दर आवरणभित्र लुकेको अन्याय, शोषण, कुरुप पक्षलाई दर्शाउन संभव थिएन । पूँजीपति वर्गले श्रमिक वर्गलाई प्रत्यक्ष रुपमा शोषण गर्दैन । उसले रुपमा श्रमको उचित मूल्य तिर्छ, कामअनुसार दाम दिन्छ । तर उसले अप्रत्यक्ष रुपमा श्रमिकलाई दिएको ज्यालाभन्दा बढी काम गराउँदछ , जसबाट उसले नाफा कमाउँदछ । यही अतिरिक्त श्रमबाट पूँजीपति वर्गको नाफा र पूँजी बन्दछन् । त्यसकारण पूँजीवादी उत्पादनको लक्ष्य यही अतिरिक्त मूल्य हो ।

पूँजीवादी व्यवस्थाको यो रहस्यको उद्घाटनबाट पूँजीवादको अन्यायपूर्ण, शोषणमूलक, कुरुप स्वरुप स्पष्ट भयो ।
अतिरिक्त मूल्यको सिद्धान्तले पूँजीवादी व्यवस्थामा न्यायको आवरणभित्र हुने अन्याय , 'कामअनुसार दाम'को आवरणभित्र हुने शोषण र औपचारिक समानताभित्र हुने वास्तविक असमानतालाई सवैको सामु खोलेर राखिदियो ।

यही अतिरिक्त मूल्यको शोषणबाट पूँजीपति वर्ग निरन्तर धनी सम्पन्न हुँदै जान्छ र श्रमिक वर्ग निरन्तर गरीब, विपन्न बन्दै जान्छ । एकातिर धन र अर्कोतिर गरीबी , दरिद्रता चुलिन्छ । एकातिर सम्पन्नता र अर्कोतिर दरिद्रता थुप्रिन्छ ।

## ४.क्रान्तिकारी शक्तिको रुपमा सर्वहारावर्ग

वर्गीय समाजमा हरेक सामाजिक व्यवस्थाको एउटा प्रतिनिधि वर्ग हुन्छ , जुन शासक वर्ग हुन्छ । उदाहरणको लागि, दास व्यवस्थामा दासमालिक , सामन्तवादमा सामन्त र पूँजीवादमा पूँजीपति प्रतिनिधि र शासक वर्ग हुन्छन् । यसैगरी समाजवादमा पनि एउटा प्रतिनिधि वर्ग हुन्छ । त्यो वर्गले नै पुरानो सामाजिक व्यवस्थाको प्रतिनिधि शासक वर्गको विरुद्ध संघर्ष गर्दछ र त्यसलाई पराजित गरेर र पुरानो व्यवस्थालाई अन्त्य गरेर नयाँ सामाजिक व्यवस्थाको स्थापना गर्दछ । तर काल्पनिक समाजवादीहरुले वर्ग –संघर्ष र कुनै पनि प्रतिनिधि वर्गको अस्तित्वलाई मान्दैनथिए । उनीहरु सम्पूर्ण समाजको मुक्तिको आदर्शवादी कुरा गर्दथे । उनीहरुको दृष्टिमा समाजका सम्पूर्ण सदस्यहरुको संयुक्त प्रयत्नबाट , जुन कुनै महान चिन्तकको योजनाअनुसार हुन्छ , समाजवाद स्थापित हुन्थ्यो ।

माक्र्स र एंगेल्सले त्यसको विपरित समाजवादको प्रतिनिधि वर्गको रुपमा सर्वहारा वर्गलाई प्रस्तुत गरे । उनीहरुको विचारअनुसार समाजवादको लागि सर्वहारा एकमात्र क्रान्तिकारी शक्ति हो , किनभने यो वर्ग पूँजीवादको अनिवार्य परिणाम (वैध सन्तान) हो र अन्य वर्गहरु वर्ग –संघर्षको क्रममा लोप हुन्छन् । "सर्वहारावर्ग पूँजीवादको चिहान खन्ने मलामी हो । " त्यसैगरी सर्वहारावर्ग मानव समाजको अन्तिम वर्ग पनि हो , किनभने यसले आफूलाई शासक वर्गको रुपमा स्थापित गरेर सम्पूर्ण वर्गको अन्त्य गर्दछ ।

अब यी चार कुराहरुको आधारमा समाजवाद काल्पनिकबाट वैज्ञानिक बन्यो ।

निश्चित रुपमा निरंकुश , सामन्तवादको तुलनामा पूँजीवाद अत्यन्त प्रगतिशील र क्रान्तिकारी थियो । त्यसले समाजमा स्वतन्त्रता , समानता र भातृत्वका आधारहरुको (जगहरुको) शिलान्यास गरेको थियो । जाति, कुल, वंश, धर्म, परम्परा, आदि स्थायी, अपरिवर्तनशील, र प्राकृतिक अधिकारहरुलाई समाप्त पारेर त्यसले कर्म र योग्यतालाई हरेक अधिकारको आधार बनाएको थियो । सबै शाश्वत , अपरिवर्तनशील र प्राकृतिक विभाजनहरुलाई , भिन्नताहरुलाई अन्त्य गरेर त्यसले सवै मानिसहरुलाई स्वतन्त्र र समान घोषित गरेको थियो । तर त्यसमा एउटा कुराको कमी थियो , र त्यो हो – आर्थिक समानता, जसबिना अन्य सवै स्वतन्त्रता र समानताहरु अर्थहीन हुन्छन् । पूँजीवादमा कानूनको दृष्टिमा त सवै मानिसहरु समान हुन्छन् , तर यथार्थमा (वास्तविकतामा) उनीहरु पूँजीपतिहरुको अधीनमा हुन्छन् । किनभने आर्थिक दासता सवै प्रकारका दासताको कारण बन्दछ । वैज्ञानिक समाजवादले यही आर्थिक समानतालाई अन्य सवै समानता र स्वतन्त्रताको आधार बनायो । यही कुरामा पूँजीवादको तुलनामा समाजवादको भिन्नता र उत्कृष्टता दुवै अन्तर्निहित छन् ।

यसप्रकार वैज्ञानिक समाजवादले पूँजीवादी समाजमा पै mलिएको भयानक अराजकतालाई

अन्त्य गर्नको लागि ठोस विकल्पहरु (उपायहरु) प्रस्तुत ग¥यो । सर्वप्रथम त त्यसले पूँजीवादमा सुधार गर्नुको बदला पूँजीवादी व्यवस्थाकै अन्त्य गर्न आह्वान ग ¥यो । किनभने त्यसको निष्कर्षअनुसार पूँजीवादमा जुन समस्याहरु उत्पन्न भएका थिए , तिनीहरुको कारण स्वयं पूँजीवादी व्यवस्था थियो । त्यसपछि निर्बाधप्रतिस्पर्धाको स्थानमा योजनाबद्ध उत्पादन , पूँजीपति वर्गको सत्ताको स्थानमा उत्पादक वर्गको सत्ता , निजी स्वामित्वको स्थानमा सामाजिक स्वामित्व , र औपचारिक राजनीतिक स्वतन्त्रता र समानताको स्थानमा आर्थिक स्वतन्त्रता र समानताप्रस्तुत ग¥यो । समाजवादले प्रस्तुत गरेका यी विकल्पहरु यस्ता अचूक उपायहरु थिए , जसबाट पूँजीवादको विरुद्ध (पूँजीपति वर्गको विरुद्ध) श्रमिक वर्गका सम्पूर्ण आन्दोलनहरुलाई स्पष्ट मार्गदर्शन प्राप्त भयो ।

तब समाजवादको यात्रा शुरु भयो । यही सिद्धान्तको आधारमा विश्वमा एकपछि अर्को समाजवादी क्रान्तिहरु भए । त्यो लहरले विश्वभरि हलचल मच्चियो ।यहाँसम्म कि स्वयं पूँजीवादीहरु पनि त्यसबाट जोगिनको लागि समाजवादको खोल ओढ्न विवश भए । जसरी जीवहरुले (प्राणीहरुले)शत्रुहरुबाट बच्नको लागि आपू mलाई वातावरणको अनुकूल रंगको बनाउँदछन् , त्यसैगरी संसारका पूँजीवादीहरुले समाजवादको लहरबाट (ज्वारभाटाबाट) बच्नको लागि आपू mलाई रातो रंगले रंग्याए । विश्वभरि 'प्रजातान्त्रिक समाजवाद' नामको भ्रमको खेती गरियो । नेपालमा नेपाली कांग्रेसले प्रजातान्त्रिक समाजवादको कार्यक्रम अवलम्बन गर्नु त्यसकै एउटा उदाहरण थियो ।

तर आफ्नो महान ऐतिहासिक भूमिकाको बावजुद विगतमा समाजवादका केही सीमाहरु र कमजोरीहरु (दोषहरु) थिए । पहिलो त त्यो मानव श्रममा आधारित थियो ; दोस्रो, त्यो राज्यनियन्त्रित थियो; र तेस्रो, त्यो राज्यको स्वामित्वमा आधारित थियो ।

### १.श्रममा आधारित समाजवाद

विगतमा समाजवाद मानव श्रममा (सामाजिक श्रममा) आधारित थियो । त्यसकारण त्यो मानव श्रमका सीमाहरुद्वारा सीमित थियो ।
परिणामस्वरुप त्यसले पछि आउने अर्को सामाजिक व्यवस्थाको लागि, जुन विज्ञान–प्रविधिमा आधारित छ, स्थान छोड्नु प ¥यो । तर त्यसबेला अन्यथा हुन पनि सक्दैनथ्यो । किनभने त्यसबेला विज्ञान–प्रविधिको विकास त्यो स्तरमा पुगेको थिएन , जसमा समाज उभिन सकोस् , र मानव श्रमबाहेक अरु कुनै उत्पादक शक्ति थिएन ।

### २. राज्यनियन्त्रित समाजवाद

विगतमा समाजवाद राज्यनियन्त्रित थियो । त्यसबेला राज्य र समाजलाई एउटै मानियो । त्यसकारण राज्यको नियन्त्रणलाई नै समाजको नियन्त्रण मान्ने गल्ती गरियो ।सबै कुराहरु राज्यद्वारा नियन्त्रित भएको हुँदा जनता निष्क्रिय बन्नगए । सबै कुराहरुको निर्णय राज्यले गर्ने भएपछि जनताले चाहिँ के गर्ने त ? जनताले चाहिँ दिएको खाने , अह्राएको गर्ने – अर्थात्, 'दालभात तरकारी, जीउज्यान सरकारी ! ' यसरी सबैको समानताको लागि स्थापित समाजवाद राष्ट्रिय पूँजीवादमा बदलियो । समाजको नाममा राज्यको एकाधिकार कायम भयो ।

खान–लाउन उपलब्ध हुनु नै स्वतन्त्रता होइन । यदि त्यसो हुन्थ्यो भने , प्राचीन कालका दासहरु कति स्वतन्त्र हुन्थे होलान् ; पोल्ट्री फार्ममा पालिएका कुखुराहरु कति स्वतन्त्र हुन्थे होलान् ! विगतको समाजवादमा पनि जनताको अवस्था प्राचीन कालका दासहरु वा पोल्ट्री फार्मका

कुखुराहरुको भन्दा धेरै भिन्न थिएन । उनीहरु सत्ताधारीहरुको अधीनस्थ थिए ।

समाज र राज्य एउटै होइनन् । राज्यसत्ता समाजबाट उत्पन्न हुन्छ र त्यसपछि समाजमाथि शासन गर्ने शक्ति बन्दछ । फेरि राज्यसत्ताको सञ्चालन त नोकरशाह९दभबगचयअचबतभ०ले गर्दछन् । त्यसकारण यदि समाजको नाममा सबै कुरा राज्यको अधीनस्थ बनाइयो भने , सबैभन्दा शक्तिशाली नोकरशाह बन्दछ । फलस्वरुप समाज कमजोर र राज्यसत्ता बलियो बन्दछ । जनता कमजोर र शासकहरु शक्तिशालीबन्दछन् । शासक र शासित, शोषक र शोषित वर्गहरुको सृजना हुन्छ । राज्यसत्ताबाट शोषक वर्गको उत्पत्ति हुन्छ । राज्यसत्ता विलीन हुनुको सट्टा अझ सशक्त , बलियो र सुदृढ बन्दछ । राज्यसत्ताको आडमा परजीवी वर्गको उदय हुन्छ , त्यसको पालन–पोषण हुन्छ ।

पूँजीवादी व्यवस्थामा पनि राज्यसत्ता स्वायत्त हुँदैन । त्यो पूँजीपति वर्गको अधीनमा हुन्छ । त्यसकारण पूँजीपति वर्गले त्यसलाई आफ्नो हितअनुसार, आफ्नो स्वार्थअनुसार सञ्चालन गर्नसक्दछ । समाजको अधीनमा राज्यसत्ता भएमा मात्र समाजले त्यसलाई आफ्नो हितमा उपयोग गर्नसक्दछ । तब मात्र राज्यसत्ता लोप हुन्छ । तर विगतमा ठीक यसको उल्टो भयो । समाज, जनता, नागरिक नामको केही चीज बाँकी रहेन, अजङ्गको भीमकाय , दैत्याकार राज्यसत्ता मात्र रह्यो ।

### ३. राज्यको स्वामित्वमा आधारित समाजवाद

पूँजीवादमा उत्पादनका साधनहरुमाथि निजी स्वामित्वको कारणले उत्पन्न समस्यालाई अन्त्य गर्नको लागि तिनीहरुमाथि सामाजिक स्वामित्व स्थापित गर्नु समाजवादको लक्ष्य हो । तर विगतमा यसको विधिको रुपमा राष्ट्रियकरणलाई अवलम्बलन गरियो । फलस्वरुप सम्पूर्ण उत्पादनका साधनहरुमाथि समाजको स्वामित्व स्थापित भएन । त्यसको विपरित राज्यको स्वामित्व स्थापित भयो । यहाँ पनि राज्य र समाजलाई एउटै मान्ने गल्ती गरियो । परिणामस्वरुप त्यहाँ न जनतालाई श्रम गर्ने उत्साह थियो, न उनीहरुको जीवनस्तर नै उठ्यो । राज्यसत्तामा रहने सीमित मानिसहरुको रजाइँ चल्यो, आम जनताको हातमा केही रहेन । जुन तत्वलाई स्वतन्त्रताको आधार मानिएको थियो , अर्थात् आर्थिक तत्व, त्यसैबाट जनता वञ्चित भए । समाजवादसँग जनताको मोह भंग भयो । त्यसकारण समाजवादी सत्ता एकपछि अर्को ढल्दा कसैले पनि त्यसको रक्षा गरेन ।

### २. वर्तमानको विश्लेषण

आज हामी एउटा नयाँ विश्वमा छौं । यो नयाँ विश्वमा सोभियत संघ छैन , शोषित–उत्पीडित वर्गहरुको आशा–केन्द्र समाजवादी सत्ता छैन , कुनै जमानामा संसार हल्लाउने कम्युनिस्ट आन्दोलनमा गतिरोध आएको छ र शक्तिशाली श्रमिक संगठनहरु शिथिल भएका छन् । सम्पूर्ण विश्वमा पूँजीवादीहरुको करिब एकल वर्चस्व (प्रभुत्व) स्थापित भएको छ, जसको प्रतिरोध या त हुँदैहुँदैन या प्रभावहीन हुन्छ । तर पनि , सोभियत संघ नभएकोले यो विश्व नयाँ भएको होइन । त्यसको विपरित, यो विश्वको नयाँ स्वरुपको कारण सोभियत संघको अन्त्य भएको छ र पूँजीवादीले पनि अस्तित्व बचाउन आपूmलाई बदलेको छ ।

विगतमा नै ढल्छ भनिएको पूँजीवाद अझ हराभरा भएर आएको छ । पहिले आपसमा प्रतिस्पर्धा , युद्ध र काट–मार गर्ने पूँजीवादीहरु अहिले आश्चर्यजनक रुपलेएकजुट, संयुक्त भएका छन् । इराक , युगोस्लाभिया, अफगानिस्तान, लिबिया र सिरियाको विरुद्ध युद्धमा उनीहरुले एकताको राम्रो परिचय

दिएका छन् । यस्तो एकताका दृष्टान्तहरु बहुराष्ट्रि कम्पनीहरु, निगमहरु र गठबन्धनहरुपनि हुन् ।

विगतमा नै ढल्छ भनिएको पूँजीवाद अझ हराभरा भएर आएको छ , किन ? पहिले आपसमा प्रतिस्पर्धा, युद्ध र काटमार गर्ने पूँजीवादीहरु अहिले एकजुट भएका छन्, किन ? र समाज रुपान्तरणको अजेय शक्ति सर्वहारावर्ग अहिले निष्क्रिय भएको छ, किन ? यी प्रश्नहरुको उत्तरको लागि वर्तमानको विश्लेषण, अध्ययन गर्नु आवश्यक छ ।

वर्तमान युगका चार आधारभूत विशेषताहरु छन् – (१) नयाँ उत्पादक शक्तिको रुपमा विज्ञान – प्रविधिको विकास, (२) पूँजीवादको नयाँ स्वरुप, (३) उत्पादन क्षेत्रबाट मानवश्रमको विस्थापन , र (४) समाजको नयाँ संरचना ।

## १. नयाँ उत्पादक शक्तिको रुपमा विज्ञान – प्रविधिको विकास

उन्नाइसौं र बीसौं शताब्दीको आरम्भमा राष्ट्रहरुको शक्ति तिनीहरुको औद्योगिक क्षमता थियो, जसको प्रमुख तत्व स्टील उत्पादन थियो । दोस्रो विश्वयुद्धपछि, वैज्ञानिक–प्राविधिक क्षमता देशको प्रमुख शक्ति बन्यो, र अनुसन्धान तथा विकास (च् ७म) ले शक्तिको मापनको रुपमा रहेको स्टील उत्पादनलाई प्रतिस्थापित ग ¥यो । त्यसकारण वर्तमान समाजमा (उत्तर –आधुनिक समाजमा) प्रमुख समस्या विज्ञानको संगठन हो , र प्राथमिक संस्था विश्वविद्यालय वा अनुसन्धान संस्था हो , जहाँ यस्तो कार्य गरिन्छ ।

औद्योगिक समाजमा उत्पादनको लागि यन्त्रहरु र मानिसहरुको संयोजन हुन्छ , उत्तर–आधुनिक समाज सामाजिक नियन्त्रण , नव–प्रवत्र्तन तथा परिवर्तनको निर्देशनको लागि ज्ञानको वरिपरि संगठित भएको छ । र , यसले पुनः नयाँ सामाजिक सम्बन्धहरु र नयाँ संरचनाहरुलाई जन्म दिन्छ, जसलाई राजनीतिक रुपले व्यवस्थापन गर्नुपर्दछ ।

अहिले ज्ञान वास्तवमा कुनै पनि देशको सञ्चालनको लागि आवश्यक भएको छ । उत्तर – आधुनिक समाजको लागि विशेष कुरा स्वयं ज्ञानको चरित्रमा परिवर्तन हो । निर्णयहरुको संगठन र परिवर्तनको निर्देशनको लागि जुन कुरा निर्णायक भएको छ , त्यो सैद्धान्तिक ज्ञानको केन्द्रीयता हो । अनुभवमाथि सिद्धान्तको प्रथमिकता र चिन्हहरुको अमूर्त प्रणालीहरुमा ज्ञानको सूत्रीकरण , जुन स्वयंसिद्धि प्रणाली मा जस्तै धेरै भिन्न तथा विविधीकृत अनुभवका क्षेत्रहरुलाई स्पष्ट गर्न, मार्गदर्शन गर्न उपयोग गर्न सकिन्छ

अहिले हरेक समाज नव –प्रवत्र्तन र परिवर्तनको नियन्त्रणबाट बाँच्दछ, र आगामी योजनाको लागि भविष्यको पूर्वानुमान गर्ने प्रयत्न गर्दछ । सामाजिक नियन्त्रणको यो प्रतिबद्धताले समाजमा योजना र भविष्यवाणीलाई प्रवेश गराउँदछ । यो नव–प्रवत्र्तनको प्रकृतिप्रति परिवर्तित सचेतता हो , जसले सैद्धान्तिक ज्ञानलाई यति निर्णायक बनाउँदछ ।

यो कुरा सर्वप्रथम विज्ञान र प्रविधिको परिवर्तित सम्बन्धमा देख्न सकिन्छ । विगत कालका करिब सबै उद्योगहरु– स्टील, विद्युतीय शक्ति, टेलिग्राफ, टेलिफोन, मोटरगाडी, हवाईजहाज–मुख्यतया प्रतिभाशाली आविष्कारकहरुका सृजना थिए , जो विज्ञान र आफ्ना अनुसन्धानका आधारभूत नियमहरुसँग अपरिचित थिए । तर वर्तमान कालका सबै उद्योगहरु विज्ञानमा पारंगत इन्जिनियरहरुका सृजना हुन् । वर्तमान कालका प्रमुख उद्योगहरुमध्ये एउटा रासायनिक उद्योग हो, जसमा विज्ञान र प्रविधिको जटिल संयोजन हुन्छ । किनभने रासायनिक संश्लेषणको लागि – यौगिकहरुका संयोजन र रुपान्तरणको लागि –

सूक्ष्म अणुहरुको सैद्धान्तिक ज्ञान आवश्यक हुन्छ ।

वर्तमान समयमा विज्ञान , प्रविधि र अर्थतन्त्रको संयोजनलाई 'अनुसन्धान र विकास' शब्दावलीद्वारा व्यक्त गरिन्छ । यसबाट विज्ञानमा आधारित उद्योगहरु (कम्प्युटर , इलोक्ट्रोनिक्स, अप्टिक्स, पोलिमर) आएका छन् , जसले निरन्तर समाजका उत्पादन क्षेत्रहरुमा आधिपत्य जमाइरहेका छन् । तर यी विज्ञानमा आधारित उद्योगहरु मुख्यतया सैद्धान्तिक कार्यमा आधारित छन् । उदाहरणको लागि , कम्प्युटरको अस्तित्व केही वर्षपहिले फेलिक्स ब्लखद्वारा प्रवत्रित ठोस अवस्थाको भौतिक विज्ञानमा गरिएको कार्यबिना हुन सक्दैनथ्यो । लेजरको आगमन आणविक प्रकाशीय बिममा आई.आई.रबिसको अनुसन्धानको प्रत्यक्ष परिणाम हो ।

अहिले कुनै पनि क्षेत्रका प्रगतिहरु बढ्दो मात्रामा सैद्धान्तिक कार्यको प्राथमिकतामा आधारित छन् , जसले ज्ञान कुराहरुलाई सूत्रबद्ध गर्दछ , र आनुभविक पुष्टिको लागि मार्गदर्शन गर्दछ । परिणामस्वरुप, सैद्धान्तिक ज्ञान निरन्तर रुपमा समाजको रणनीतिक स्रोत (प्रमुख स्रोत) , मूल आधार बनेको छ । र , विश्वविद्यालयहरु, अनुसन्धान संगठनहरु र बौद्धिक संस्थाहरु , जहाँ सैद्धान्तिक ज्ञान सूत्रबद्ध र समृद्ध हुन्छ , उदीयमान समाजका प्रमुख भागहरु बनेका छन् । यो कुरा ज्ञानको हरेक क्षेत्रमा लागु हुन्छ ।

पूँजीवादी समाजमा आधारभूत तत्व निजी सम्पत्ति थियो, र वर्तमान समाजमा यो तत्व सैद्धान्तिक ज्ञानको केन्द्रीयता हो । औद्योगिक समाजमा प्रमुख आर्थिक विषय पूँजी थियो तर उत्तर – औद्योगिक समाजमा प्रमुख आर्थिक विषय विज्ञानको संगठन भएको छ ।

उत्तर–औद्योगिक समाजका आधारहरु उत्पादनका विधिहरुमाथि, विशेषगरी विद्युतीय तथा रासायनिक उद्योगहरुमा रुपान्तरणको लागि , विज्ञानको निरन्तर प्रभावमा निहित छन् । विज्ञान जगत त्यो बीजाणु हो , जसमा भावी समाजको भ्रूण रहेको छ ।

सामाजिक संरचनाको नयाँ निर्धारक विशेषता वैज्ञानिक–प्राविधिक क्रान्ति हो , अथवा सैद्धान्तिक ज्ञानको केन्द्रीयता हो, जसले सामाजिक संगठनको प्रमुख आधारको रुपमा काम गर्दछ ।

समाजको नयाँ स्तरीकरण प्रणालीको विशेषता वैज्ञानिक तथा प्राविधिक वर्गहरु र विज्ञान –प्रविधिभन्दा बाहिर रहने वर्गहरुको बीचमा विभाजन हो ।
नव–प्रवत्रतनसँग विज्ञानको संयोजन र व्यवस्थित तथा संगठित (योजनाबद्ध) प्राविधिक बृद्धिको संभाव्यता, वर्तमान समाजको प्रमुख आधार हो । पहिलेका आविष्कारहरु र नव –प्रत्रतनहरु वैज्ञानिक अनुसन्धानसँग जोडिएका थिएनन् । तर वर्तमान उद्योगहरु–पोलिमर र प्लास्टिक , इलोक्ट्रोनिक्स र अप्टिक्स, रसायनहरु र सिन्थेटिक्स , वायुयान र सञ्चार– सबै पूर्णतया विज्ञानमा आधारित छन् ।

उत्तर–आधुनिक समाजको एउटा अक्ष प्रविधि हो र अर्को अक्ष आधारभूत स्रोतको रुपमा ज्ञान हो । ज्ञान र प्रविधि सामाजिक संस्थाहरुमा मूर्त भएका छन्, त्यसकारण वर्तमान समाजलाई ज्ञान –समाज भन्न सकिन्छ ।

प्रविधि बृद्धि भएको सम्पूर्ण उत्पादकत्वको आधार हो, र उत्पादकत्व आर्थिक क्षेत्रको रुपान्तरणकारी तत्व बनेको छ, जसको कल्पना कुनै पनि शास्त्रीय अर्थशास्त्रीले गर्न सकेको थिएन ।

उत्तर–औद्योगिक समाजलाई दुई अर्थमा ज्ञान –समाज भन्न सकिन्छ ः पहिलो े, नव–प्रवत्रतनका स्रोतहरु बढी मात्रामा अनुसन्धान र विकास (च् ७

म) बाट प्राप्त हुन्छन् ; दोस्रो, कुल राष्ट्रिय उत्पादनको ठूलो भाग र रोजगारको ठूलो भाग ज्ञानको क्षेत्रमा पर्दछन् ।

विज्ञानमा आधारित प्रविधिहरु र उद्योगहरुलाई उत्पादन तथा प्रक्रियाहरुमा प्रमुख प्रगतिहरु गर्नको लागि ठूलो सुविधा प्राप्त छ ।वर्तमान समाजमा अधिकांश वस्तुहरु विज्ञानमा आधारित प्रविधिहरु तथा उद्योगहरुबाट उत्पादित भएका छन् ।

वैज्ञानिक प्राविधिक क्रान्तिको परिणाम केवल श्रमको मात्र होइन , सम्पूर्ण उत्पादक शक्तिहरुको अविच्छिन्न, यन्त्रीकृत (स्वचालित) उत्पादन प्रक्रियामा रुपान्तरण हो , जसमा अब मानव उत्पादन प्रक्रियाको 'किनारा'मा रहन्छ, जहाँ पहिले ऊ त्यसको प्रमुख कर्ता हुन्थ्यो । फलस्वरुप समाजका उत्पादक शक्तिहरुको बृद्धिमा श्रम–शक्ति (र श्रमिक वर्ग) होइन , बरु विज्ञान (र वैज्ञानिक वर्ग) 'निर्णायक तत्व' भएको छ ।

सरल, विखण्डित कार्यको स्थानमा अहिले प्रविधि , संगठन र कुशलताको भेषमा विज्ञान र त्यसको प्रयोग आएको छ । पहिले जुन क्षेत्र उद्योगबाट अलग हुन्थ्यो र कहिलेकाही सानो मात्रामा मात्र ल्याइन्थ्यो, त्यो अब उत्पादन र सम्पूर्ण सामाजिक जीवनको केन्द्रमा प्रवेश गरिरहेको छ ।

अर्को शब्दमा , विज्ञान राष्ट्रिय अर्थतन्त्रमा प्रमुख चर(तत्व)को रुपमा र सभ्यताको विकासमा प्रमुख आयामको रुपमा उदाइरहेको छ । वैज्ञानिक – प्राविधिक क्रान्तिको र यसद्वारा विकसित बृद्धिका प्रारुपहरुका परिवर्तनहरुको एउटा निश्चित चरणमा , समाजको विकासका सम्पूर्ण नियमहरु र अनुपातहरु (आकारहरु) एउटा नयाँ प्रकाशमा देखिन्छन् । यो मुख्यतया विज्ञान , प्रविधि र उत्पादनको बीचको सम्बन्धमा लागु हुन्छ । वैज्ञानिक–प्राविधिक क्रान्तिका परिवेशहरुमा उत्पादक शक्तिहरुको बृद्धिले एउटा उच्च प्राथमिकताको नियमलाई , अर्थात् प्रविधिमाथि विज्ञानको र उद्योगमाथि प्रविधिको प्राथमिकतालाई अनुसरण गर्दछ ।

## २. पूँजीवादको नयाँ स्वरुप

विगत कालको पूँजीवादको विकासक्रमलाई तीन चरणहरुमा विभाजन गर्न सकिन्छ – (१) संरक्षणवादी पूँजीवाद , (२) प्रतिस्पर्धी पूँजीवाद , र (३) एकाधिकारी पूँजीवाद ।

१) संरक्षणवादी पूँजीवाद ( Protectionist Capitalisam)– पूँजीवादको यो चरण चौधौं शताब्दीबाट आरम्भ भएको थियो र सोह्रौं शताब्दीसम्म अस्तित्वमा रहेको थियो । यसको आधार व्यापार थियो , त्यसकारण यो व्यापारिक पूँजीवाद (Mercantile Capitalism) थियो ।

२) प्रतिस्पर्धी पूँजीवाद(Competitive Capitalism)– यो चरण सोह्रौं शताब्दीबाट आरम्भ भएको थियो र उन्नाइसौं शताब्दीसम्म रहेको थियो । यसको आधार उद्योग थियो , त्यसकारण यो औद्योगिक पूँजीवाद (Industrial Capitalism) थियो ।

३) एकाधिकारी पूँजीवाद( Monopoly Capitalism)– यसको आरम्भ बीसौँ शताब्दीबाट भएको थियो र यो आधा शताब्दीसम्म (१९४५सम्म) रह्यो । यो वित्तमा आधारित पूँजीवाद अथवा वित्तीय पूँजीवाद Financial Capitalism) थियो ।

तर सन् १९४५ बाट पूँजीवादले एकीकरणको चरणमा प्रवेश ग¥यो । यो नै पूँजीवादको वर्तमान चरण हो ।

पूँजीवादको आरम्भमा प्रतिस्पर्धालाई यसको अनिवार्य शर्त मानिन्थ्यो । तर वर्तमान समयमा एकता पूँजीवादको लागि अनिवार्य शर्त र लाभदायक भएको छ । त्यसकारण वर्तमान पूँजीवादको विशेषता प्रतिस्पर्धा होइन, एकता हो ।

वर्तमान पूँजीवाद प्रतिस्पर्धी छैन; त्यसको विपरित, यो एकीकृत भएको छ , जुन भूमण्डलीकरण (नयिदबष्शिबतष्यल) को रुपमा व्यक्त भएको छ । त्यसकारण यो एकीकृत पूँजीवाद हो । अर्को शब्दमा, यसलाई अन्तर्सम्बन्धित पूँजीवाद भन्न सकिन्छ ।

पूँजीवादको एकीकरणका तीन चरणहरु तथा प्रक्रियाहरु छन्– (१)सिण्डिकेट, (२) कार्टेल र (३) कर्पोरेशन

१) सिण्डिकेट– समान प्रकारका उद्यमहरु मिलेर सिण्डिकेट बन्दछ , अथवा समान प्रकारका उद्यमहरुको संयोजनबाट सिण्डिकेट बन्दछ, जसको उद्देश्य मूल्य निश्चित गर्नु हो । यसले प्रतिस्पर्धाबाट हुने मूल्यको ह्रासलाई नियन्त्रण गर्दछ ।

२) कार्टेल – भिन्न प्रकारका तर परिपूरक उद्यमहरुको संयोजनबाट कार्टेल बन्दछ । अथवा असमान तर अन्तर्निभर उद्यमहरु मिलेर कार्टेल बन्दछ, जसको उद्देश्य उत्पादन लागत घटाउनु हो ।

३) निगम(अयचउयचबतष्यल)– सम्पूर्ण उद्यमहरु मिलेर निगम बन्दछ । अथवा सवै प्रकारका उद्यमहरुको संयोजनबाट निगम बन्दछ । यसको उद्देश्य सम्पूर्ण क्षेत्रमा एकाधिकार कायम गर्नु हो । अथवा यसको उद्देश्य सम्पूर्ण मानवीय आवश्यकताहरु पूरा गर्नु र ग्राहकलाई आफ्नो परिधि (क्षेत्र) भन्दा बाहिर जान नदिनु हो । त्यसकारण एउटा निगमले सवै आवश्यक वस्तुहरुको र सेवाहरुको उत्पादन गर्दछ– सियोदेखि रकेटसम्म, जुत्तादेखि ताजसम्म , चुरोटदेखि औषधिसम्म । बहुराष्ट्रिय कम्पनीहरु यसका उदाहरण हुन् ।
यी तीन चरणहरु र प्रक्रियाहरुबाट वर्तमान पूँजीवाद एकीकृत वा अन्तर्सम्बन्धित भएको छ ।

वर्तमान एकीकृत पूँजीवाद विज्ञान –प्रविधिमा आधारित छ । अर्थात् वर्तमान एकीकृत पूँजीवादको आधार विज्ञान–प्रविधि हो ।

## ३. पूँजीवादको आधारको रुपमा विज्ञान–प्रविधि

सन् १९३०को दशक र १९४० को दशकको बीचमा कोलिन क्लर्कले अर्थतन्त्रमा "तृतीय क्षेत्र", सेवा क्षेत्रको बढ्दो महत्वमाथि ध्यानाकर्षित गरेका थिए । तर यो दृष्टिकोणले वर्तमान समयमा भइरहेको रुपान्तरणको केन्द्रमा पर्याप्त जोड दिएको छैन ः त्यो हो पूँजीवादी उत्पादनका सम्पूर्ण गतिशील क्षेत्रहरुमा विज्ञान –प्रविधिको बढ्दो महत्व । पूँजीवाद आज सदाको भन्दा धेरै शक्तिशाली छ, र हामी पूँजीवादको एउटा नयाँ युगको उद्घाटन भइरहेको देखिरहेका छौँ , जसमा निगमहरु (अयचउयचबतष्यलक) ले नयाँ वस्तुहरु तथा नयाँ योजनाहरुको विकास गर्नको लागि विज्ञान –प्रविधिको उपयोग गर्दछन्, र जसमा एकाधिकारको सृजनाको लागि प्रतिस्पर्धात्मक संघर्षले एउटा स्थायी आधार प्राप्त गर्दछ ।

यो नयाँ पूँजीवाद विज्ञान –प्रविधिका विकास तथा क्षमतामा निर्भर छ, जसमा नव–प्रवत्र्तन को स्रोत अनुसन्धान तथा विकास हुन् । विज्ञान –प्रविधिको विकासमाथि पूँजीवादको अधिकार नै यसको वर्तमान "अग्रगामी छलाङ्ग"को र स्थिर अर्थतन्त्र भएका देशहरुमाथि यसको वर्तमान विजयको एउटा अनिवार्य पक्ष हो ।

वर्तमान युगका विकासहरुमा गतिको केन्द्र विशाल पूँजीवादी कर्पोरेशनहरुमा विज्ञान –प्रविधिको अधीनस्थतामा रहेको छ , जसले यसको प्रयोग आफ्ना उद्देश्यहरुको पूर्तिको लागि गर्दछन् । यी शक्तिशाली पूँजीवादी कर्पोरेशनहरुल त्यो प्रमुख आवेग प्रदान गर्दछन्, जसले पदार्थ, शक्ति, जैविक वस्तुहरु, विद्युत–चुम्बकीय सञ्चार र सूचना संग्रह

तथा प्रसारणजस्ता क्षेत्रहरुमा नयाँ वैज्ञानिक तथा प्राविधिक ज्ञानको उपयोग गराउँदछ ।

आज वैज्ञानिक ज्ञानका प्रभावहरु हरेक आर्थिक क्षेत्रमा– कृषिदेखि यातायातसम्म– र विभिन्न सेवा क्षेत्रहरुमा–उदाहरणको लागि स्वास्थ्य , संस्कृति, शिक्षा, मनोरञ्जन तथा प्रशासन – देखिन्छन् । विशाल आकारका वैज्ञानिक –प्राविधिक प्रणालीहरुले– जुन वैज्ञानिक तथा प्राविधिकहरुका समूहहरुद्वारा निर्मित तथा सञ्चालित हुन्छन् – नयाँ वस्तुहरु र बजारहरुको सृजना र विकास गर्दछन् (वस्तुहरु , पदार्थहरु, सेवाहरु), जसको उत्पादन पनि विज्ञानमा आधारित प्राविधिक ज्ञानद्वारा हुन्छ । हामी बाँच्ने तरीका र हाम्रो समाजले काम गर्ने तरीका दुवै यो प्रक्रियाबाट पूर्णरुपले प्रभावित छन् ।

वर्तमान पूँजीवादी उत्पादनमा उत्पादित वस्तुहरु अत्यन्त जटिल स्वरुपका छन् , जसको खरिद अलग–अलग ढंगबाट गर्न सकिन्छ तर अन्य भागहरुबिना तिनीहरु उपयोगहीन हुन्छन् ; उदाहरणको लागि सफ्टवेयर प्रोग्राम , नेटवर्क सब्स्क्रीप्सन, विभिन्न संयोजक घटकहरु । अल्पसंख्यक विशाल कर्पोरेशनहरुद्वारा नियन्त्रित र निरन्तर नवीकृत प्रविधिहरुको संयोजनले जोडिएका यी नयाँ वस्तुहरु सञ्जालहरु (लभतधयचपक)र प्रणालीहरुमा आबद्ध छन् , जसले आफ्नै कार्यविधिहरु र मान्यताहरु स्थापित गर्दछन् । यी नयाँ सञ्जालहरु र प्रणालीहरुविज्ञान –प्रविधिमा आधारित छन् , र त्यसैकारण यिनीहरु पूर्णरुपले त्यस्ता विज्ञान कम्पनीहरु तथा कर्पोरेशनहरुमा निर्भर छन् , जुन स्वयंले विज्ञान –प्रविधिको नियन्त्रण गर्दछन् । त्यसकारण यो नयाँ पूँजीवादको शिखरमा हुनुको अर्थ नयाँ वैज्ञानिक –प्राविधिक विकासहरुमा पारंगत हुनु हो ।

वर्तमान उत्पादन प्रक्रियामा दुई रणनीतिक क्षेत्रहरु अन्तर्सम्बन्धित भएका छन् – मातृ प्रविधिहरुको क्षेत्र (कम्प्युटर , दूरसञ्चार, जैवप्रविधि, विशेषगरी जेनेटिक इन्जिनियरिङ्ग र पदार्थ विज्ञान, इत्यादि) र तिनीहरुको संयोजनको क्षेत्र (अन्तरिक्ष प्रविधि , भूमण्डलीकृत सूचना तथा बहुसञ्चार , स्वास्थ्य, इत्यादि) । यी क्षेत्रहरुमध्ये प्रत्येकमा केवल विशाल कर्पोरेशनहरु मात्र , जुन अन्य अत्यन्तै उच्च ढंगबाट विशिष्टीकृत कम्पनीहरुको साथमा काम गर्दछन्, नयाँ प्रणालीहरु तथा वस्तुहरुको उत्पादनको लागि विज्ञान –प्रविधिको सञ्चालन , नियन्त्रण र निर्देशन गर्ने स्थानमा रहन्छन् ।

यो नयाँ उत्पादन प्रक्रिया तथा नयाँ प्राविधिक प्रतिस्पर्धाको लागि अनुसन्धान , उपकरण तथा तालिममा अझ धेरै लगानीको आवश्यकता पर्दछ । परिणामस्वरुप प्रत्येक रणनीतिक क्षेत्रमा केवल अल्पसंख्यक कर्पोरेशनहरुको मात्र प्रमुख हुन्छ ।

सन् १९९० को दशकदेखि करिब यी सबै क्षेत्रहरुमा संकेन्द्रण बढेको छ , र पूँजीवादीहरुका ध्रुवहरुको बीचमा तथा प्रत्येक ध्रुवभित्र पनि संझौताहरु , गठबन्धनहरु र व्यापारहरु भइरहेका छन् ।

यो सामान्यीकृत (भूमण्डलीकृत) पूँजीवादको निर्णायक स्थानमा रहन चाहने कुनै पनि देशले नयाँ वैज्ञानिक –प्राविधिक विकासहरुमा पारंगत हुनुपर्दछ ।
विज्ञान–प्रविधिमा आधारित वर्तमान विशाल कर्पोरेशनहरुले (निगमहरुले) केवल उत्पादन तथा बजारमा मात्र प्रभाव पार्दैनन् ; तिनीहरुले अनुसन्धानको निर्देशन, उत्पादनहरुको परिकल्पना, प्रणालीहरुको निर्माण, मागको सृजना र अन्ततः जीवनशैली तथा भावी समाजको स्वरुपलाई निर्धारण पनि गर्दछन् ।

तर पनि विज्ञान –प्रविधिमा आधारित पूँजीवादको उदयसँगै आद्योगिक पूँजीवादको लोप भएको छैन । मानव समाजको विकास क्रममा सदा के देखिन्छ भने अगाडिका चरणहरु कमजोर बन्दछन् र पछाडिका चरणहरु प्रबल बन्दछन् ।त्यसैगरी

वर्तमान युगमा औद्योगिक पूँजीवाद कमजोर बनिरहेको छ र विज्ञान –प्रविधिमा आधारित पूँजीवादले शक्ति प्राप्त गरिरहेको छ । यसको साथसाथै, अगाडिका सामाजिक चरणहरु , सामान्यतया अगाडिका उत्पादनका रुपहरु , नयाँ आकारमा ढालिन्छन् – जसरी कृषि तथा घरेलु जीवन औद्योगिक पूँजीवादको नव –प्रवत्र्तक शक्तिद्वारा पूर्णरुपले रुपान्तरित भएका थिए , त्यसैगरी औद्योगिक पूँजीवादका सवै सामाजिक क्रियाकलापहरु– घरेलु जीवन , कृषि, यातायात, उद्योग, स्वास्थ्य सेवा , सूचना–सञ्चार, आदि– विज्ञान–प्रविधिमा आधारित वर्तमान पूँजीवादको नव–प्रवत्र्तक शक्तिद्वारा गम्भिर रुपले रुपान्तरित भइरहेका छन् ।

मानव समाजका पूर्ववर्ती चरणहरुको तुलनामा उत्तरवर्ती चरणहरुमा गतिविधिहरुको विस्तार पनि उल्लेखनीय देखिन्छ । म्यानुफ्याक्चर कालको पूँजीवादले आपूmलाई मुख्यतया कपडा उत्पादनमा लगाएको थियो , औद्योगिक पूँजीवादले आफ्नो कार्यक्षेत्रलाई अत्यन्तै विविधीकृत वस्तुहरुको उत्पादनमा विस्तार ग ¥यो, र विज्ञान –प्रविधिमा आधारित वर्तमान पूँजीवादले आपू mलाई मानव जीवनको हरेक क्षेत्रमा पु ¥याएको छ– ज्ञान, वस्तु उत्पादन र सेवा । यस अर्थमा , विज्ञान–प्रविधिमा आधारित पूँजीवादको उदयसँगै हामी पूँजीवादको गतिविधिको क्षेत्र विस्तृत तथा सार्वभौमिक भइरहेको देखिरहेका छौं ।

यसप्रकार, पूँजीवादले विश्व र यसका समाजहरुमाथि पहिलेभन्दा अझ धेरै प्रभुत्व जमाएको छ । व्यापारिक पूँजीवादको उदय युरोपमा चौधौं शताब्दीदेखि सोह्रौं शताब्दीमा भएको थियो । औद्योगिक पूँजीवाद सत्रौं शताब्दीदेखि उन्नाइसौं शताब्दीमा आएको थियो । त्यसपछि बीसौं शताब्दीमा वित्तीय पूँजीवाद आयो । अब एक्काइसौं शताब्दी वैज्ञानिक–प्राविधिक पूँजीवादको युग बन्नलागेको छ । यद्यपि हामीहरु आज यसका सम्पूर्ण अभिव्यक्तिहरु देख्नबाट धेरै टाढा छौं, तर पूँजीवादको यो नयाँ चरण वर्तमान समाजको “आमूल रुपान्तरण”को आधारभूत तत्व हो भन्ने कुरामा कुनै शंका छैन ।

त्यसकारण वर्तमान पूँजीवाद वैज्ञानिक –प्राविधिक पूँजीवाद हो ।

## ३. उत्पादन क्षेत्रबाट मानव श्रमको विस्थापन

मानव समाजको इतिहासमा मानवश्रम सदा प्रमुख उत्पादक शक्ति रहिआएको थियो । तर यसको विपरित वर्तमान युगमा मानवश्रम उत्पादन क्षेत्रबाट विस्थापित भएको छ । अब यो समाजको प्रमुख उत्पादक शक्ति रहेको छैन ।

मानवश्रमको भूमिका (१) शक्ति , (२) कुशलता, र (३) नियन्त्रण हो । यी तीनै भूमिकाहरुलाई वर्तमान विज्ञान–प्रविधिले विस्थापन गरेको छ ः शक्तिलाई प्राकृतिक शक्तिद्वारा , कुशलतालाई यन्त्रद्वारा र नियन्त्रणलाई स्वचालनद्वारा ।

उत्पादन क्षेत्रलाई तीन श्रेणीहरुमा विभाजन गरिएको छ – (१) प्राथमिक क्षेत्र (उचष् mबचथ कभअतयच), (२) द्वितीय क्षेत्र (कभअयलमबचथ कभअतयच) र (३) तृतीय क्षेत्र (तभचतष्बचथ कभअतयच) । प्राथमिक क्षेत्रमा कृषि , द्वितीय क्षेत्रमा उद्योग र तृतीय क्षेत्रमा सेवा पर्दछन् । यी क्षेत्रहरुमा श्रमको संलग्नता क्रमशः स्थानान्तरण भएर वर्तमान युगमा सेवा क्षेत्रमा पुगेको छ । तर सेवा क्षेत्र उत्पादनको सहायक क्षेत्रमा पर्दछ । त्यसकारण वर्तमान समाजमा मानव श्रमको भूमिका पनि सहायक बनेको छ।

## ४. समाजको नयाँ संरचना

उत्पादनका क्षेत्रबाट मानव श्रम –शक्तिको विस्थापन भएपछि मानव श्रम सामाजिक

व्यवस्थाको आधार रहेन । परिणामस्वरुप अहिले समाजको विभाजन र स्तरीकरणका अन्य गौण तत्वहरु प्रभावकारी बनेर सतहमा आएका छन् । ती तत्वहरु हुन्– लिङ्गं, जाति, वर्ण, समुदाय, धर्म, क्षेत्र, आदि । यी तत्वहरुले वर्तमान समाजमा ठूलो विषमता सृजना गरेका छन् । वर्गीय विभेदको स्थान लिङ्गीय, जातीय, धार्मिक, क्षेत्रीय विभेदहरुले लिएका छन् । समाजमा मानिसहरुको सम्बन्ध र एकताको आधारको रुपमा , वर्गीकरणको आधारको रुपमा अन्य गौण तत्वहरु प्रभावकारी बनेका छन् । तर यसको अर्को पक्ष पनि छ , जुन क्रान्तिको लागि अत्यन्त महत्वपूर्ण छ ।

उत्पदक शक्तिको रुपमा विज्ञान –प्रविधिको विकास र त्यसमाथि पूँजीपति वर्गको एकाधिकारको परिणामस्वरुप समाजका बहुसंख्यक मानिसहरु उत्पादन क्षेत्र र सम्पदा (सम्पत्ति) को स्वामित्व दुवैबाट विस्थापित भएका छन् । यिनीहरुबाट अब एउटा नयाँ वर्गको निर्माण भइरहेको छ । यही वर्ग वर्तमान युगको सवैभन्दा क्रान्तिकारी वर्ग हो , किनभने यससँग गुमाउनको लागि आफ्नो केही पनि छैन, तर जित्नको लागि सम्पूर्ण संसार छ , र यो वर्तमान पूँजीवादी व्यवस्थाको अनिवार्य परिणाम, वैध सन्तान, हो ।

## ३. भविष्यको योजना

विगतको समीक्षा र वर्तमानको विश्लेषणपछि अब हामी भविष्यको योजना निर्माणको बिन्दुमा आइपुगेका छौं । यसका ४ संघटकहरु छन् – (१) क्रान्तिको लक्ष्य , (२) क्रान्तिका साधनहरु , (३) क्रान्तिको विधि, र (४) समाजवादको स्वरुप ।

### १. क्रान्तिको लक्ष्य

विश्वमा सर्वहारा वर्गको राजनीतिक आन्दोलन शुरु भएपछि तीनवटा सामाजिक परिवेशहरु आए – (१) प्रतिस्पर्धी पूँजीवाद (२) एकाधिकारी पूँजीवाद, र (३) अर्ध–सामन्ती र अर्ध –उपनिवेशी अवस्था (उपनिवेशवाद) ।

**१) प्रतिपर्धी पूँजीवाद** – प्रतिस्पर्धी पूँजीवादको अवस्थामा पूँजीपति वर्गहरुको बीचमा तीव्र प्रतिस्पर्धाको कारण सम्पूर्ण विश्वभरि पूँजीवाद कमजोर भएको थियो । त्यसकारण सम्पूर्ण विश्वभरि एकैपटक समाजवादी क्रान्ति संभव थियो । त्यही अवधिमा माक्र्सवादको उदय भएको थियो , जसले क्रान्तिको लक्ष्यको रुपमा समाजवाद र क्रान्तिको विधिको रुपमा सशस्त्र जनविद्रोहद्वारा सम्पूर्ण विश्वभरि (कम्तीमा पनि बेलायत, फ्रान्स र जर्मनी तीन ठूला पूँजीवादी देशहरुमा) एकैपटक क्रान्ति सम्पन्न गर्ने कुरालाई निर्धारित गरेको थियो । पेरिस कम्युनको असफलता त्यसको पुष्टि थियो । त्यो अवस्था आरम्भदेखि सन् १९०० सम्म रहयो ।

**२) एकाधिकारी पूँजीवाद** – सन् १९०० सम्ममा प्रतिस्पर्धी पूँजीवाद एकाधिकारी पूँजीवादमा , साम्राज्यवादमा रुपान्तरित भइसकेको थियो । फलस्वरुप सम्पूर्ण विश्वमा एकैपटक समाजवादी क्रान्ति हुने अवस्था समाप्त भएको थियो । भी.आई. लेनिनले यो तथ्यलाई महसुस गरेर एउटा देशमा वा केही देशमा मात्र समाजवादी क्रान्ति गर्नुपर्ने मान्यतालाई अगाडि सारे । तर दोस्रो कम्युनिस्ट अन्तर्राष्ट्रियले प्रथम कम्युनिस्ट अन्तर्राष्ट्रियकै मान्यतालाई अगाडि बढाएको थियो । त्यसकारण लेनिन र दोस्रो कम्युनिस्ट अन्तर्राष्ट्रिका नेताहरुको बीचमा मतभेद उत्पन्न भयो । लेनिन रुसमा समाजवादी क्रान्ति गर्न चाहन्थे, तर दोस्रो कम्युनिस्ट अन्तर्राष्ट्रिका नेताहरुलाई त्यो कुरा मान्य थिएन । अन्ततः लेनिनले दोस्रो कम्युनिस्ट अन्तर्राष्ट्रिलाई नै परित्याग गरे ।

पूँजीवादको नयाँ स्वरुप साम्राज्यवादको विश्लेषण गरेर लेनिनले नयाँ (क्रान्तिको) अवधारणा प्रस्तुत गरे, जुन लेनिनवादको नामले परिचित छ । लेनिनवादले क्रान्तिको लक्ष्यको रुपमा समाजवाद र क्रान्तिको विधिको रुपमा एउटा देशमा वा केही देशहरुमा मात्र सशस्त्र जनविद्रोहद्वारा क्रान्ति गर्ने कुरालाई अगाडि सा¥यो । त्यसैअनुरुप रुसमा सन् १९१७ को अक्टोबरमा समाजवादी क्रान्ति सम्पन्न भयो।

**३) अर्ध –सामन्ती र अर्ध –उपनिवेशी अवस्था** – साम्राज्यवादको आगमनपछि विश्वमा दुई अवस्थाहरु सृजना भए– (१) एक वा केही देशहरुमा मात्र समाजवादी क्रान्ति हुनसक्ने र (२) पूँजीवादी क्रान्ति नभएका देशहरुमा समाजवादी र पूँजीवादी क्रान्ति दुवै हुन नसक्ने । (अथवा (१) सम्पूर्ण विश्वमा एकैपटक समाजवादी क्रान्ति नहुने , र (२) पूँजीवादी क्रान्ति नभएका देशहरुमा पूँजीवादी क्रान्ति र समाजवादी क्रान्ति दुवै नहुने ।)

यी दुई अवस्थाहरुमध्ये प्रथम अवस्थाले लेनिनवादलाई जन्म दियो र दोस्रो अवस्थाले मओवादलाई ।
तर पनि , यो दोस्रो अवस्थालाई बेवास्ता गरेर (ध्यान नदिई) तेस्रो कम्युनिस्ट अन्तर्राष्ट्रियले चिनियाँ कम्युनिस्ट पार्टीलाई कोमिन्ताङ पार्टीको अधीनमा रहेर पूँजीवादी क्रान्तिको लागि सहयोग गर्न निर्देशन दिएको थियो । तर माओ त्से –तुङले त्यसलाई अस्वीकार गरे । त्यसको प्रतिउत्तरमा उनले भनेका थिए – "हामी जुत्ताको नापअनुसार खुट्टा काट्दैनौं, खुट्टाको नापअनुसार जुत्ता काट्छौं । चीनको विशेषतासँग नमिल्ने कुरा , चाहे त्यो मार्क्सले नै भनेको किन नहोस् , त्यसलाई हामी दृढतापूर्वक अस्वीकार गर्दछौं । "चीनको त्यो विशेषता के थियो त ? माओका अनुसार चीनको त्यो विशेषता अर्ध –सामन्ती र अर्ध –उपनिवेशी अवस्था थियो । त्यस्तो अवस्थाको देशमा साम्राज्यवादको हस्तक्षेप भएको हुँदा पूँजीवादी क्रान्ति हुनसक्दैन र पूँजीवादी क्रान्ति नभइसकेको हुँदा समाजवादी क्रान्ति पनि हुनसक्दैन । तब त्यस्ता देशहरुमा कस्तो क्रान्ति हुनसक्दछ त ? त्यसको लागि माओले क्रान्तिको लक्ष्यको रुपमा नयाँ जनवाद र क्रान्तिको विधिको रुपमा संयुक्त मोर्चाको माध्यमबाट दीर्घकालीन जनयुद्ध प्रस्तुत गरे । त्यसकै आधारमा चीनमा सन् १९४९ मा नयाँ जनवादी क्रान्ति सम्पन्न भयो । चिनियाँ जनवादी क्रान्ति माओवादको पुष्टि थियो ।

तर अहिले विश्वमा नयाँ परिवेश आएको छ । सन् १९५० देखि पूँजीवादले नयाँ चरणमा प्रवेश गरेको थियो । त्यो चरण हो – एकीकरणको चरण, जुन भूमण्डलीकरणको रुपमा व्यक्त भएको छ । एकीकृत पूँजीवादको चरणमा क्रान्तिको लक्ष्य नयाँ जनवाद हुन सक्दैन , किनभने त्यो पूँजीवादको एकाधिकारी चरणको कार्यक्रम थियो । अहिले सम्पूर्ण विश्वका पूँजीवादीहरु एकीकृत भएका छन् , त्यसकारण अब पूँजीपति वर्गको कुनै पनि पक्षसँग संयुक्त मोर्चा हुनसक्दैन , जुन नयाँ जनवादको अनिवार्य शर्त हो ।

वर्तमान एकीकृत पूँजीवादको (भूमण्डलीकृत पूँजीवादको) विकल्प समाजवाद मात्र हुन सक्दछ , समाजवादभन्दा तलको कार्यक्रमले (सामाजिक व्यवस्थाले) यसको सामना वा मुकाबिला गर्नसक्दैन । त्यसकारण अब सर्वहारा वर्गीय क्रान्तिको लक्ष्य नयाँ जनवाद होइन , समाजवाद हुनुपर्दछ । अन्ततः सर्वहारा वर्गको लक्ष्य त समाजवाद–साम्यवाद नै हो । त्यो समय अब आइसकेको छ ।

## २. क्रान्तिका साधनहरु

हरेक शासक व्यवस्थाका निश्चित , आधारभूत संघटकहरु हुन्छन् , जसको आधारमा त्यो अस्तित्वमा, सत्तामा रहन्छ । तिनीहरु हुन् – १) विचारधारा, २) संगठन , ३) सेना , ४) राजनीतिक

सत्ता, र ५) अर्थतन्त्र । त्यसकारण कुनै पनि शासक व्यवस्थालाई ध्वस्त पार्नको लागि यिनै पाँच तत्वहरुको आवश्यकता पर्दछ , तर तिनीहरुको स्वरुप विपरित हुनपर्दछ । यी तत्वहरु नै क्रान्तिका साधन हुन्छन् । यस आधारमा वर्तमान पूँजीवादलाई ध्वस्त पार्नको लागि आवश्यक क्रान्तिका साधनहरु निम्नानुसार हुनेछन् – १) विचारधाराको रुपमा द्वन्द्वात्मक भौतिकवाद २) संगठनको रुपमा भूमण्डलीकृत पूँजीवादबाट उत्पीडित सम्पूर्ण पक्षहरुको संगठन , ३) सेनाको रुपमा जनसेना , ४) राजनीतिक सत्ताको रुपमा जनताको प्रत्यक्ष शासन , र ५) अर्थतन्त्रको रुपमा अन्तर्सम्बन्धित अर्थतन्त्र ।
यी साधनहरुको विकास गरेर पूँजीवादको विरुद्ध समानान्तरमा नयाँ सामाजिक व्यवस्था समाजवादको निर्माण गर्नुपर्दछ , जसबाट एउटा सामाजिक शक्ति उत्पन्न हुन्छ । त्यही शक्तिले वर्तमान पूँजीवादलाई ध्वस्त बनाउनेछ ।

**१) विचारधारा**

हरेक सामाजिक व्यवस्थाको आफ्नो एउटा वैचारिक आधार हुन्छ । त्यसलाई ध्वस्त पार्नको लागि त्यसको वैचारिक आधारलाई ध्वस्त पार्नुपर्दछ । उदारहणको लागि , विगतमा सामन्तवादी व्यवस्थाको वैचारिक आधार धार्मिक विचारधारा थियो । त्यसलाई ध्वस्त पार्नको लागि पूँजीवादले भौतिकवादी विचारधारालाई अगाडि ल्यायो । त्यसकारण पूँजीवादी व्यवस्थाको विचारधारा भौतिकवाद हो । अब यसलाई ध्वस्त पार्नको लागि द्वन्द्वात्मक भौतिकवादको आवश्यकता छ । पूँजीवादको विचारधाराको रुपमा रहेको (आएको) भौतिकवाद अधिभूतवादी भौतिकवाद हो । यसले विश्वको अपरिवर्तनशीलताको , यथास्थितिको, पूँजीवादको शाश्वतताको पक्षपोषण गर्दछ । त्यसकारण यसलाई द्वन्द्वात्मक भौतिकवादले विस्थापन गर्दछ , जसले सम्पूर्ण विश्वको गतिशीलता, परिवर्तनशीलताको पक्षपोषण गर्दछ । अधिभूतवादी भौतिकवादको लागि पूँजीवाद नित्य , अपरिवर्तनशील र अनैतिहासिक छ । इतिहास विगतमा थियो , अब पूँजीवादको युगमा छैन । त्यसकारण इतिहासको अन्त्य भयो (फुकुयामा , त्जभ भ्लम या ज्ष्कतयचथ)। यो मानव समाजको तार्किक निष्कर्ष हो, इतिहासको अन्तिम चरण हो ।

आज पूँजीवादी विचारधारामा अधिभूतवादी दर्शनका विभिन्न रुपहरु व्याप्त छन् – अस्तित्वाद, शून्यवाद, उपभोक्तावाद, प्रत्यक्षवाद, सारसंग्रहवाद, आदि । यिनीहरु सवैको उद्देश्य पूँजीवादी व्यवस्थालाई सही, निर्विकल्प सिद्ध गर्नु हो ।

यसको विपरित, द्वन्द्वात्मक भौतिकवादको लागि कुनै पनि वस्तु अन्तिम, निरपेक्ष तथा शाश्वत छैन । यसले हरेक वस्तुमा र हरेक वस्तुको परिवर्तनशील गुण प्रदर्शित गर्दछ , यसको सामु निम्नावस्थाबाट उच्चावस्थातिर जाने अन्तहीन (असीमित) विकासक्रम , उत्पत्ति र विनाशको अनवरत प्रक्रियाबाहेक अरु कुनै वस्तु रहन सक्दैन । यसले अन्तिम , निरपेक्ष सत्य र तदनुरुप मानवजातिका निरपेक्ष अवस्थाहरुका अवधारणाहरुलाई अन्त्य गरिदिन्छ । यसले के मान्दछ भने ज्ञान र समाजका निश्चित अवस्थाहरु समय र परिस्थितिको सन्दर्भमा न्यायसंगत छन् , तर त्यहीसम्म मात्र । उत्कृष्ट समाज , उत्कृष्ट राज्य, यी सवै कल्पनाको संसारमा मात्र अस्तित्वमान हुनसक्दछन् । यसको विपरित , सवै निरन्तर घटित हुने सामाजिक अवस्थाहरु (व्यवस्थाहरु) मानव समाजको निम्नावस्थाबाट उच्चावस्थातिर जाने, अन्तहीन विकासक्रमका केवल अल्पकालीन चरणहरु मात्र हुन् । हरेक चरण आवश्यक हुन्छ , त्यसकारण जुन समय र परिस्थितिहरुको कारण त्यसको उत्पत्ति हुन्छ , तिनीहरुको लागि त्यो उचित हुन्छ । तर नयाँ र उच्चतर परिस्थितिहरुको सामु , जुन विस्तार – विस्तार त्यसको गर्भमा विकसित हुन्छन् , त्यसले

आफ्नो वैधता र औचित्य गुमाउँदछन् । त्यो त्यस उच्चतर चरणको लागि स्थान छोड्न बाध्य हुन्छ , जुन स्वयं आफ्नो पालोमा एकदिन विनाश भएर लोप हुनेछ ।

यस दृष्टिकोणअनुसार पूँजीवाद कुनै शाश्वत , अन्तिम, पूर्ण र निरपेक्ष व्यवस्था होइन , जसरी पूँजीवादीहरुले दावी गर्दछन् । यो पनि विगतका अन्य व्यवस्थाहरुजस्तै मानव समाजको विकासक्रमको एउटा चरण मात्र हो । त्यसकारण यसको अन्त्य सुनिश्चित छ ।

**२) संगठन**

राजनीतिक संगठनको कार्य सम्पूर्ण क्रान्तिकारी वर्गहरुलाई (शक्तिहरुलाई) एकताबद्ध गर्नु हो । जब छरिएर रहेका वर्गहरु संगठित हुन्छन् , तब एउटा निर्णायक शक्तिको सृजना हुन्छ ।

विगतमा समाजवादी क्रान्तिको लागि श्रमिक वर्गलाई निर्णयक प्रमुख शक्ति मानिएको थियो र श्रमिक संगठनलाई क्रान्तिको प्रमुख साधन । तर जब उत्पादन क्षेत्रमा विज्ञान –प्रविधिको आगमन भयो र यसले उत्पादन क्षेत्रबाट श्रम –शक्तिलाई विस्थापित ग¥यो, तब श्रमिक वर्गको संख्या घट्न थाल्यो । अहिले श्रमिक वर्ग अत्यन्तै सानो , अल्पसंख्यक छ । त्यसकारण अब यसले समाजवादी क्रान्तिको लागि निर्णायक भूमिका निर्वाह गर्नसक्दैन । र , श्रमिक संगठन निर्णायक साधन हुनसक्दैन । समाजवादी क्रान्तिको लागि निर्माण हुने संगठनमा ती सम्पूर्ण पक्षहरु सम्लग्न हुनुपर्दछ, जुन वर्तमान भूमण्डलीकृत पूँजीवादबाट उत्पीडित छन् र जसको मुक्ति समाजवादमा मात्र सम्भव छ । अब श्रमिक संगठनले ती सम्पूर्ण पक्षहरुलाई समेट्न सक्दैन , जुन वर्तमान युगका निर्णायक क्रान्तिकारी शक्ति हुन् । विशेषगरी यसले त्यो पक्षलाई समेट्न सक्दैन , जुन वर्तमान पूँजीवादको अनिवार्य परिणाम हो– अर्थात् उत्पादन क्षेत्रबाट विस्थापित, सीमान्तकृत वर्ग । यही वर्ग वर्तमान युगको वास्तविक क्रान्तिकारी वर्ग (शक्ति) हो । यो वर्ग वर्तमान पूँजीवादी व्यवस्थाको तख्ता नपल्टाई अस्तित्वमा रहन सक्दैन । त्यसकारण नयाँ क्रान्तिकारी संगठन यही वर्गलाई लिएर बन्दछ ।

अब श्रमिक वर्गले समाजवादी क्रान्तिको नेतृत्व गर्नसक्दैन; किनभने एकातिर अहिले यसको आकार सानो भएको छ, र अर्कोतिर वर्तमान समाज श्रम– शक्तिमा आधारित छैन , विज्ञान–प्रविधिमा आधारित छ ।

**३) सेना**

हरेक शासक वर्गसँग आफ्नो सेना हुन्छ । त्यसले सेनाको बलमा आफ्नो विरोधीलाई दबाउने र आफ्नो सत्ता कायम राख्ने प्रयत्न गर्दछ । त्यसकारण शासक वर्गलाई पराजित गर्नको लागि त्यसको सेनालाई पराजित गर्नु आवश्यक हुन्छ ।

अहिले पूँजीवादीहरुसँग दुई स्तरका सेनाहरु छन् – (१) राष्ट्रिय स्तरको सेना , र (२) अन्तर्राष्ट्रिय स्तरको सेना । राष्ट्रिय स्तरको सेनाको रुपमा उनीहरुको सेना आफ्नो देशको सेना हो । किनभने वर्गीय दृष्टिकोणबाट उनीहरु सत्तारुढ (सत्ताधारी) वर्ग हुन् र पूँजीवादी व्यवस्थाका सम्पूर्ण तत्वहरुले उनीहरुको सेवा गर्दछन् । अन्तर्राष्ट्रिय स्तरको सेनाको रुपमा उनीहरुको सेना नेटो (ल्बत्इ) सेना र संयुक्त राष्ट्रसंघको सेना हुन् । (अथवा प्रत्यक्ष रुपमा नेटो सेना र अप्रत्यक्ष रुपमा संयुक्त राष्ट्रसंघको सेना हुन् ।) क्रान्तिकारी वर्गले पूँजीवादी वर्गका यी दुवै सेनाहरुको सामना गर्नु आवश्यक छ । त्यसकारण क्रान्तिकारी वर्गसँग पनि अब राष्ट्रिय र अन्तर्राष्ट्रिय स्तरका दुई प्रकारका सेनाहरु हुनुपर्दछ । र , यी सेनाहरु अत्याधुनिक हतियारले सुसज्जित हुनुपर्दछ, परमाणु बम तथा अन्तर –महादेशीय मिसाइलद्वारा

सुसज्जित हुनुपर्दछ । क्रान्तिकारी वर्गले अब राष्ट्रिय र अन्तर्राष्ट्रिय दुवै स्तरबाट युद्ध लड्नु , संघर्ष गर्नु आवश्यक छ ।

पूँजीवादीहरुले औपचारिक र आधिकारिक सेनाबाहेक अन्य सेनाको अस्तित्व मान्य हुँदैन भनेर यो क्रान्तिकारी सेनाको विरोध गर्न सक्दछन् । तर उनीहरुले आफ्नो विरोधको खण्डन आपंै m गरिरहेका छन् । त्यो हो – नेटो सेनाको अस्तित्व , जुन कुनै आधिकारिक र औपचारिक सेना होइन । यदि उनीहरुले आफ्नो रक्षाको लागि निजी सेना राख्न पाउँछन् भने, अरुले किन नपाउने ?

### ४) राजनीतिक सत्ता

नयाँ राजनीतिक सत्ताको निर्माण समाजका नयाँ संघटकहरुको रुपमा उत्पन्न भएका समूहहरु र संगठनहरुबाट हुन्छ । उदाहरणको लागि , रुसमा मजदूरहरु, किसानहरु र सैनिकहरुका सोभियतहरु समाजका नयाँ संघटकहरुको रुपमा उत्पन्न भएका थिए र तिनीहरुबाटै नयाँ राजनीतिक सत्ताको निर्माण भएको थियो ।

वर्ग–संघर्ष तबसम्म क्रान्तिमा रुपान्तरित हुँदैन , जबसम्म द्वैतसत्ताको अवस्था सृजना हुँदैन र द्वैतसत्ताको अवस्था तबसम्म सृजना हुँदैन , जबसम्म पुरानो राजनीतिक सत्ताको विरुद्ध समानान्तरमा नयाँ राजनीतिक सत्ताको उदय हुँदैन । नयाँ राजनीतिकसत्ताले पुरानो राजनीतिक सत्तालाई विस्थापित गर्दछ ।

वर्तमान पूँजीवादी राजनीतिक सत्तालाई विस्थापित गर्नको लागि क्रान्तिकारी वर्गसँग यसको विपरित नयाँ राजनीतिक सत्ता हुनु आवश्यक छ । यो राजनीतिक सत्ता संसदिय , प्रतिनिधिमूलक होइन, जुन बुर्जुवा व्यवस्थाको विशेषता हो , त्यसको विपरित यो जनताको प्रत्यक्ष शासना आधारित हुन्छ । पूँजीवादी व्यवस्थामा व्यक्तिको आधिकारिकको आधार योग्तालाई मानिन्छ , त्यसकारण अधिकार स्थापित गर्ने , अधिकार सिद्ध गर्ने विधि प्रतिस्पर्धा हुन्छ । तर समाजवाद हरेक व्यक्तिको अधिकार नैसर्गिक, जन्मसिद्ध हुन्छ । यो एक अर्थमा आदिम साम्यवादको नैसर्गिक अधिकारको पुनरावृत्ति हो, तर उही रुपमा होइन । आदिम साम्यवादको नैसर्गिक अधिकार योग्यतारहित थियो, तर यो समाजवादको नैसर्गिक अधिकार योग्तासहितको छ , किनभने आज कुनै पनि व्यक्ति अयोग्य छैन र कुनै पनि व्यक्ति विशेष योग्यताले सम्पन्न छैन । यो अधिकारको उच्चस्तरमा विकास हो ।

त्यसकारण अब मानिसहरु , जनता, समाजको प्रत्यक्ष शासनमा सहभागी हुन सक्दछन् । यही प्रत्यक्ष शासन नयाँ राजनीतिक सत्ताको रुप हो । एउटै देशमा दुई राजनीतिक सत्ताहरु कसरी मान्य हुन्छन् भन्ने प्रश्न पुँजीवादीहरुले उठाउन सक्दछन् । तर यसको बलियो उत्तर ताइवानको अस्तित्व हो, जसलाई चीनको विरोधको बावजुद तिनै पूँजीवादीहरुले मान्यता दिइरहेका छन् ।

### ५)अर्थतन्त्र

सर्वहारा वर्गको आन्दोलन सम्पूर्ण मानवजातिको मुक्ति–आन्दोलन हो । सर्वहारा वर्ग त्यो अन्तिम उत्पीडित वर्ग हो , जसको स्वतन्त्रता प्राप्तिसँगै वर्गीय समाज अन्त्य हुनेछ । सर्वहारा क्रान्तिबाट पुरानो शोषणमूलक सामाजिक व्यवस्थाको अन्त्य र नयाँ शोषणरहित सामाजिक व्यवस्थाको उदय हुनेछ । तर अहिले सर्वहारा वर्गको आन्दोलन अत्यन्त जटिल र दीर्घकालीन बनेको छ । आफ्नो विकासको क्रममा पूँजीवादले अनेकौँ संकटहरुलाई पार गरेर पुनर्जीवन प्राप्त गरेको छ र अझ शक्तिशाली बन्नगएको छ । उन्नाइसौँ शताब्दीको प्रथम संकटबाट बचेर पूँजीवाद साम्राज्यवादमा विकसित भएको थियो । बीसौँ शताब्दीको दोस्रो संकटबाट बचेर यो अहिले भूमण्डलीकृत पूँजीवाद

बनेको छ । यसका आधारहरु बहुराष्ट्रिय कम्पनी , विश्व व्यापार संगठन, विश्व बैंक, अन्तर्राष्ट्रिय मुद्रा कोष, आदि विश्वव्यापी संगठनहरु हुन् । यी विश्वस्तरीय संगठनहरुको सञ्जालद्वारा वर्तमान पूँजीवाद एकीकृत र सशक्त भएको छ । अर्कोतिर , सर्वहारा वर्ग विखण्डित र कमजोर भएको छ । उसको प्रतिरोध शक्ति प्रभावहीन भएको छ । फलस्वरुप उसको आन्दोलन शिथिल बन्नपुगेको छ ।

यो अवस्था सिर्जना हुनुको कारण विज्ञान – प्रविधिको उच्चतम विकास हुनगएको छ । पूँजीवादले पहिलो संकटलाई साम्राज्यवादको सहायताबाट पार गरेको थियो र यसले दोस्रो संकटलाई विज्ञान –प्रविधिको सहायताबाट पार गरेको छ । विज्ञान –प्रविधिको उपयोग गरेर अन्तर्राष्ट्रिय स्तरका आर्थिक संगठनहरुको माध्यमबाट भूमण्डलीकृत पूँजीवादले सम्पूर्ण विश्वको अर्थतन्त्रलाई आफ्नो नियन्त्रणमा लिएको छ । यसबाट पूँजीपतिहरुको आपसी संघर्ष तथा पूँजीपति वर्ग र सर्वहारा वर्गको बीचको संघर्ष दुवै शिथिल हुनगएका छन् । फलस्वरुप पूँजीवाद एक हदसम्म संकटमुक्त भएको छ ।

यसबाट अनिवार्य रुपमा एउटा निष्कर्ष निस्कन्छ – सर्वहारा वर्गको लागि आफ्नो स्वायत्त अर्थतन्त्रको आवश्यकता छ ।
यो अर्थतन्त्र निर्माणको लागि अहिले तीन अवस्थाहरु विद्यमान छन् । पहिलो , सर्वहारा वर्ग उत्पादन क्षेत्रबाट विस्थापित भएको छ । उत्पादन प्रक्रियामा भएको आमूल परिवर्तनले मानव श्रमलाई विस्थापित गरेको छ । मानव श्रमको स्थान यन्त्रले लिएको छ । फलस्वरुप सर्वहार वर्ग (श्रमिक वर्ग) उत्पादन क्षेत्रबाट विस्थापित भएको छ । त्यसकारण अब उसले आफ्नो अस्तित्वको लागि आफ्नो स्वायत्त अर्थतन्त्रको निर्माण गर्नु आवश्यक छ । दोस्रो , विज्ञान–प्रविधिको उच्च विकास भएको छ । वर्तमान युगमा विज्ञान – प्रविधिको विकास अत्यन्त उच्च स्तरमा भएको छ । फलस्वरुप विज्ञान –प्रविधि एउटा स्वायत्त उत्पादक शक्तिमा रुपान्तरण भएको छ । यसले प्राकृतिक शक्तिहरुजस्तै निःशुल्क सेवा प्रदान गर्दछ । तर यसलाई पूँजीपति वर्गले एकाधिकारी रुपमा प्रयोग गरेको छ र श्रमिक वर्गको विरुद्ध संघर्षको साधन बनाएको छ । त्यसकारण यो नयाँ उत्पादक शक्तिको रुपमा आएको विज्ञान – प्रविधिलाई उपयोग गर्नको लागि सर्वहारा वर्गले आफ्नो अर्थतन्त्र निर्माण गर्नुपर्दछ । र तेस्रो , भूमण्डलीकृत पूँजीवादले आर्थिक हस्तक्षेप गर्दछ । पुरानो साम्राज्यवादले प्रत्यक्ष रुपमा राजनीतिक हस्तक्षेप गर्दथ्यो । त्यसलाई उपनिवेशहरुको मुक्ति–आन्दोलनले अन्त्य गरिदियो । भूमण्डलीकृत पूँजीवादको रुपमा उदाएको नयाँ साम्राज्यवादले आर्थिक हस्तक्षेप गर्दछ । त्यसकारण यसलाई अन्त्य गर्न सर्वहारा वर्गले आफ्नो अर्थतन्त्रको निर्माण गर्नु आवश्यक छ ।

सर्वहारा वर्गले क्रान्ति सम्पन्न हुनुभन्दा अगाडि , क्रान्ति सम्पन्न गर्नकै लागि, पूँजीवादी अर्थतन्त्रको समानान्तरमा आफ्नो स्वायत्त अर्थतन्त्रको निर्माण गर्नुपर्दछ र त्यसलाई स्थानीय स्तरबाट राष्ट्रिय र अन्तर्राष्ट्रिय स्तरमा विस्तार तथा विकास गर्नुपर्दछ । यो अर्थतन्त्रको उपस्थितिमा एकातिर , पूँजीवादी अर्थतन्त्रको आकार घट्नेछ र त्यो कमजोर हुनेछ । अर्कोतिर , सर्वहारा वर्गले आफ्नो विकास र विस्तारको आधार भेट्टाउनेछ । त्यसैगरी विज्ञान–प्रविधिमाथि पूँजीपति वर्गको एकाधिकार पनि समाप्त हुनेछ । यो अर्थतन्त्र नै सम्पूर्ण सर्वहारा वर्गहरुको एकताको माध्यम , सशक्तिकरणको आधार र विश्वव्यापी पूँजीवादको विरुद्ध संघर्षको साधन हुनेछ ।

त्यसकारण विश्वव्यापी पूँजीवादी अर्थतन्त्रको विरुद्ध भूमण्डलीकृत पूँजीवादबाट उत्पीडित सम्पूर्ण पक्षहरु सम्मिलित समानान्तर स्वायत्त अर्थतन्त्रको निर्माण गर्नु आजको आवश्यकता हो । र , यो

अर्थतन्त्रको निर्माणमा सर्वहारा वर्गलाई मार्गदर्शन गर्नु र नेतृत्व गर्नु सर्वहारा वर्गको अग्रदस्ता , कम्युनिस्टहरुको वर्तमान कार्यभार हो ।

वर्तमान भूमण्डलीकृत पूँजीवादको विरुद्ध बन्ने समाजवादी अर्थतन्त्र (क्रान्तिकारी अर्थतन्त्र) विज्ञान–प्रविधिमा आधारित , एकीकृत र भूमण्डलीकृत हुनुपर्दछ ।
एकीकरणका तीन चरणहरुर स्वरुपहरु छन् । प्रथम चरणमा समान प्रकारका उद्यमहरुको संघबद्धता हुन्छ; दोस्रो चरणमा भिन्न प्रकारका तर परिपूरक उद्यमहरुको संघबद्धता हुन्छ ; र तेस्रो चरणमा सम्पूर्ण उद्यमहरुको संघबद्धता हुन्छ । जुन प्रक्रिया र चरणबाट एकीकृत पूँजीवादीमा एकीकरण भएको छ, त्यही प्रक्रिया र चरणबाटसमाजवादमा एकीकरण हुनसक्दछ– (१) सिण्डिकेट, (२) कार्टेल र (३) कर्पोरेशन । तर सिण्डिकेट, कार्टेल र कर्पोरेशन पूँजीवादका संयन्त्रहरु हुन् , त्यसकारण यिनीहरु समाजवादमा प्रकट हुँदैनन् । समाजवादमा यिनीहरु एकीकरणका चरण र प्रक्रियाको रुपमा परिणत हुन्छन् ।

त्यसैगरी यो अर्थतन्त्र विज्ञान –प्रविधिमा आधारित हुनुपर्दछ, किनभने वर्तमान युगको (समाजको) प्रमुख उत्पादक शक्ति विज्ञान–प्रविधि हो । र, यो भूमण्डलीकृत हुनुपर्दछ ।

### ३. क्रान्तिको विधि

विश्वमा अहिलेसम्म क्रान्तिका तीन विधिहरुको विकास भएको छ – १) जनआन्दोलन, २) सशस्त्र संघर्ष र ३) निर्वाचन । तर यी विधिहरु निरपेक्ष होइनन, बरु सापेक्ष हुन् । यिनीहरुमध्ये कुन उपयुक्त हुन्छ भन्ने कुरा समय र परिस्थितिमा निर्भर हुन्छ । सामान्य रुपमा यति मात्र भन्न सकिन्छ– जनताको अल्पसंख्यक भाग मात्र सचेत भएको अवस्थामा सशस्त्र संघर्ष , बहुसंख्यक भाग सचेत तर सत्ताको अप्रत्यक्ष विरोधी भएको अवस्थामा जनआन्दोलन र जनताको बहुसंख्यक भाग सचेत र सत्ताको प्रत्यक्ष विरोधी भएको अवस्थामा निर्वाचन उपयुक्त हुनसक्दछ ।
क्रान्तिका यी तीन विधिहरुको प्रयोग परिस्थितिअनुसार अलग –अलग, र एकल वा संयुक्त रुपमा हुनसक्दछ । उदाहरणको लागि , नेपालमा २००७ सालको क्रान्ति सशस्त्र संघर्षको माध्यमबाट भएको थियो भने २०४६ सालको क्रान्ति जनआन्दोलनको माध्यमबाट भएको थियो र २०६२ –६३ को क्रान्ति सशस्त्र संघर्ष र जनआन्दोलनको संयोजनबाट भएको थियो ।
क्युबाको क्रान्ति सशस्त्र संघर्षको माध्यमबाट भएको थियो, चिली र भेनेज्वेलामा निर्वाचनबाट क्रान्ति सम्पन्न भएका थिए । चीनको क्रान्ति सशस्त्र संघर्षको माध्यमबाट र भार

तको क्रान्ति जनआन्दोलनको माध्यमबाट सम्पन्न भयो । त्यसैगरी दक्षिण अफ्रिकामा निर्वाचनको माध्यमबाट र इण्डोनेसियामा जनआन्दोलनको माध्यमबाट क्रान्ति सम्पन्न भयो । तर एउटा सामाजिक शक्तिबिना यिनीहरुमध्ये कुनै पनि विधिद्वारा सफलता प्राप्त हुन सक्दैन । त्यो सामाजिक शक्ति सामाजिक व्यवस्थाबाट निर्माण हुन्छ । त्यसकारण क्रान्ति सम्पन्न गर्नको लागि क्रान्तिकारी शक्तिहरुले सर्वप्रथम पुरानो सामाजिक व्यवस्थाको विरुद्ध नयाँ सामाजिक व्यवस्थाको निर्माणमा आफ्नो ध्यान केन्द्रित गर्नुपर्दछ । यही नयाँ सामाजिक व्यवस्थामा उभिएर आवश्यकताअनुसार क्रान्तिका तीन विधिहरुमध्ये कुनै पनि विधिको प्रयोग गर्न सकिन्छ ।

### ४. समाजवादको स्वरुप

वर्तमान पूँजीवादी व्यवस्थाबाट उत्पन्न संकटबाट मुक्त हुन समाजवादबिना संभव छैन । तर त्यो समाजवाद पुरानो समाजवाद होइन, नयाँ समाजवाद हो । भूमण्डलीकृत भयानक पूँजीवादबाट आक्रान्त जनता समाजवादको लागि बलिदान गर्न तयार

हुन्छन्, तर विगतको जस्तो समाजवादको लागि होइन । त्यसकारण अब समाजवादी क्रान्तिको पहिलो प्रश्न समाजवादको स्वरुपको सम्बन्धमा उठ्दछ– कस्तो समाजवाद ल्याउने ? विगतको जस्तो समाजवाद ल्याउनको लागि कोही पनि तयार हुँदैनन् । त्यो असफल भइसकेको समाजवाद फेरि किन ल्याउने ? यदि जनतालाई समाजवादको लागि उत्प्रेरित गर्ने हो भने , त्यसको उपयुक्त स्वरुप, जुन विगतको भन्दा भिन्न हुन्छ , प्रस्तुत गर्नु आवश्यक छ ।

नयाँ समाजवादको स्वरुप यसप्रकार हुनेछ – १) विज्ञान–प्रविधिमा आधारित समाजवाद , २) सामाजिक नियन्त्रनमा आधारित समाजवाद , र ३) सामाजिक स्वामित्वमा आधारित समाजवाद ।

### १) विज्ञान–प्रविधिमा आधारित समाजवाद

हरेक सामाजिक व्यवस्थाको स्वरुपको आधार उत्पादक शक्तिको स्वरुप हो । उत्पादक शक्तिको अनुरुप उत्पादन सम्बन्ध (सामाजिक व्यवस्था) हुनुपर्दछ । वर्तमान युगको उत्पादक शक्ति विज्ञान–प्रविधि हो । त्यसकारण अब बन्ने समाजवाद विज्ञान –प्रविधिमा आधारित हुनेछ । दोस्रो कुरा, समाजवादमा जीवनको लागि आवश्यक साधनहरुको जुन प्रचुरताको अपेक्षा गरिएको छ , त्यो विज्ञान –प्रविधिबाट मात्र संभव छ । आज विज्ञान–प्रविधिले उत्पादन क्षेत्रमा जुन आमूल परिवर्तन ल्याएको छ , जुन क्रान्ति ल्याएको छ , त्यसबाट अब समाजमा जीवनको लागि आवश्यक साधनहरुको अभावको कारण उत्पन्न सम्पूर्ण समस्याहरु, द्वन्द्वहरुको अन्त्य हुने संभावना देखिएको छ ।

### १) सामाजिक नियन्त्रणमा आधारित समाजवाद

समाजवाद सामाजिक नियन्त्रणमा आधारित हुन्छ , राज्यको नियन्त्रणमा होइन । राज्यको नियन्त्रण त ती सामाजिक व्यवस्थाहरुमा हुन्छ , जसमा बहुसंख्यकमाथि अल्पसंख्यकको शासन हुन्छ । अल्पसंख्यकले राज्ययन्त्रको बलमा बहुसंख्यकमाथि नियन्त्रण गर्दछ । तर समाजवादमा सामाजिक नियन्त्रण हुन्छ । सामाजिक नियन्त्रण समाजका संघटकहरुको (सोभियतहरुको) सन्तुलनमा आधारित हुन्छ । र, सन्तुलन तिनीहरुकासम्बन्ध र अन्तर्निर्भरतामा आधारित हुन्छ । समाजका संघटकहरु सामाजिक समूहहरु हुन् ; उदाहरणको लागि कृषक समूह, मजदूर समूह, व्यापारिक समूह, आदि । यी समूहहरुमा शक्तिको विभाजन तथा हस्तान्तरण गर्नुपर्दछ ।

समाजका संघटकहरुमा शक्ति –पृथकीकरणबाट सामाजिक नियन्त्रण स्थापित हुन्छ ।

### ३) सामाजिक स्वामित्वमा आधारित समाजवाद

समाजवादको लक्ष्य उत्पादनका साधनहरुमाथि समाजको स्वामित्व स्थापित गर्नु हो । अथवा यसको लक्ष्य उत्पादनका साधनहरुमाथि व्यक्तिगत स्वामित्वलाई अन्त्य गरी सम्पूर्ण समाजको स्वामित्व स्थापित गर्नु हो । तर यो लक्ष्य उत्पादनका साधनहरुको राष्ट्रियकरण गरेर पूरा हुनसक्दैन, जुन विगतको अनुभवबाट स्पष्ट हुन्छ । त्यसैगरी यो लक्ष्य उत्पादनका साधनहरुमाथि सम्पूर्ण समाजको स्वामित्व घोषणा गरेर पनि पूरा हुनसक्दैन, किनभने त्यो अमूर्त हुन्छ । यसको लागि सर्वप्रथम समाजका समूहहरुको स्वामित्व स्थापित गर्नुपर्दछ । यसको विधि राष्ट्रियकरण गरेर उत्पादनका साधनहरुलाई राज्यको स्वामित्वमा ल्याउनु होइन, समाजका समुदायहरुको स्वामित्वमा ल्याउनु हो । समाजका विभिन्न समूहहरु, संघटकहरुउत्पादन प्रक्रियाका अंगहरु हुन् । तिनीहरुको स्वामित्वमा सम्पूर्ण उत्पादन साधनहरु र सम्पदा ल्याउनु आवश्यक छ ।

समाजका संघटकहरुको रुपमा विभिन्न समूहहरु हुन्छन् । ती समूहहरुले समाजका अलग –अलग

कार्यहरु सम्पन्न गर्दछन् । अलग –अलग भूमिकाहरु निर्वाह गर्दछन् । समाजीकरणको प्रक्रिया ती समूहहरुलाई तिनीहरुको आफ्नो क्षेत्रको स्वामित्व प्रदान गरेर सम्पन्न गर्नसकिन्छ । उदाहरणको लागि , किसानहरुको समूहहरुलाई कृषिको स्वामित्व , मजदूरहरुको समूहहरुलाई उद्योगको स्वामित्व प्रदान गरेर कृषि तथा उद्योगको समाजीकरण गर्नसकिन्छ । कारण कृषिको वास्तविक स्वामी किसानहरु र उद्योगका वास्तविक स्वामी मजदूरहरु हुन्छन् । समाजको प्रत्येक क्षेत्र त्यसमा संलग्न मानिसहरुको समूहलाई सुम्पिनु वास्तविक स्वामित्व स्थापनाको वास्तविक प्रक्रिया वा विधि हो ।तर समाजवादको लागि वास्तविक स्वामित्व स्थापना मात्र पर्याप्त हुँदैन । यो त्यसको एउटा पक्ष मात्र हो । त्यसको अर्को पक्ष समाजीकरण हो । समाजीकरणको लागि हरेक उद्यमलाई समाजको एउटा अंग बनाउनु पर्दछ । यसरी हरेक उद्यम सम्पूर्ण सामाजिक व्यवस्थाको एउटा अंगमा परिणत भएपछि त्यसको स्वतन्त्र अस्तित्व समाप्त हुन्छ र त्यसले समाजमाथि शासन गर्न पाउँदैन । कारण त्यसलाई अन्य अंगहरुले (उद्यमहरुले) नियन्त्रण गर्दछन् ।

## निष्कर्ष

समाजवादको यात्रा निरन्तर अगाडि बढिरहेको छ । कल्पनावादीहरुको कल्पनामा मात्र अस्तित्ववान समाजवाद मार्क्सवादको रुपमा सिद्धान्तमा प्रकट भयो । मार्क्सवादको रुपमा सिद्धान्तमा मात्र अस्तित्ववान समाजवाद पेरिस कम्युनको रुपमा सन् १८७१ मा व्यवहारमा साकार भयो । पेरिस कम्युनमा ७२ दिनसम्म मात्र अस्तित्व रहेको समाजवाद १९१७ मा बोल्शेभिक क्रान्तिको रुपमा पृथ्वीको ६ खण्डको १ खण्ड सोभियत संघमा स्थापित भयो । र , सोभियत संघमा ७०बर्षसम्म मात्र अस्तित्वमा रहेको समाजवाद अब सम्पूर्ण विश्वमा ७० शताब्दीसम्म अस्तित्वमा रहने गरी स्थापित हुने अवस्था तयार भइरहेको छ ।

यसको लागि हामीलाई आज तीन कुराहरुको (तीन जादूमय साधनहरुको) आवश्यकता छ । तिनीहरु हुन् – नयाँ मार्गदर्शन , दृढ प्रतिज्ञा र अदम्य साहस । भी.आई. लेनिन पहिलो पटक पक्राउ पर्दा उनलाई लिएर जाने प्रहरी अधिकृतले यसरी उनीसँग सोधेका थिए रे–

“तिमीले यस्तो दुस्साहस किन गरेको ? तिमीलाई थाहा छैन, तिम्रो अगाडि ठूलो पर्खाल उभिएको छ भन्ने कुरा ?”

त्यसको प्रतिउत्तरमा लेनिनले यसो भनेका थिए रे–

“मलाईं राम्रोसँग थाहा छ , मेरो अगाडि ठूलो पर्खाल उभिएको छ भन्ने कुरा । र , मलाईं यो कुरा पनि राम्रोसँग थाहा छ कि यो पर्खाल यति पुरानो र मक्किएको छ, यदि यसलाई एक मुक्का प्रहार गर्ने हो भने, यो गल्यामगुर्लुम ढल्छ । त्यसकारण मैले यस्ते साहस गरेको ।”

तर आजको पूँजीवाद लेनिनले भनेजस्तो कमजोर छैन । यसको विरुद्ध सफलतापूर्वक संघर्ष गर्नको लागि र यसमाथि निर्णायक प्रहार गर्नको लागि नयाँ मार्गदर्शनको आवश्यकता छ ।
आज यस्तो दृढ प्रतिज्ञाको आवश्यकता छ , जुन हो चि मिन्हले देखाएका थिए– “हामी सयवर्षदेखि लड्दै आएका छौँ । अब फेरि आवश्यक पर्दछ भने हामी अरु हजारवर्ष लड्न तयार छौँ ।”

त्यसैगरी आज चे ग्वेभाराको जस्तो साहसको आवश्यकता छ , जसले सिंगो ल्याटिन अमेरिकी महादेशमा क्रान्ति ल्याउने साहस गरेका थिए । अर्थात् , सिंगो भू –मण्डलमा क्रान्ति ल्याउने साहसको आवश्यकता छ । तब विजय सुनिश्चित हुन्छ ।

# विश्वप्रसिद्ध पुस्तक 'शून्य सीमान्त लागत समाज' नेपाली भाषामा आउँदै !

- जेरेमी रिफ्किन

*अनुवादकः रमेश सुनुवार/राजकुमार श्रेष्ठ*

**(लामो समयदेखि मानवजातिले प्रतीक्षा गर्दै आएको उत्कृष्ट समाज 'समाजवाद/साम्यवाद' अब साकार बन्दै छ । किनभने यसको लागि आवश्यक पूर्वाधार अब तयार भइसकेको छ । यसको प्रमाणको रुपमा विश्व प्रसिद्ध अमेरिकी लेखक तथा अर्थशास्त्री जेरेमी रेफ्किनको विश्वचर्चित पुस्तक 'Zero Marginal Cost Society' नेपाली भाषामा अनुवाद गरी पाठकसामु प्रस्तुत गरिदै छ । अनुदित पुस्तकको एक अंश जानकारीका लागि यहाँ प्रस्तुत गरिएको छ ।- सम्पादक)**

### महान परिवर्तन

### बजार पुँजीवादबाट सहयोगी समाजमा रुपान्तरण

पुँजीवादी युग छिटो नभए पनि अपरिहार्य रूपमा समाप्त हुँदै छ । त्यसको स्थानमा एक नयाँ आर्थिक ढाँचा 'सहयोगी समाज' को उदय भइरहेको छ, जसले हाम्रो जीवनशैली परिवर्तन गर्दछ । हामी अहिले नै मिश्रित अर्थव्यवस्थाको (आंशिक पूँजीवादी बजार र आंशिक सहयोगी समाजको) उदय देखिरहेका छौं । दुई आर्थिक प्रणाली प्रायः सँगसँगै चल्दछन् र कहिलेकहीं प्रतिस्पर्धा गर्दछन् । तिनीहरू एक-अर्काको परिधिमा लाभ लिइरहेका छन् । तिनीहरु आफैलाई फाइदा पुग्दासम्म सहकार्य गर्दछन् । अन्य समयमा , तिनीहरू अत्यन्तै प्रतिकूल हुन्छन् र एकले अर्कोलाई निल्न वा बदल्न कोशिस गर्दछन् ।

यी दुई प्रतिस्पर्धी आर्थिक ढाँचाहरुबीचको संघर्ष लामो र कठिन बन्दैछ । तर अहिलेको प्रारम्भिक चरणमै पनि के कुरा स्पपष्ट हुँदै छ भने पुँजीवादी व्यवस्था, जसले मानव प्रकृतिको बाध्यतापूर्ण कथा र दिनहुँको व्यावसायिक , सामाजिक र राजनीतिक जीवनको लागि व्यापक संगठनात्मक रूपरेखा प्रदान गरेको छ , दशभन्दा बढी पुस्ता विताइसकेपछि वर्तमान उत्कर्षमा पुगेर अब गिरावट आउनथालेको छ । कम्तीमा अर्को आधा शताब्दी वा सोभन्दा अगाडि पनि यो पूँजीवाद सामाजिक योजनाको हिस्सा रहनेछ भन्ने कुरामा मलाई शंका छ । तर , मलाई के लाग्छ भने एक्काइसौं शताब्दीको उत्तरार्धमा यो प्रमुख आर्थिक सूत्राधार हुनेछैन । यद्यपि नयाँ आर्थिक प्रणालीमा ठूलो रूपान्तरणका सूचकहरू अझै नरम र धेरै हदसम्म अस्पष्ट छन् , तर सहयोगी समाज आरोहको क्रममा छ । र , सन् २०५० सम्ममा यो विश्वको प्रायः आर्थिक जीवनको प्राथमिक मध्यस्थको रूपमा समाधान बन्नेछ । नयाँ अर्थव्यवस्थाको किनारमा बढ्दो सुव्यवस्थित र जानकार पूँजीवादी प्रणालीले निरन्तर सैनिक सेवा जारी राख्नेछ र शोषणको लागि पर्याप्त जोखिमहरू भेट्टाउँदछ, मुख्यतया नेटवर्क सेवाहरू र समाधानहरूको एक समुच्चयको रूपमा , जसले यसलाई नयाँ आर्थिक युगमा एक शक्तिशाली कमजोर खेलाडीको रूपमा विकास गर्न सक्षम बनाउँदछन् । तर यसले अब शासन गर्नेछैन ।

मलाई के लाग्छ भने यो प्रायः व्यक्तिहरूको लागि पूर्ण रूपमा अविश्वसनीय देखिन्छ , किनभने हामी यो विश्वासमा छौं कि पूँजीवाद हाम्रो सास फेर्ने

हावा जत्तिकै अपरिहार्य छ । तर शताब्दीयौंदेखि दार्शनिकहरू र अर्थशास्त्रीहरूको आफ्ना क्रियात्मक धारणालाई प्रकृति नियमहरुको दर्जा दिने उत्कृष्ट प्रयासका बाबजुद पनि आर्थिक ढाँचाहरु मानवीय संरचना मात्र हुन्, प्राकृतिक घटना होइनन् ।

आर्थिक ढाँचाहरूमध्ये पूँजीवाद राम्रोसँग चलेको छ । यद्यपि यसको समयरेखा इतिहासको अन्य आर्थिक ढाँचाहरूको तुलनामा छोटो रहेको छ , तर यो भन्नु उचित छ कि मानव यात्रामा यसको प्रभाव (सकारात्मक र नकारात्मक दुवै) शिकारी युगबाट कृषि युगमा संक्रमण बाहेक इतिहासको अन्य आर्थिक युगको तुलनामा बढी नाटकीय र दूरगामी देखिएको छ ।
विडम्बनाको कुरा के हो भने , पूँजीवादको पतन त्यसका शत्रु मानिएका शक्तिहरूबाट भइरहको छैन । पूँजीवादी भवनका भित्ताहरू भत्काउने अगाडि कुनै भीड छैन । त्यसको विपरित पूँजीवादी प्रणालीलाई तिनै धारणाहरुको नाटकीय सफलताले कमजोर बनाइरहेको छ , जसको आधारमा यो सञ्चालित हुन्छ । पुँजीवादको केन्द्रमा यसलाई सञ्चालन गर्ने संयन्त्रको अन्तरविरोध रहेको छ , जसले यसलाई सदा निर्णायक उचाइमा पु ¥याएको छ । तर अब त्यसले यसलाई मृत्युतिर धकेलिरहेको छ ।

## पुँजीवादी व्यवस्थामा अन्धकारको आगमन

पूँजीवादको लक्ष्य मानव जीवनको हरेक पक्षलाई आर्थिक क्षेत्रमा ल्याउनु हो , जहाँ यो बजारमा सम्पत्तिको रूपमा आदान —प्रदान गरिने वस्तुमा परिणत हुन्छ । यो रुपान्तरमा मानव प्रयासको थोरै मात्रा मात्र बचेको छ । हामीले खाने खाना , हामीले पिउने पानी, हामीले बनाएका कलाकृतिहरू, हामीले प्रयोग गर्ने सामाजिक सम्बन्धहरू , हामीले ल्याउने विचारहरू, हामीले व्यय गर्ने समय र हामी सबै को हौं भनेर निर्धारण गर्ने डीएनएसमेत सबै पूँजीवादी काउल्ड्रोन (विशाल भाँडो) मा फ्याँकिएका छन्, जहाँ तिनीहरू पुनर्गठित हुन्छन् , मूल्य तोकिन्छन् र बजारमा डेलिभरी हुन्छन् ।

विगत इतिहासमा, बजारहरू कहिलेकाहीँ भेला हुने स्थानहरू थिए, जहाँ सामानहरू साटासाट गरिन्थ्यो । आज, लगभग हाम्रो दैनिक जीवनको हरेक पक्ष वाणिज्यिक विनिमयहरुसँग कुनै न कुनै तरीकाले जोडिएको छ । बजारले हामीलाई परिभाषित गर्दछ ।

तर यहाँ विरोधाभास छ । पूँजीवादको क्रियात्मक तर्क सफलताद्वारा विफल हुनको लागि डिजाइन गरिएको हो । अब त्यसको व्याख्या गरौं ।

आफ्नो वृहत ग्रन्थ ‘द वेल्थ अफ नेशन्स ’ मा आधुनिक पूँजीवादका पिता एडम स्मिथले भनेका छन्— बजारले गुरुत्वाकर्षणका नियमहरुले जस्तै काम गर्दछ , जुन आइज्याक न्यूटनले पत्ता लगाएका थिए । प्रकृतिमा जस्तै , जहाँ प्रत्येक कार्यको लागि एक समान र विपरित प्रतिक्रिया हुन्छ, त्यस्तै स्वनियन्त्रित बजारमा पनि आपूर्ति र मागले एकअर्कालाई सन्तुलनमा राख्द छन् । यदि वस्तु र सेवाहरूको लागि उपभोक्ताको माग बढ्दछ भने, विक्रेताले त्यसको आधारमा तिनीहरूको मूल्य बढाउँछन् । यदि विक्रेताको मूल्य धरै उच्च भयो भने, माग घट्नेछ र विक्रेताहरू मूल्य घटाउन बाध्य हुन्छन् ।

फ्रान्सेली प्रबोधनकालीन दार्शनिक, शास्त्रीय आर्थिक सिद्धान्तका अर्का पुरातन वास्तुविद् जीन बाप्टिस्ट सेले न्युटनीय भौतिक विज्ञानबाट अर्को रूपक थपेका थिए । सेले तर्क गरेका थिए — आर्थिक गतिविधि स्वसञ्चालित छ , न्यूटनको पहिलो नियममा जस्तै , एकपटक आर्थिक शक्तिहरू गतिशील भएपछि , तिनीहरू तबसम्म गतिमा रहिरहन्छन्, जबसम्म बाह्य शक्तिहरुले तिनीहरुलाई प्रभावित गर्दैनन् । उनले तर्क थियो— “कुनै वस्तु तवसम्म उत्पादन गरिँदैन , जबसम्म त्यसले आफ्नो मूल्यको पूर्ण सीमामा अन्य

उत्पादनहरूको लागि बजार प्रदान गर्दैन ।...... एउटा उत्पादनको निर्माणले तुरून्तै अन्य उत्पादनहरूको लागि स्थान बनाउँदछ । "

नवशास्त्रीय अर्थशास्त्रीहरूको पछिल्लो पुस्ताले नयाँ प्रविधिले उत्पादकत्व बढाएर विक्रेताहरुलाई प्रतिइकाई सस्तो लागतमा बढी सामानहरू उत्पादन गर्न सक्षम बनाउने तर्क दिँदै सेको नियमलाई परिष्कृत गर्‍यो । सस्तो सामानको बढ्दो आपूर्तिले गार्दा यसले आफ्नै माग सिर्जना गर्दछ । र , त्यस प्रक्रियामा, प्रतिस्पर्धीहरू उनीहरूको उत्पादन अझ बढाउन, सस्तोमा बेच्न र नयाँ ग्राहकहरुलाई आकर्षित गर्नको लागि आफ्नै प्रविधिहरूको आविष्कार गर्न बाध्य बाध्य हुन्छन् । सम्पूर्ण प्रक्रिया एक चिरस्थायी गतिको यन्त्रजस्तै संचालन हुन्छ । नयाँ प्रविधि र बढ्दो उत्पादकत्वको परिणामस्वरूप सस्तो मूल्यको अर्थ उपभोक्ताहरूको लागि अन्यत्र खर्च गर्ने बढी पैसा बाँकी हुनु हो , जसले विक्रेताहरूबीच प्रतिस्पर्धाको नयाँ चरणलाई प्रोत्साहित गर्छ ।

तर पनि यहाँ एक चेतावनी छ । यी क्रियात्मक सिद्धान्तहरूले एक प्रतिस्पर्धी बजारको परिकल्पना गर्दछन् । यदि एक वा केही विक्रेताहरू उनीहरूको प्रतिस्पर्धालाई विस्तार गर्न र हटाउन तथा बजारमा एकाधिकार वा बहुअधिकार स्थापना गर्न सक्षम भए भने, विशेष गरी उनीहरूको सामानहरू र सेवाहरू आवश्यक छ भएको अवस्थामा , तिनीहरूले कृतिम रुपमा उच्च मूल्य कायम राख्न सक्दछन् । किनभने ग्राहकहरुसँग थोरै वैकल्पिक हुनेछ भन्ने कुरा उनीहरुलाई थाहा हुन्छ । यस्तो अवस्थामा, एकाधिकारवादीसँग उत्पादकत्व बढाउन , मूल्य घटाउन र प्रतिस्पर्धी रहनका लागि नयाँ श्रम बचत गर्ने प्रविधिहरु ल्याउने आवश्यकता वा झुकाव कम हुन्छ । हामीले इतिहासभरि थोरै समयका लागि मात्र भए पनि बारम्बार यस्तो भएको देखेका छौं ।

तर पनि , लामो अवधिमा नयाँ खेलाडीहरू आइरहन्छन् र प्रविधिमा क्रान्ति ल्याउँदछन्, जसले उत्पादकत्वलाई बढाउँछन् र समान वा वैकल्पिक वस्तुहरू तथा सेवाहरूको मूल्य घटाउँदछन् र बजारमा एकाधिकारलाई तोड्दछन् ।

तर पनि, मानौं हामी पूँजीवादी आर्थिक सिद्धान्तका यी मार्गदर्शक धारणाहरूलाई तार्किक निष्कर्षमा पुर्याउँदछौं । यस्तो अवस्थाको कल्पना गरौं , जहाँ पुँजीवादी प्रणालीको क्रियात्मक तर्क कसैको पनि अपेक्षा नगरी सफल हुन्छ र प्रतिस्पर्धी प्रक्रियाले "चरम उत्पादकत्व " तिर लैजान्छ , जसलाई अर्थशास्त्रीहरूले "उच्चतम सामान्य कल्याण " भन्दछन् । यो अन्तिम खेलमा तीव्र प्रतिस्पर्धाले चुस्त प्रविधि ल्याउन बाध्य बनाउँदछ , जसबाट उत्पादकत्व उच्चतम विन्दुमा पुग्दछ र विक्रिका लागि प्रस्तुत गरिएको वस्तुको प्रत्येक अतिरिक्त एकाई "शून्य सीमान्त लागत मूल्य " मा पुग्दछ । अर्को शब्दमा, वास्तवमा प्रत्येक अतिरिक्त एकाई उत्पादन लागत ( यदि निश्चित लागत गणना गरिएको छैन भने) अनिवार्य रूपमा शून्य हुन्छ । त्यसले उत्पादनलाई लगभग निःशुल्क बनाउँदछ । यदि त्यसो भयो भने , नाफा समाप्त हुनेछ , जुन पूँजीवादको प्राण हो । ................

**(बाँकी पुस्तकमा । प्रतीक्षा गर्नुहाेला , छिट्टै बजारमा आउँदै छ ।)**

# साम्यवादका सिद्धान्तहरु

• फ्रेडरिक एंगेल्स

नयाँ समाजले समाजवादी/ साम्यवादी धाराको कमजाेर बन्दै गएको बहसलाई बलियाे र व्यवस्थित गर्नु अनिवार्य ठानेर नयाँ बहसकाे शुरुवात गरेको छ । तपाई जाे कोही पनि यो बहसमा सहभागी हुनसक्नुहुने छ । समाजवाद किन आवश्यक छ ? याे व्यवस्था ल्याउन नेपालका र सं सारभरका बामपन्थहरुले के गर्नुपर्छ ? यस्ता विषयहरुमा तपाई जाे कोहीले पनि लेख्न र विमर्शमा सहभागी हुन सक्नुहुने छ ।

साम्यवादका सिद्धान्त के हाे भन्नेबारे जर्मन दार्शनिक फ्रेडरिक एंगेल्सले प्रश्न उत्तरकाे शैलीमा सरल भाषामा व्यक्त गरेका सामग्री हामीले आधारभूत ज्ञानका लागि प्रस्तुत गरेका छाैं ।

प्रश्न नं १. साम्यवाद भनेको के हो ?

सर्वहारावर्गको मुक्तिका शर्तहरुको सिद्धान्तलाई साम्यवाद भन्दछन ।

प्रश्न नं २. सर्वहारा वर्ग भनेको के हो ?

सर्वहारावर्ग भनेको यस्तो सामाजिक वर्ग हो जो कुनै प्रकारको पुँजीबाट प्राप्त हुने नाफाको आधारमा बाँचेको हुँदैन । आफ्नो श्रम बेचेर मात्र उसले जीवन –यापनका साधनहरु प्राप्त गर्दछ । यस वर्गको हर्ष र विस्मात ,जीवन र मृत्यु सारा अस्तित्व नै बजारमा हुने श्रमको मागमा निर्भर रहन्छ । संक्षेपमा भन्ने हो भने सर्वहारावर्ग अथवा मजदूरहरुको वर्ग भनेको उन्नाइसौं शताब्दीको श्रमिक वर्ग हो ।

प्रश्न नं ३. के त्यसो भय सर्वहारावर्ग सदैव अस्तित्वमा थिएन ?

सदैव थिएन । गरीब र श्रमिक वर्गहरु सधैँ अस्तित्वमा रहिआएका थिए र प्रायश: श्रमिक वर्गहरु नै गरीब पनि हुने गर्दथे परन्तु भर्खरै बताइएको जस्तो अवस्थामा बाँचेका यस्ता गरीबहरु र यस्ता मजदूरहरु अर्थात सर्वहाराहरु सधैँ अस्तित्वमा थिएनन् । यसरी सदैव नै प्रतिस्पर्धा पनि पुर्णतया स्तन्त्र र असिमित थिएन ।

प्रश्न नं. ४ . सर्वहारा वर्गको जन्म कसरी भयो ?

सर्वहारा वर्गको जन्म औद्योगिक क्रान्तिको परिणामस्वरुप भयो । यस्तो क्रान्ति गत शताब्दीको उत्तरार्धमा इंल्याण्डमा सम्पन्न भएको थियो । त्यसपछि संसारका सबै सभ्य मुलुकहरुमा यो क्रान्ति दोहोरियो । वाष्प यन्त्र , धागो कात्ने कल, लुगा बुन्ने यन्त्रिक तान र अन्य कयौं यन्त्र उपकरणहरुको आविष्काले गर्दा यो औद्योगिक क्रान्ति सम्पन्न भएको थियो । यी मेशिनहरु ज्यादै महंगा हुन्थे तसर्थ ठूल्ठूला पुँजीपतिहरुले मात्र तिनलाई किन्न सक्दथे । मेशिनहरुले त्यसबेलासम्म अस्थित्वमा रहेका सम्पूर्ण उत्पादन पद्धतिहरुमा हेरफेर ल्याइदिए । र पहिलाका बढीमात्रामा शिल्पकलामा समेत जमाउँदै लग्यो , यस क्षेत्रका पनि ठूल्ठूला पुँजीपतिहरुले सानातिना शिल्पकारहरुलाई बढी मात्रामा पेल्दै लगे । र , यस्ता ठूल्ठूला शिल्पशालाहरु खडा गरियो जहाँ धेरै प्रकारका खर्चहरुमा किफायत गर्न सकिन्थ्यो । यसको साथसाथै विस्तृत रुपमा श्रम विभाजनसमेत गर्न सकिन्थ्यो । यसको परिणामस्वरुप हामी अहिले यस स्थितिसम्म आइपुगेका छौं कि सभ्य मुलुकहरुमा श्रमका झण्डै सबै शाखाहरुमा बारखानाको उत्पादन पद्धति लागु भैसकेको छ र प्रायः यी सबै शाखाहरुमा शिल्प र कारखानाहरुको ठाउँ वृहत उद्योगले लिइसकेको छ । यसको

परिणाम स्वरुप पहिलेको मध्यम वर्ग र खास गरी सानातिना शिल्पकारहरु अझ बढी बर्बाद भैइरहेका छन् । कामदारको पहिलेको स्थिति विल्कुलै बदलिएको छ र दुई नयाँ वर्गहरु देखा पर्दै छन् , जसले विस्तार विस्तार अरु सबैलाई निलिरहेका छन् ।
ती हुन्ः

१) ठूल्ठूला पुँजीपतिहरुको वर्ग
यो वर्ग अहिले पनि सबै लागि नभइ नहुने कच्चा पदार्थ तथा औजारहरुसमेतको झण्डै एक मात्र मालिक रहेको छ । यो बुर्जुवाहरुको वर्ग हो अर्थात पुँजीपति वर्ग हो ।
२) केही पनि नहुनेहरुको वर्ग
यो वर्ग पुँजीपतिहरुलाई आफ्नो श्रम वेच्न विवश छ । यसको सट्टामा उसले जीवन धान्नका लागि अत्यावश्यक साधन प्राप्त गर्दछ । यो वर्ग मजदुरहरुको वर्ग अथवा सर्वहारा वर्ग हो ।

## प्रश्न नं ५.के कस्ता अवस्थाहरुमा पुँजिपतिलाई सर्वहाराले श्रम बिक्री गर्दछन ?

म पनि अन्य मालहरु जस्तै एउटा माल हो । श्रमको मूल्य पनि तिनै नियमहरुद्वारा निर्धारित हुन्छ जसरी जुनसुकै अर्को बस्तुको मूल्य तोकिन्छ । वृहत उद्योगको आधिपत्य अथवा संयन्त्र प्रतिस्पर्धा अन्तरगत –जे भनेपनि एउटै कुरा हो भन्ने हामी अगाडि देख्ने छौं –सदैव नै वस्तुको सालाखाला मुल्य त्यस वस्तुको उत्पादनमा लाग्ने लागतको बरावर हुन्छ । तसर्थ श्रमको मूल्य पनि श्रमको उत्पादनको लागत बराबर नै हुन्छ । अनि श्रमको उत्पादनको लागत चाहिं जीवन यापनको तिमित्त नभई नहुने साधनहरुको खास त्यो मात्रा हो, जुन मजदूरको लागी उसको कार्यक्षेमता जोगाएर राख्न र मजदूरवर्गको अस्तित्व कायम राख्न आवश्यक हुन्छ । यस उदेश्यको निम्ति जति चाहिन्छ त्यस भन्दा बडि मजदूरले पाउँदैन । त्यसैले गर्दा श्रमको मुल्य अथावा ज्याला ज्यादै नै थोरै हुन्छ । र त्यसमा न्युनतम साधनको बराबर हुन जानेछ जुन जिवन धान्नको निम्ति अत्यावश्यक नै हुन्छ । कारोवारमा कहिल्यै फाइदा हुन्छ कहिले नोक्सान पर्दछ । तसर्थ मजदूरले पनि कहिल्यै धैरै त कहिले थोरै ज्याला पाँउछ । ठीक त्यसरी नै कारखानाको मालीकले पनि आफ्नो बस्तुको निमित्त कहिले बढि त कहिले कम रकम पाँउछ । यदी नाफा र नोक्सानको सरदर हिसाब गर्ने हो भने जसरी कारखानाको मालिकले आफ्नो बस्तुको निमित्त उत्पादनको लागत भन्दा कम या बेसी पाँउदैन , ठीक त्यसरी नै मजदूरले पनि सालाखाला त्यस न्युनतम स्तर भन्दा कम या बेसी पाँउदैन । जति बढि मात्रामा वृहत उद्योगले श्रमका सबै शाखाहरुमा नियंत्रण जमाउँदै लग्ने छ , त्यति नै कडाईका साथ ज्यालाको यो आर्थीक नियम पनि लागु हुँदै जाने छ ।

## प्रश्न नं. ६ः औद्योगिक क्रान्तिभन्दा पहिले के कस्ता श्रमिक वर्गहरु अस्तित्वमा थिए ?

सामाजिक विकासका विभिन्न स्तरहरुमा श्रमिक वर्गहरु विभिन्न अवस्थाहरुमा बाँचेका थिए । हुनेखाने र सत्तारुढ वर्गसँग श्रमिकहरुको सम्बन्ध युग अनुसार फरक फरक हुन्थ्यो । प्राचीन कालमा श्रमिकहरु आफ्ना मालिकहरुका दास थिए । ठीक त्यसरी नै जसरी उनीहरु अहिले पनि कैयौं अविकसित मुलुकहरुमा र अझ संयुक्त राज्य अमेरिकाको दक्षिणी भागमासमेत दास नै रहेका छन् । मध्ययुगमा उनीहरु कुलीन भूमिपतिहरुका भूदास थिए, जस्तो आजसम्म पनि हंगेरी, पोल्याण्ड र रुसमा छदैछन् । यसको अतिरिक्त मध्ययुगका शहर औद्योगिक क्रान्ति हुनु अघिसम्म नै शिल्पकारहरु कहाँ काम गर्ने सिकारु शिल्पकारहरु अस्तित्वमा रहेका थिए । नि कारखानाहरुको विकासको साथसाथै विस्तार विस्तार कारखानाका मजदुरहरु देखा पर्दै गए जसलाई ठूल्ठूला पुँजीपतिहरुले काममा लगाउने गरेका थिए ।

## प्रश्न नं ७ दास र सर्वहाराको बीचमा के अन्तर छ ?

दासलाई सदाको निम्ति बिक्री गरीएको हुन्छ । सर्बहाराले चाँहि आफुलाई हरेक घण्टा स्वयं विक्री गरीरहनु पर्दछ । प्रत्यक निश्चित दास कुनै निश्चित स्वामीको सम्पत्ति हो । मालिकलाई आफ्नो सम्पत्तिको माया हुन्छ । त्यसैले दासको जिवन निर्वाहको ग्यारेण्टी हुन्छ । सर्बहाराको श्रम चाँहि त्यसैबेला मात्र किनीन्छ जव कसैलाई त्यो आवश्यक पर्न जान्छ । सर्वहाराको उसको जिविका अनिश्चित हुन्छ । सर्वहाराको पुरै वर्गको मात्र अस्तित्व कायम राखिएको हुन्छ । दासले प्रतिस्पर्धा गर्नु पर्दैन, परन्तु सर्वहाराले प्रतिस्पर्धाका अवस्थाहरुमा रहनुपर्दछ र त्यसमा भैरहने सबै प्रकारका हलचलको असर पनि उसले स्वयं अनुभव गर्दछ । दास चाहिं चीजबीज जस्तै ठानिन्छ र उसलाई नागरीक समाजको सदस्यको रुपमा विचार गरीदैन । सर्वहारालाई भने व्यक्तित्व अर्थात नागरीक समाजको सदस्य मानिन्छ । यसैले सर्वहाराको तुलनामा दासको जिविका बढी सुगम हुन्छ, तर, सर्वहारा चाहिं यस्तो समाजको उपज हो । जुन विकासको बढि उच्च खुड्कलोमा रहेको हुन्छ र स्वयं सर्वहारा पनि दासको भन्दा बढी उच्च स्तरमा रहन्छ । दासले आफुलाई त्यतिबेला मुक्त तुल्याउँछ । जव उसले व्यक्तिगत स्वामित्वका सबै सम्बन्धहरु मध्य एउटा मात्र दासत्वको सम्बन्धलाई निर्मुल पार्दछ र यसको परिणाम स्वरुप त्यतिखेर मात्र ऊ सर्वहारा बन्न पुग्द छ । सर्वहाराले चाँहि आफुलाई त्यसबेला मात्रै मुक्त गर्न सक्दछ जव उसले पूरै व्यक्तिगत स्वामित्वलाई नै निर्मूल पारिदिन्छ ।

## प्रश्न नं ८. भूदास र सर्वहाराको बीचमा के अन्तर छ ?

उत्पादनका साधन र सानो टुक्रा जग्गा भूदासको स्वामित्व र उपयोग रहन्छन् । यसको निम्ति उसले आफ्नो आयस्ताको एक भाग दिन्छ अथवा केही काम पूरा गर्दछ । सर्वहाराले चाहिं अर्काको मातहतमा रहेका उत्पादनका साधनहरुद्धारा काम गर्दछ र अर्कैको निमित्त काम गरेर यसको सट्टामा आम्दानीको एक हिस्सा पाउँछ । भूदासले दिन्छ , सर्वहारालाई दिइन्छ । भुदासको जीविका सुनिश्चत छ । सर्वहाराको जीविका अनिश्चित छ । भूदास प्रतिस्पर्धा भन्दा बाहिरै रहन्छ ,तर सर्वहारा चाहिं प्रतिस्पर्धाका अवस्थाहरुमा निर्भर रहन्छ । भूदासले आफुलाई मुक्त गर्नका निम्ति या त शहरमा भागेर जानु पर्छ, त्यहाँ शिल्पकार बन्नु पर्छ, या त स्वतन्त्र मोही बनेर आफ्नो भूमीपतिलाई काम अथावा वस्तुको बदला पैसा बुझाउनु पर्दछ, या त उसले आफ्नो जग्गावाललाई निकालेर स्वयं नै जग्गा धनि बन्नु पर्दछ । छोटकरीमा भन्ने हो भने उसले आफुलाई त्यसवेला मात्र मुक्त तुल्याउँन सक्छ, जुन बेला उ कुनै न कुनै रुपमा सम्पति हुने वर्गको पंत्तीमा समावेश हुन जान्छ र प्रतिस्पर्धाको क्षेत्रमा प्रवेश गर्दछ । सर्वहाराले चाँहि आफुलाई त्यतिखेर मात्र मुक्त गर्दछ जब उसले प्रतिस्पर्धा,  व्यक्तिगत स्वामित्व र सारा वर्गीय अन्तरहरुलाई नै नामेट पारिदिन्छ ।

## प्रश्न नं ९ नयाँ सामाजिक व्यवस्था कस्तो हुनु पर्दछ ?

सर्वप्रथम उद्योग  –व्यवसाय र उत्पादनका सबै शाखाहरुको संचालन एक अर्कासित प्रतिस्पर्धा गरिरहने विभिन्न व्यक्तीहरुको हातबाट खोसेर लिईने छ । यसको सट्टा उत्पादनका सबै शाखाहरु सम्पूर्ण समाजकै नियन्त्रणमा रहनेछन । अर्थात समाजका हितहरुलाइ ध्यानमा राखेर सामाजीक योजना अनुरुप तिनको संचालन गरीने छ ,जसमा समाजका सबै सदस्यहरुले भाग लिने छन् । यसरी यो नयाँ सामाजिक व्यवस्थाले प्रतिस्पर्धालाई निर्मूल पारिदिने छ । र त्यसको ठाँउमा एउटा संस्था नै खडा गरिदिने छ । विभिन्न व्यक्तीहरुद्धारा उद्योग –व्यवसायको संचालन गरिनुको अनिवार्य परिणम नै व्यक्तिगत स्वामित्व हो ।

बाँकी अर्को भागमा

# कम्युनिष्ट सिद्धान्तबारे ३० बुँदा

• रामदिप आचार्य

पार्टीका नेता-कार्यकर्ताहरुमा सैद्धान्तिक विषयहरु पढ्ने संस्कृतिको विकास गर्न र माक्र्सवादको आधारभूत सवालमा संक्षेपमा , सरल तरिकाले जानकारी दिने उद्देस्यले यीबुँदा टिपोट गरी पाठकहरु सामू प्रस्तुतगरिदैछ । यसलाई आगामी दिनमा परिष्कृत र व्यवस्थित गर्दै लगिनेछ ।

१.श्रमजीवी सर्वहारा वर्गको मुक्तिको सिद्धान्तलाई साम्यवाद भनिन्छ ।

२. यो सिद्धान्तको मुल आविष्कारक कार्ल माक्र्स भएकोले साम्यवादको सिद्धान्तसँग अभिन्न रुपमामाक्र्सको नामजोडिएर आँउछ ।

३. माक्र्सवादकातीन श्रोतहरु छन्- जर्मन शास्त्रीयदर्शन, फ्रान्सेलीकाल्पनिक समाजवाद र बेलायती ररजनीतिक अर्थशास्त्र ।

४. माक्र्सवादकातीन संघटक अंगहरु छन्- दर्शनशास्त्र, राजनीति अर्थशास्त्र र वैज्ञानिक समाजवाद ।

५. आजसम्मका दार्शनिकहरुले दुनियाँको व्याख्यामात्र गरे मुख्य कुरा दुनियाँबदल्नु हो भन्ने मान्यताको साथमा क्र्सवादी दर्शनले अन्य दर्शनसँग सम्बन्ध विच्छेद गर्यो । समग्र दर्शनको र विशेषगरी नुतन दर्शनको महान् आधारभूत प्रश्न चिन्तन र अस्तित्वको सम्बन्धको प्रश्न हो । मानिसहरुको चेतनाले उनीहरुको सत्तालाई निर्धारित गर्दैन , बरु त्यसको उल्टो , उनीहरुको सामाजिक सत्ताले उनीहरुको चेतनालाई निर्धारित गर्दछ ।

६. द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादमा क्र्सवादी लेनिनवादी दर्शन हो । दर्शनले विश्व दृष्टिकोणको प्रश्नलाई समाधान गर्दछ ।

७. द्वन्द्ववाद भनेको प्रकृति , मानव समाज र चिन्तनको गति सम्बन्धी सार्वभौमिक नियमहरु बारेको सिद्धान्त हो ।

८. भौतिकवाद पदार्थलाई आदितत्व र चेतनालाई पदार्थबाटै उत्पन्न भएको मान्ने दर्शन भौतिकवादहो । पदार्थ शाश्वत छ , कसैले पनिकहिल्यै पदार्थको सृष्टि गरेको होइन र जगत्माकुनै पनि किसिमको अलौकिकवाद परलौकिक शक्तिको अस्तित्व छैन । चेतना पदार्थको ऐतिहासिक विकासको उपजहो, असाधारण रुपले जटिलतम् भौतिक पिण्ड मानिसको मगजको देन हो । जगत बोधगम्य छ ।

९. द्वन्द्ववादका मूलनियमहरु हुन् विरोधीपक्षहरुवीच एकतार संघर्ष , मात्राबाट गुणमा रुपान्तरण र निषेधको निषेध ।वस्तुहरुमा अन्तर्विरोधको नियमअर्थात् विपरीत तत्वहरुको एकताको नियम , भौतिकवादी द्वन्द्ववादको आधारभूतनियमहो । सही अर्थमा द्वन्द्ववाद भनेको पदार्थहरुको स्वत्वभित्र रहेको अन्तर्विरोधको अध्ययनहो । द्वन्द्ववादको सार पनि यही हो ।

१०.अन्तर्विरोधको सार्वभौमिकता वा निरपेक्षताका दुईवटा अर्थ छन् । एउटा हो सबै वस्तुहरुको विकासको प्रक्रियामा अन्तरर्विरोध रहिरहन्छ र अर्को चाहिँ हरेक वस्तुको विकासको प्रक्रियामा विपरीत तत्वहरुको गति थालनीदेखि अन्तसम्म कायम रहन्छ । गति आफैँ एउटा अन्तर्विरोध हो । अन्तरर्विरोधन भएको कुनै पनिचिज छैन , अन्तरविरोध नभई कुनै पनिचीज टिकिरहन सक्दैन ।

११. ठोस परिस्थितिको ठोस विश्लेषण माक्र्सवादको सार कुरा हो ।

१२.पार्टीभित्र अन्तरविरोध भएनभने र तिनीहरुको फस्र्यौट गर्नका निम्ति विचारधारात्मक छलफल भएनभने पार्टीको जीवनकै अन्त हुन्छ । गलत विचारहरुसँग भिड्नु भनेको त खोप लिनु जस्तै हो । खोप लिएपछि मानिसले रोगसँग लड्ने बढी प्रतिरोध क्षमताको विकास गर्दछ ।

१३. माक्र्सले दुइटा महान् आविष्कारहरु गर्नुभएको छ र तीहुन् इतिहासको भौतिकवादीधारणा ऐतिहासिक भौतिकवाद र अतिरिक्त मूल्यको सिद्धान्त (जुनमाक्र्सको आर्थिक सिद्धान्तको आधारशीला हो ) ।

१४.माक्र्सको कृतिपूँजी वैज्ञानिक समाजवादको व्याख्यागर्ने प्रमुख तथा आधारभूत कृतिहो । पृथ्वीमा पूँजीपति र मजदूरहरु रहेदेखिन् हाम्रो सामु जुन कृति छ , मजदूरहरुको लागित्यो जत्तिको महत्वपूर्ण कृतिअर्को देखा परेको छैन । त्यो कृतिमाक्र्सको सिद्धान्तको सबभन्दा गहन , व्यापक तथा विस्तृत परिपुष्टि तथा कार्यान्वयन हो । वास्तवमा पूँजी भौतिकवादी द्धन्द्ववादको विशद व्याख्या र कार्यान्वयनको एउटा अद्धितीय तथा अनुकरणीय नमुना रहेको छ । पूँजी हाम्रो युगको राजनैतिक अर्थशास्त्रको महानतम् कृति हो ।

१५. माक्र्सको कम्युनिष्ट घोषणपत्र र पूँजी , एंगेल्सको परिवार , नीजि स्वामित्व र राज्यको उत्पति, लेनिनको राज्य र क्रान्तिएवं साम्राज्यवाद पूँजीवादको चरम अवस्था, माओको अन्तरविरोधबारे लगायतका कृतिहरुको अध्ययन विनामाक्र्सवादको आधारभूत सही ज्ञान हासिलगर्न सकिदैन ।

१६.सिद्धान्तलाई व्यवहारसँग एकाकार गराउने कुरा माक्र्सवादकै आधारभूत सिद्धान्तमध्ये कै एक हो ।

१७. माक्र्सवाद वैज्ञानिक सत्य हो र यो आलोचनादेखि डराउदैन । डराउने भए र आलोचनाद्धारा सत्ताच्यूत गर्न सकिने भए यो मूल्यहीन हुन्थ्यो ।

१८.कम्युनिष्ट क्रान्तिभन्नु समाजको परम्परागत सम्पति सम्बन्धसित सबभन्दा आधारभूत रुपले सम्बन्ध विच्छेद गर्नु हो । वर्गहरु र वर्ग विरोधहरुले युक्तभएको पुरानो पँुजीवादी समाजको ठाँउमा एउटा नयाँ स्वतन्त्रमानवसंघको स्थापनाहुनेछ, जसमाप्रत्येक व्यक्तिको स्वतन्त्रविकास सबैको स्वतन्त्रविकासको लागिशर्त हुनेछ ।

१९.कम्युनिष्ट पार्टीको संगठन भनेको सर्वहारा , श्रमजीवीक्रान्तिमा कम्युनिष्ट नेतृत्वको संगठन हो ।

२०.अधिकतमप्रहार शक्ति र संघर्षको नित्य परिवर्तनशीलअवस्थाअनुसार कम्युनिष्ट पार्टी र यसकानेतृत्वदायीअंगमाआफूलाई अनुकूलबनाउने क्षमतायीदुईको सजीव संयोजन नै वर्ग संघर्षमा नेतृत्वको पूर्व मान्यताहो ।

२१. सफल नेतृत्वको निम्तिजनसमूहसँग घनिष्ठतम् सम्पर्क एकदमै आवश्यक हुन्छ । यस्तो सम्पर्कबिना नेतृत्वले जनसमूहलाई नेतृत्वगर्ने छैन, बढीमा जनताको पछिपछि हिंड्नेछ ।

२२. कम्युनिष्ट पार्टीको संगठनभित्र जीवित एकता जनवादी केन्द्रीयताको माध्यमबाट हासिल गरिनु पर्दछ । यसलाई संगठनात्मक सिद्धान्त भनिन्छ । पार्टी संगठनमा जनवादी केन्द्रीयता एउटा वास्तविक संश्लेषण , केन्द्रीयता र सर्वहारा जनवादको संमिश्रण हुनु पर्दछ । यो अराजतावादीजनवाद र नोकरशाही केन्द्रीयता दुवै होइन ।

२३.पार्टीको संगठन परिस्थितिहरु र कामकायसकाआप्mना उद्देस्य अनुकूल बनाइन्छ । कम्युनिष्ट पार्टीले क्रान्तिकारी वर्ग संघर्षका सबै स्थितिमा र समाजवादको स्थापनाको स्थापनाअर्थात् साम्यवादी समाजको पहिलो

चरणको कालमाअग्रदस्ता , सर्वहारावर्गको अग्रीमचौकीबन्नु पर्दछ ।

२४. कम्युनिष्ट पार्टीको निम्ती संगठनको रुप सर्वथा अचूक र अपरिवर्तनशील हुनै सक्दैन । सर्वहाराको वर्ग संघर्षका स्थितिहरु विकासकानिरन्तर प्रक्रियामाहुने परिवर्तनका अधीन हुन्छन् र ती परिवर्तनहरु अनुसार र सर्वहाराको अग्रदस्ताको संगठनले अनुकूलहुने रुपहरुको लागिलगातार खोजीगरिरहनु पर्दछ ।

२५.कम्युनिष्टहरु व्यवहारिक दृष्टिले जनसाधारणको सबैभन्दा अगाडि बढेका र दृढसंकल्पीअंगहुनभने सिद्धान्तका दृष्टिबाट जनसाधारणले भन्दा बढी बुझेका हुन्छन् ।

२६. कम्युनिष्टले समाजकाउपजहरुको उपभोग गर्नबाट कसैलाई पनिबञ्चितगर्दैन । यसले अर्काको श्रमलाई शोषण गर्ने शक्तिबाट मात्रबञ्चित गर्छ अर्थात् कसैले कसैलाई शोषण गर्न यसले दिने छैन ।

२७. जब मानिसद्धारा गरिने शोषण पनि मेटिने छ, जब राष्टभित्रका वर्गहरुबीचको दुस्मणी खतम हुन्छ, तब राष्ट राष्टहरु बीचको शत्रुतापनि मेटीदै जान्छ ।
२८. कम्युनिष्ट पार्टी क्रान्तिकारी माक्र्सवादको प्रशिक्षण प्राप्तगर्नै पाठशाला हुनुपर्दछ ।

२९.कम्युनिष्ट पार्टी र अन्य पार्टीहरु सबै नै इतिहासकाउपजहुन् । इतिहासमा जुन कुराको उदय हुन्छ, त्यसको विलोप पनि हुन्छ । त्यसकारण एक दिन कम्युनिष्ट पार्टी बिलाएर जानेछ र त्यसैगरी अन्य पार्टीहरु पनि बिलाएर जानेछन् ।

३०.पुँजीवादी र साम्यवादी समाजको बीचमा एकबाट अर्को माक्रान्तिकारी रुपान्तरणको अवधि रहन्छ । तदानुसार , राजनीति संक्रमण अवधिपनि रहन्छ, त्यसै संक्रमणकालिन अवधिलाई नै समाजवाद भनिन्छ ।साम्राज्यवादी र पुँजीवादी प्रणालीहरुलाई अन्ततः समाजवादी प्रणालीद्धारा विस्थापित गरिनेछ । विचारधाराको क्षेत्रमा पनि यही कुरा लागु हुन्छ, आदर्शवादलाई भौतिकवादद्धारा र आस्तिकतावादलाई नास्तिकतावादद्धारा विस्थापित गरिनेछ । माक्र्सवाद असिमित रुपले शक्तिशाली छ, किनभने यो साँचो छ । यो पूर्ण र सुव्यवस्थित छ र यसले मानिसहरुलाई एउटा यस्तो सिंगो विश्व दृष्टिकोण प्रदान गर्छ , जुनकुनै पनि किसिमको अन्धविश्वास , प्रतिक्रियावाद वा पूँजीवादी दमनको संरक्षणसित मिल्दो छैन ।

# ऐतिहासिक भौतिकवाद के हो ?

- नयाँ समाज
- 

मार्क्सवादी–लेनिनवादी दर्शनको संघटक भाग, समाजको विषयमा दार्शनिक विज्ञान, जसले दर्शनका आधारभूत प्रश्नलाई इतिहासको प्रसंगमा भौतिकवादी ढंगबाट समाधान गर्दछ । यस आधारमा ऐतिहासिक विकासका सामान्य समाजशास्त्रीय नियमहरुको तथा जनताको क्रियाकलापमा तिनीहरुलाई लागू गर्ने रुपहरुको अध्ययन गर्दछ ।

ऐतिहासिक भौतिकवाद समाजशास्त्र र अन्य सामाजिक विज्ञानहरुको सैद्धान्तिक आधार हो र यसले विश्लेषणको विधि उपलब्ध गराउँदछ । सम्पूर्ण पूर्व मार्क्सवादी दार्शनिकहरु , जसमा भौतिकवादी दार्शनिकहरु पनि सामेल थिए , सामाजिक जीवनको व्याख्याको सन्दर्भमा आदर्शवादी थिए , किनभने उनीहरु यो तथ्यको उल्लेख गर्ने कार्यभन्दा अगाडि बढेनन् कि प्रकृतिको विपरीत, जसमा अन्धशक्तिहरु क्रियाशील हुन्छन्, समाजमा मानिसहरु , सचेत मानिसहरु भावनात्मक प्रेरणाहरुबाट निर्देशित भएर क्रियाशील हुन्छन् । ऐतिहासिक भौतिकवादको रचना सामाजिक चिन्तनमा मूलभूत क्रान्ति थियो ।

यसले एकातिर समग्र रुपमा संसारप्रति – प्रकृति र समाज दुवैप्रति – एउटा सुसंगत भौतिकवादी दृष्टिकोण निरुपित गर्न तथा अर्कोतिर , सामाजिक जीवनको भौतिक आधार र त्यसको विकासलाई निर्धारित गर्ने नियमहरुलाई उद्घाटन गर्न संभव बनायो । मार्क्सले आर्थिक क्षेत्रलाई सामाजिक जीवनका भिन्न –भिन्न क्षेत्रहरुबाट र उत्पादन –सम्बन्धहरुलाई सम्पूर्ण अन्य सम्बन्ध निर्धारित गर्ने मुख्य सम्बन्धहरुको रुपमा सम्पूर्ण सामाजिक सम्बन्धहरुबाट पृथक गरेर सामाजिक विकासको प्राकृतिक –ऐतिहासिक प्रक्रियाको विषयमा आप्mनो मुख्य विचारको विस्तार गरे । मार्क्सवादले त्यसलाई आफ्नो प्रस्थान –बिन्दु बनाउँदछ, जुन प्रत्येक मानवसमाजको आधारमा निहित छ (जीवननिर्वाहको साधन उपलब्ध गर्नु) र यो तथ्यसँग ती सम्बन्धहरुको सम्बन्ध स्थापित गर्दछ , जसमा मानिसहरु उत्पादनको प्रक्रियामा सामेल हुन्छन् ; यी उत्पादन–सम्बन्धहरुको प्रणालीमा यसले प्रत्येक समाजको जग , वास्तविक आधार देख्दछ , जसमाथि राजनीतिक तथा कानूनी उच्चसंरचना र सामाजिक चिन्तनका विभिन्न रुपहरु रहन्छन् ।

उत्पादन सम्बन्धहरुको प्रत्येक प्रणाली , जुन उत्पादक–शक्तिहरुको विकासको एउटा निश्चित चरणमा उत्पन्न हुन्छ, सम्पूर्ण संरचनाहरुको लागि सामान्य नियमहरुको तथा केवल एउटा संरचनामा मात्र अन्तर्निहित ती विशेष नियमहरुको अधीनस्थ हुन्छ, जसले यो निर्धारित गर्दछन् कि त्यो प्रणाली कसरी उत्पन्न हुन्छ तथा त्यसले कसरी कार्य गर्दछ र उच्च रुपमा कसरी संक्रमण गर्दछ । प्रत्येक सामाजिक –आर्थिक संरचनामा असीमित रुपले विविधतापूर्ण , व्यष्टिपरक र परिकलन तथा व्यवस्थापनको नियन्त्रणभन्दा बाहिर देखिने मानिसहरुको क्रियाकलापको सामान्यीकरण गरियो र तिनीहरुलाई मानिसहरुका ती विशाल समूहहरुको (वर्गीय समाजमा वर्गहरुको) क्रियाकलापसम्म सीमित गरियो, जसले आफ्ना गतिविधिहरुमा सामाजिक विकासका तत्कालीन आवश्यकताहरुको पूर्ति गर्दछन् ।

ऐतिहासिक भौतिकवादको खोजले सम्पूर्ण पूर्वमार्क्सवादी समाजशास्त्रीय सिद्धान्तहरुका दुई मुख्य त्रुटिहरु समाप्त भए । पहिलो कुरा , ती सिद्धान्तहरु आदर्शवादी थिए , अर्थात् तिनीहरुले आफ्नालाई मानव –क्रियाकलापका वैचारिक प्रयोजनहरुमाथि विचार गर्नसम्म सीमित गर्दथे, तर यो कुराको जाँच गर्दैनथे कि यी प्रयोजनहरुलाई कुन भौतिक कारणले जन्म दिन्छन् । दोस्रो कुरा , उनीहरुले केवल इतिहासमा असाधारण व्यक्तिहरुको भूमिकाको अध्ययन मात्र गर्दथे , तर साधारण जनताको, इतिहासका वास्तविक निर्माताहरुको क्रियाकलापतिर ध्यान दिंदैनथे ।

ऐतिहासिक भौतिकवादले यो प्रदर्शित गर्दछ कि सामाजिक–ऐतिहासिक प्रक्रिया भौतिकवादी कारकहरुबाट निर्धारित हुन्छ । भद्दा भौतिकवादी सिद्धान्तहरुको विपरीत, जसले विचारहरु, राजनीतिक तथा अन्य संस्थाहरु र संगठनहरुको भूमिकालाई नकार्दछन्, ऐतिहासिक भौतिकवादले भौतिक आधारमाथि, जसले तिनीहरुलाई जन्म दियो, तिनीहरुको विपरीत सक्रिय प्रभावमाथि जोड दिन्छ र आत्मगत कारकको – मानिसहरु, वर्गहरु, पार्टीहरुको क्रियाकलाप, साधारण जनताको चेतना र संगठनको – ठूलो भूमिका प्रदर्शित गर्दछ ।

ऐतिहासिक भौतिकवाद नियतिवाद तथा संकल्पवाद दुवैको विरुद्ध छ । मानिसहरुले आफ्नो इतिहासको सिर्जना स्वयं गर्दछन्, तर यो कार्य उनीहरुले आप्mनो इच्छाले गर्न सक्दैनन्, किनभने प्रत्येक नयाँ पुस्ताले निश्चित वस्तुगत परिस्थितिहरुमा काम गर्दछ, जुन त्यसभन्दा पहिले बनिसकेका हुन्छन् । यी परिस्थितिहरु तथा तिनीहरुको आधारमा कार्यरत नियमहरुले मानिसहरुको क्रियाकलापको लागि विभिन्न संभावनाहरुको ढोका खोलिदिन्छन् । यी संभावनाहरुको उपयोग र फलस्वरुप इतिहासको धाराको वास्तविक प्रवाह मानिसहरुमाथि, उनीहरुको क्रियाकलाप तथा पहलमाथि, प्रगतिशील शक्तिहरुको संगठनात्मकता र एकतामाथि निर्भर हुन्छन् । ऐतिहासिक भौतिकवादका मुख्य विशेषताहरुको पहिलोपटक प्रतिपादन कार्ल मार्क्स तथा फ्रेडरिख एंगेल्सको कृति 'जर्मन विचारधारा' मा गरिएको थियो । इतिहासको विकसित हुने प्रक्रिया तथा नयाँ अनुभव संचित हुने प्रक्रियासँगसँगै ऐतिहासिक भौतिकवाद पनि समग्र रुपमा मार्क्सवादजस्तै विकसित र समृद्ध हुँदै जान्छ । भी. आई. लेनिनले यसप्रकारको विकासको एउटा शानदार नमूना प्रस्तुत गरेका थिए । ऐतिहासिक भौतिकवाद सर्वहाराको क्रान्तिकारी वर्गसंघर्ष, समाजवाद र साम्यवादको निर्माणका आवश्यकताहरु तथा विज्ञानको विकाससँग घनिष्ठ रुपले जोडिएको छ ।

**स्रोतः दर्शन विश्वकोश**

# केही सौन्दर्यात्मक प्रवर्गहरु (दर्शनशास्त्र भग-२)

• लेखकः कृष्णदास श्रेष्ठ

### अन्तर्वस्तु र रुप

प्रकृति र समाजमा जति पनि चीज , परिघटना तथा प्रक्रियाहरु छन , तिनका दुई अभिन्न पक्ष छन् — अन्तर्वस्तु र रुप । कुनै पनि चीज , परिघटना वा प्रक्रियाका आफ्ना खास विशेषता तथा गुणहरु हुन्छन, र ती विशेषता र गुणहरुको समष्टिलाई अन्तर्वस्तु भनिन्छ । तर ती विशेषता तथा गुणहरु आफ्नै भरमा अभिव्यक्त हुन सक्दैनन अर्थात अन्तवस्तु आफै अस्तित्वमा आउन सक्दैन । अस्तित्वमा आउनका लागि तिनको निम्ति कुनै उपयुक्त रुपको आवश्यकता पर्दछ । यस तथ्यले के जनाउँछ भने कुनै चिज वा पक्रियाको अन्त्रवस्तुमात्र होइना रुप पनि हुन्छ । रुप त्यसको अभिन्न अंग रहेको हुन्छ ।

### अनि रुप भनेको के हो त ?

रुप भनेको सम्बन्धित चीजमा भएका विशेषता तथा गुणहरुलाई मिलायर राख्ने तरीका हो । रुपाङ्कन हो ,अन्त्तरवस्तुको आन्तरिक गठन हो । रुपको मदत बाट मात्र अन्त्रवस्तुले आफुलाई प्रकाशमा ल्याउन सक्छ । तसर्थ, अन्त्रवस्तु र रुप कुनै पनि चिज वा प्रक्रिाया का दुइटा पक्ष हुन जुन त्यसमा छुटयाउनै नसकिने गरी गांसियर रहेका हुन्छन र जसको मेल नै सम्बन्धित चीज वा प्रक्रिया रहन्छ । यहाँ हामी कलामा अन्त्रवस्तु र रुपको द्घन्द्घात्मक सम्बन्धबारे छोटकरीमा विचार गर्न गइरहेका छौं ।

माक्र्सवादी सौन्दर्यशास्त्रको एउटा महत्वपुर्ण प्रस्थापना के छ भने कुनै पनि कलाकृतिको लागि अन्तर्वस्तु र श्रपको एकता वा मेल एउटा अनिवनर्य सर्त हो । कुनै पनि कला कुतीको सारतत्व आफै खुलस्त हुन सक्दैन, र त्यसको एउटा रुप मार्फत आफुलाइ प्रकाशमा ल्याउनु पुरेको हुन्छ । रुप नभएको खण्डमा ,कृतिको सारतत्व आफ्नो प्रभावकारीताबाट र आफ्नो अस्तित्वबोधबाट वञ्चित रहन्छ , र त्यो कला कला रहँदैन । कलाकृतिको सार तत्व जतिसुकै महत्वपुर्ण र समृद्घ भएपनि यदि त्यसले उचित कलात्मक मुर्तरुप पाउन सकेन भने त्यसको त्यो सार तत्व बेमहत्वको कल्पना रहन्छ । फेरी अर्कोतिर अन्त्रवस्तुबिना रुपको अस्तित्व रहन सक्दैन , र यसरी रुप आफ्नो अस्तित्वको लागि अन्त्रवस्तुद्धारा सर्तबन्द रहने भएपनि रुपको भुमिका निष्क्रिय रहँदैन , रुप अन्तर्वस्तुप्रति अदासीन रहँदैन, बरु सक्रिय रहन्छ ।

### दर्शनशास्त्रः दुनिया बुझ्ने र बदल्ने दृष्टि (भाग- १)

अन्तर्वस्तुको सम्बन्धमा रुपको सक्रिय भूमिका कुन कुरकमा रहन्छ भने त्यसले अन्तर्वस्तुलाई हानी पु¥याउन वा विकृत गर्न सक्छ , वा त्यसको उल्टो,त्यसको प्रभावकारीतालाई बढाउन अभिव्यक्तिलाई बढि स्पष्ट तथा सशक्त पार्न सक्छ । यसरी ,त्यसले सक्रिय भूमिका खेल्ने गर्छ । यहाँ प्रमुख कुरो के छ भने अन्तर्वस्तुसित रुपको अनुरुपता कलाकृतिमा प्रभावकारीताको एउटा सर्त हो , यस सम्बन्धमा द्घन्द्घवाद र द्घन्द्घनत्मक प्रवर्गहरु नामक कृतिमा व्यक्त एउटा भनाई तल उद्धृत गर्दैछु:

*साहित्य र कलाको क्षेत्रमा ,कनै साहित्यिक तथा कला कृतिमा कलात्मक विम्बहरुमा जुन जिवन , यथार्थता प्रतिबिम्बित भएको हुन्छ ,त्यो त्यसको अन्त्रवस्तु (विषयवस्तु) रहन्छ भने उक्त विम्बहरु जुन ढंगबाट त्यसमा संगठित र अभिव्यक्त भएका हुन्छन् त्यो त्यसको रुप रहन्छ । अर्थात कुनै खास कृतिमा रहेको विषयवस्तु त्यसमा निहित सामाजीक विचार त्यसको*

*अन्तर्वस्तु हो । भने त्यको गठन , त्यसको भाषा तथा शैली त्यसको रुप हुन । कुनै साहित्यिक कृतिको प्रवाभकारिता त्यसको अन्तर्वस्तु र रुपको अनुरुपतामा निर्भर गर्दछ । रुप वस्तुहरु अनुरुप हुनुपर्छ भन्ने अन्तर्वस्तुले उपयुक्त रुपमा आफूलाई अभिव्यक्त गर्नुपर्छ । अनि मात्र त्यसले मानव मनमा वाञ्चित प्रवाभ पार्न सक्छ । यदि कृतिमा रहेको महान सामाजिक विचारलाई पनि सशक्त पाराले सशक्त शैलिमा व्यक्त गरियना भने त्यसको पाठकहरुको मानसमा त्यति राम्रो प्रवाभ पार्न सक्तैन । शैली नै त्यस्तो साधन हो , जस्को मद्दतबाट कनै साहित्यिक कृतिले आफ्नो प्रवाभलाई विस्तारित गर्दछ । अन्तर्वस्तु र रुपको अनुरुपता प्रसिद्व रुसी दार्शनिक तथा साहित्यिक आलोचक बेलेन्स्किको सौन्दर्यशास्त्रीय आचार¬संहिताको एउटा आधारभूत नियम रहेको कुरा प्लेखनोवले बताएका छन् ।*

**यसरी रुपको मुख्य काम कलाकृतिमा व्यत्त सार तत्वललाई खुलस्त पार्नु हो , र यो काम त्यसले सारतत्वलाई कलात्मक मूर्त रुप प्रयोग गरेर बमहिर पैस्तुत गर्छ । स्वाभाविक रुपमा ,यस कामका लागि कलाकारमा कलात्मक सीप र क्षमताको आवश्यकता पर्छ । यो सीप आफैमा कुनै साध्य होइन , बरु इो कलाकृतिमा व्यत्त भएको अन्तर्वस्तुलाई , सामाजिक विचारलाई मूर्त रुप प्रदान गर्ने साधन हो ।**

भौतिकवादी सौन्दर्य चिन्तनको एउटा मत के छ भने कलात्मक गुण भनेको कलाकारले सारतत्वलाई मूर्तश्रप दिन अपनायने प्राविधीक उपायाहरुको समष्टि मात्र होइन । यदि यो गुणलाई त्यस रुपमा लिने हो भने त्यो रुपवादसित संझौता बन्न जानेछ , किनभने रुपवादीहरु कलामा मूल्यवान एउटा मात्र तत्व रुपहो भन्ने मान्यता राख्दछन् । तसर्थ ,कलाकारको कलात्मक गुणमा कलात्मक सीपका साथै उसको जीवनसम्बन्धी ज्ञान तथा अनुभव उसको कलात्मक दृष्टीकोण तथा विश्य दृष्टिकोण आदीपनि समावेश रहन्छन् । तसर्थ रुपलाई निर्धारित गर्ने सारतत्वका अतिरिक्त अन्य केही तत्वहरु प्नि हुन्छन् । यस सम्बन्धमा लुना चास्की निम्न विचार व्यक्त गर्छन ।

वास्तवमा कुनै कृतिको रुपको निर्धारण त्यसको सारतत्वद्धारा मात्र होइन , बरु अन्य तत्वहरु द्वारा पनि हुन्छ । कुनै खास वर्गको चिन्तन प्रक्रिया र संकथनहरु त्यसको जिवन शैली कुनै खास समाजको भौतिक संस्कृतिको सामान्य स्तर , त्यसका छिमेकीको प्रभाव , जीवनका सबै पक्षमा अभिव्यक्त हुनसक्ने अतितको जड्ता वा नविनताको लागी प्रयास यी सारा कुराले रुपलाई प्रवाभित पार्न सक्छन् । रुपलाई निश्चित पार्ने सहायक तत्वको काम गर्न सक्छन् । अक्सर गरेर रुप एउटा खास कृति सित मात्र होइना । बरु एउटै पूरै सम्प्रदाय सित एउटा पुरै युगसित गाँसिएको हुन्छ । यो अन्तर्वस्तुलाई हानि पु¥याउने वा त्यसको विरोध गर्ने शक्ति पनि हुनसक्छ । कहिलेकाँही यो अन्तर्वस्तुबाट अलगिएको हुन सब्छ । र यसले एउटा छुट्टै छली स्वभाव प्राप्त गर्न सक्छ । यस्तो कुरा यस्तो बेलामा जब साहित्यिक कृतिहरु त्यस्ता वर्गीय प्रवृतिहरुको अभिव्यक्त रहन्छन् । जुन अन्त्तवस्तुविहीन छन् । जुन वास्तविक जिवन सित डराउँछन् र जसले अति दम्भपूर्ण, भड्किलो वा त्यसको उल्टो ,ठट्यौली तथा ख्यालठट्टा स्वभावको शाब्दिक कसरतको पर्दा पछाडि रहेर यस जिवनबाट लुक्न प्रयास गर्छन् ।

यसैले, यस सम्बन्धमा सबभन्दा महत्वपूर्ण कुरा रुप अन्तर्वस्तुको अनुरुप रहनु हो र यो नै कुनै कलाकृतिको कलात्मक गुणको निरुपण गर्ने प्रमुख कसौटी हो ।

प्रतिबिम्ब सम्बन्धी आफ्नो धारणामा अन्त्तवस्तु र रुपको जटिल द्वन्द्ववादलाई स्पष्टसित देखाएका छन् । कलामा अन्तर्वस्तु र रुपबिचको एकता तिनीहरुको अन्तर्प्रवेश तथा तिनीहरुको पारस्परीक संक्रमणलाई सो धारणाले सो धारणाले स्पष्ट पारेको छ । अन्तर्वस्तु र रुपको द्घन्द्घात्मक एकता व्यापक रुपमा कुरा कुरामा रहेको छ भने तिनमा एकको अस्तित्व अर्कोको अस्तित्वको अभावमा रहन सक्दैन , तिनीहरु एक अर्को सित घनिष्ठ रुपमा अन्तर्सम्बन्धित , अन्तक्रियाशील तथा अन्तप्रवेशीय रहन्छन , र ती एक अर्कोमा संक्रमित हुन्छन । लेनिनले कुन तथ्यलाई दर्साए भने कला स्वयै संसारकम्बन्धि मानविय बोधको एउटा रुप हो भने अर्कोतिर रुप त्यहि कलाको एउटा अपरिहार्य तत्व पनि हो ।

# अन्तरपार्टी एकतासम्बन्धी द्वन्द्वात्मक तरिका (माओको विश्व प्रसिद्ध लेख )

- माओ

**एकजना सामर्थवान मानिसलाई अरु तीन जनाको मद्दत चाहिन्छ, बारलाई तीनवटा घोचाको सहारा चाहिन्छ । आफूमा त्यतिको सौन्दर्य भएर पनि कमलको फूललाई बिलक्षण देखिन हरिया पातहरु चाहिन्छ । यी चिनियाँ उखानहरु हुन् । अझ अर्को चिनियाँ उखान के छ भने तीन जना सार्कीको बुद्धिमत्तालाई एकसाथ मिलाएपछि त्यो बुद्धिमत्ता विश्वकर्मा चुके ल्यांको सरह हुन्छ ।**

अन्तरपार्टी एकताको प्रश्न सम्बन्धी द्वन्द्वात्मक तरिकाबारे म केही कुरा भन्न चाहन्छु । मेरो विचारमा, ऊ शत्रु तत्व वा अन्तर्ध्वंशकारी होइन भने हरेक कमरेडहरुप्रतिको हाम्रो प्रवृत्ति एकताको प्रवृत्ति हुनुपर्दछ, चाहे ऊ जोसुकै किन नहोस् । हामीले उसप्रति अधिभूतवादी तरिका नअँगाली द्वन्द्वात्मक तरिका अँगाल्नु पर्छ ।

## द्वन्द्वात्मक तरिका भनेको के हो ?

हरेक कुरालाई विश्लेषणात्मक दृष्टिले हेर्नु , सबै मानिसले गल्ती गर्छन् भन्ने कुरा स्वीकार गर्नु र गल्ती गर्यो भन्दैमा मानिसलाई पूर्ण रुपले नकार्ने काम नगुर्न नै द्वन्द्वात्मक तरिका हो । गल्ती नगर्ने मानिस यस संसारमा एकजना पनि हुँदैन भनेर लेनिनले एक पटक भन्नु भएको थियो —हरेक मानिसलाई सहारा चाहिन्छ । एकजना सामर्थवान मानिसलाई अरु तीन जनाको मद्दत चाहिन्छ , बारलाई तीनवटा घोचाको सहारा चाहिन्छ । आफूमा त्यतिको सौन्दर्य भएर पनि कमलको फूललाई बिलक्षण देखिन हरिया पातहरु चाहिन्छ । यी चिनियाँ उखानहरु हुन् । अझ अर्को चिनियाँ उखान के छ भने तीन जना सार्कीको बुद्धिमत्तालाई एकसाथ मिलाएपछि त्यो बुद्धिमत्ता विश्वकर्मा चुके ल्यांको सरह हुन्छ । चुके ल्यां एक्लै कदापि परिपूर्ण हुन सक्दैन , उसका पनि आफ्नै सीमाहरु छन् । हाम्रा बाह्र देशको यो घोषणा पत्रलाई नै हेरौं न । हामीले यसको पहिलो, दोस्रो, तेस्रो र चौथो मस्यौदा तयार पारिसक्यौं , तैपनि यसको अन्तिम परिष्कार हुन बाँकी नै छ । कसैले पनि आफू ईश्वर झैं सर्वज्ञ र सर्वशक्तिमान् भएको दाबी गर्नु अहंकारपूर्ण कुरा हो भन्ने मलाई लाग्छ ।

**उसोभए गल्ती गरेको कमरेडप्रति हामीले कस्तो प्रवृत्तिअँगाल्नु पर्ने हो त ? हामीले विष्लेषणात्मक दृष्टिकोण लिई द्वन्द्वात्मक तरिका अँगाल्नु पर्छ , अधिभूतवादी तरिका होइन ।**

**एक पटक हाम्रो पार्टी अधिभूतवाद , जडसूत्रवादको भड्खारोमा जाकिन पुग्यो , जसले आफूलाई मन नपर्ने जति सबैलाई पूरापूर ध्वस्त पार्यो । पछि गएर हामीले जडसूत्रवादलाई परित्याग गर्यौं र अलि बढी द्वन्द्ववाद सिक्यौं । विपरित तत्वहरुको एकता द्वन्द्ववादको मूलभूतधारणा हो ।यस धारणाअनुसार गल्ती गरेको कमरेडलाई हामीले के गर्ने हो त ?** पहिलो कुरा, उसलाई गलत विचारहरुबाट मुक्त गर्नको लागि हामीले ऊसँग संघर्ष गर्नुपर्छ । दोस्र्रो कुरा, हामीले उसलाई मद्दत पनि गर्नुपर्छ । पहिलो कुरा- संघर्ष , दोस्रो कुरा- मद्दत । उसका गल्ती सच्याउने असलमनशायका साथहामीले अघि बढ्नु पर्छ, जसले गर्दा उसले बाटो पाउन सकोस् ।

तर अर्कोप्रकारका मानिसहरुसँग व्यवहार गर्न भने गाह्रो छ । ट्रटस्कीजस्ता र चीनका छन् तु स्यू, चां को ताओ र काओ कां जस्ता मानिसहरुप्रति सहयोगपूर्ण प्रवृत्ति अँगाल्न असम्भव थियो किनभने उनीहरु सच्याउनै नसकिने खालका थिए । अनि हिटलर, च्यां काई शेक र जारजस्ता मानिसहरु पनि सच्याउनै नसकिने खालका थिए र उनीहरुको तख्ता पल्टाइदिनै पर्यो किनभने हामी र उनीहरुबीचको सम्बन्ध एकदमै परस्पर निषेधकारी थियो । यस अर्थमा उनीहरुको स्वभावको एउटा मात्र पक्ष छ , दुईवटा होइन । अन्तिम विश्लेषणमा, साम्र्राज्यवादी र पुँजीवादी प्रणालीहरुका हकमा पनि यही कुरा साँचो हो , जुन प्रणालीहरुलाई अन्ततः समाजवादी प्रणालीद्वारा विस्थापित गर्नु

अनिवार्य छ । विचारधाराको क्षेत्रमा पनि यही कुरा लागु हुन्छ —आदर्शवादलाई भौतिकवादद्धारा र आस्तिकवादलाई नास्तिकवादद्धारा विस्थापित गरिने छ । यहाँ हामी रणनीतिक उद्देस्यबारे कुरा गरिरहेका छौं । तर कार्यनीतिक चरणहरुको हकमा चाहिँ फरक हुन्छ , जहाँ सम्झौताहरु गर्न सकिनेछ । कोरियामा ३८औं समानान्तरमा हामीले अमेरिकीहरुसँग सम्झौता गरेनौं र ?भियतनाममा फ्रान्सेलीहरुसँग सम्झौता भएन र ?

प्रत्येककार्यनीतिक चरणमा सम्झौताहरु तथा संघर्षहरु गर्न सिपालु हुनु जरुरी छ । अब हामीकमरेडहरुसँगको सम्बन्धतिर फर्कौंं । कमरेडहरुका बीचमा कुनै असमझदारी हुन जाँदा वार्ता गरिऊन् भनी म सुझाव राख्छु । कतिपय मानिसहरुले कस्तो सोचाइ राखे जस्तो लाग्छ भने कम्युनिष्ट पार्टीमा भित्रिइसकेपछि सबै मानिस मतभिन्नता वा असमझदारीहरु केही नभएका सन्त बन्दछन् , अनि पार्टीको विश्लेषण गरिरहनु पर्दैन अर्थात् पार्टी एकमना र एकरुपखालको हुन्छ, तसर्थ वार्ता गर्नु जरुरी हुँदैन । यस्तो लाग्छ मानौं पार्टीमा भित्रिएपछि मानिसहरुले शतप्रतिशत माक्र्सवादी बन्नु पर्दछ । वास्तवमा मानिसहरु विभिन्न मात्रामा माक्र्सवादी हुने गर्दछन् । कोही १०० प्रतिशत , कोही ९०, ८०, ७०, ६० वा ५० प्रतिशत माक्र्सवादी हुन्छन् भने कोही चाहिँ १० वा २० प्रतिशत मात्र माक्र्सवादी हुन्छन् । के एउटा सानो कोठामा बसेर हामी मध्ये दुइ तीन जनाको कुराकानी हुन सक्दैन र ? के हामी एकता गर्ने इच्छाबाट सुरु गरी एक अर्कालाई मद्दत गर्ने भावनाको साथ कुराकानी गर्न सक्दैनौं र ?

यहाँ म निश्चय नै कम्युनिष्ट पंक्तिहरु भित्रै वार्ता गर्नेबारे कुरा गरिरहेको छु , साम्राज्यवादीहरुसँग वार्ता गर्ने विषयमा कुरा गरिरहेको छैन ( यद्यपि साम्राज्यवादीहरुसँग पनिहामीवार्ता गर्ने गर्छौं) । म एउटा उदाहरण दिऊँ । के ६ वटाभन्दा बढी पार्टीहरुले वार्ता गरिरहेका छैनन् र ? वास्तवमा तिनीहरु वार्ता गरिरहेका छन् । अर्को शब्दमा भन्ने हो भने माक्र्सवाद–लेनिनवादको सिद्धान्तमा कुनै पनि हानिनोक्सानी नपुग्ने भएमा हामी अरु मानिसहरुका कतिपय स्वीकार योग्य विचारहरुलाई स्वीकार गर्दछौं र त्याग्न मिल्ने खालका हाम्रा र कतिपय विचारहरुलाई त्यागि दिन्छौं । यसप्रकार गल्तीगर्ने कमरेडसँग व्यवहारमा गर्नलाई हाम्रा साथमा दुईवटा हात छन् , एउटा ऊसँग संघर्ष गर्ने हात र अर्को ऊसँग एकता गर्ने हात । एकताको उद्देस्य चाहिँ उसलाई बाटो दिनु हो , ऊसँग सम्झौता गर्नु हो, जसको अर्थ लचिलो हुनु हो ।

## सिद्धान्त र लचिलोपनाको एकता एक माक्र्सवादी सिद्धान्त हो, र यो विपरीत तत्वहरुको एकताहो ।

कुनै पनि प्रकारको संसार , र खास गरेर वर्गसमाज , अन्तरविरोधहरुले भरिपूर्ण हुन्छ । केही मानिसहरु समाजवादी समाजमा अन्तरविरोहरु “फेला पर्दछन्” भनेर भन्छन्, तर यो समस्यालाई अघि सार्ने गलततरिका हो भन्ने मलाई लाग्छ । गाँठी कुरो त अन्तरविरोधहरु फेलापर्दछन् भन्ने होइन , कुरो के हो भने समाजवाद अन्तरविरोहरुले भरिपूर्ण हुन्छ । अन्तरविरोधहरु नभएको कुनै ठाँऊ नै हुँदैन , न त विश्लेषण गर्न नमिल्ने कुनै मानिस नै हुन्छ । कसैको विश्लेषण गर्न मिल्दैन भन्नुको अर्थ अधिभूतवादी बन्नु हो । हेर्नोस् न, परमाणु (एटम) भनेको विपरीत तत्वहरुको एकताको जटिलता हो । यसमा न्यूक्लियस र एलेक्ट्रोन भन्ने दुई विपरीत तत्वहरुको एकताहुन्छ । फेरि न्यूक्लियसमा चाहिँ प्रोट्रोन र न्यूट्रोन भन्ने विपरीत तत्वहरुको एकता हुन्छ । प्रोटोनबारे कुरा गर्ने हो भने यसमाप्रोटोन र विरोधीप्रोटोन (एन्टीप्रोटोन) हुन्छन्, अनि न्यूट्रोनबारे कुरा गर्ने हो भने यसमा न्यूट्रोन र विरोधी न्यूट्रोन (एण्टीन्यूट्रोन) हुन्छन् । छोटकरीमा , विपरीत तत्वहरुको एकता सर्वत्र विद्यमान हुन्छ ।

विपरीत तत्वहरुको एकताको धारणालाई अर्थात् द्वन्द्ववादलाई व्यापक रुपले प्रचार गर्नैपर्दछ । म त के भन्छु भने द्वन्द्ववादलाई दार्शनिकहरुको साँघुरो घेराबाट व्यापक जनसमूहहरुतिर सार्नु पर्दछ । यस प्रश्नबारे विभिन्न पार्टीहरुका राजनीतिक परिषद्का बैठकहरुमा, पूर्ण अधिवेशनहरुमा र साथसाथै उक्त पार्टीहरुकाविभिन्नतहका पार्टी समितिहरुका बैठकहरुमा छलफल गरियोस् भन्ने मेरो सुझाव छ ।साँच्चै भन्ने हो भने हाम्रा पार्टी शाखाका सचिवहरुले द्वन्द्ववाद बुझेका छन् , कारण शाखाका बैठकहरुका निमित्त प्रतिवेदनहरु तयार पार्दा उनीहरुले पायः आफ्ना नोट बुकमा दुईवटा कुरा टिपोट गर्ने गर्छन् पहिलो कुरा , उपलब्धिहरु र दोस्रो कुरा , कमजोरीहरु । एक दुईमा विभाजित हुन्छ यो विश्वव्यापक —घटना–प्रवाहहो र द्वन्द्ववाद भनेको यही हो ।

# समाजवादको बहसले खोजेको स्पष्टता

• खगेन्द्र प्रसाईं

समाजवादको बहस गर्दा यसको माग इतिहासको कुन सन्दर्भमा गरिएको थियो भन्नेमा जानैपर्छ । समाजवादको जबर्जस्त सैद्धान्तिक र व्यावहारिक उपस्थिति उन्नाइसौँ शताब्दीको युरोपमा विकसित हुँदै गरेको पुँजीवादका विरुद्धमा भएको थियो । त्यस कारण समाजवादको बहसमा पुँजीवाद के हो र यसको विकल्प किन चाहिएको थियो, समाजवाद नै किन श्रेष्ठ विकल्प थियो र हो आदि प्रश्नले अधिक महत्त्व राख्छन् । सुरु गरौँ– यिनै प्रश्नबाट ।

## पुँजीवाद के हो ? समाजवाद के हो ?

कतिपयले पुँजीवादलाई निजी सम्पत्तिमा आधारित आर्थिक व्यवस्थाको रूपमा बुझ्छन् , बुझाउँछन् । वस्तुतस् यो परिभाषा अपूरो र कमजोर छ । पूर्वपुँजीवादी व्यवस्थाहरू पनि निजी सम्पत्तिमा आधारित थिए । पुँजीवादले सबैलाई निजी सम्पत्ति दिनुको सट्टा धेरैको सम्पत्ति खोसेर थोरैका हातमा केन्द्रीकृत गर्ने व्यवस्था मिलाएको थियो, हिंसात्मक र गैरहिंसात्मक विधिबाट । धेरै मान्छलाई सम्पत्तिविहीन बनाएर या तिनलाई सम्पत्ति संग्रह गर्न नसक्ने कुराको ग्यारेन्टी गरेर मात्र पुँजीवाद बाँच्न र फस्टाउन सकेको हो । धेरै सम्पत्ति हुने थोरै मान्छे र सम्पत्ति नहुने धेरै मान्छेका सम्बन्धलाई निरन्तर पुन: उत्पादन गरिरहनु पुँजीवादको लक्ष्य र विधि मात्रै होइन , प्राण नै हो ।

साम्यवादले निजी सम्पत्तिको हरण गर्छ भन्ने तर्कको आलोचनामा मार्क्सले भनेका थिए , ‘पुँजीवादले त ९० प्रतिशतको सम्पत्ति हरण गरिसकेको छ ।’ मार्क्सको दाबीको खण्डन वस्तुत: आजसम्म भएको छैन । बरु धेरैजसो बुर्जुवा अर्थशास्त्रीहरू सम्पत्तिको केन्द्रीकरण आर्थिक विकासका लागि आवश्यक भएको जोडदार मतसमेत राख्छन् । उनीहरूको तर्क हुने गर्छ – केन्द्रीकृत सम्पत्तिले उत्पादन र रोजगारको वृद्धि गर्छ, जसमार्फत गरिब स्वयं लाभान्वित हुन्छन् । यसलाई ट्रिकल डाउन सिद्धान्त भनिन्छ , जसको सत्यता दन्त्यकथाको भन्दा अलिकति पनि बढी छैन ।

मार्क्सकै शब्दमा भन्दा पुँजीवादले एकातर्फ उत्पादनलाई सामाजीकृत गर्छ भने अर्कोतर्फ उत्पादनको फललाई निजीकृत गर्छ, जो पुँजीवादको मूल अन्तरविरोध हो । त्यसैले पुँजीवादले समाजमा ठूलो मात्रामा सम्पत्ति उत्पादन गर्दागर्दै उत्पात गरिबी पनि सँगसँगै सिर्जना गर्छ । यो असंगति पुँजीवादको चाहनाविपरीत सिर्जित परिणाम या पुँजीवादको कमजोर पक्ष होइन । बरु यो पुँजीवादको आधारभूत नियम हो । जनसंख्याको ठूलो हिस्सालाई दरिद्र नराखी पुँजीको उत्पादकत्वमा वृद्धि हुँदैन ।

**यो पनि**

**महान अक्टोबर समाजवादी क्रान्ति र वर्तमान युग**

पुँजीको यस्तो चरित्रअनुरूप पुँजीवादी व्यवस्थाको मूल राजनीतिक विशेषता हो , ठूलो पुँजीको समग्र शासन । पुँजीवादमा व्यक्तिको कार्यस्थल, उपभोग, व्यक्तित्व, संवेग, आत्मा, कानुन, साहित्य, नैतिकता आदि सबै पुँजीको अधीनमा या पुँजीका अनुकूल हुन्छन् । मान्छेको सम्पूर्ण जीवन नै पुँजीको नियमअन्तर्गत निर्धारित हुन्छ । मार्क्स भन्छन् , ‘पुँजीवादमा पुँजी स्वतन्त्र हुन्छ र त्यसको

व्यक्तित्व हुन्छ, जबकि जीवित मान्छे त्यसमाथि पराधीन हुन्छ र उसको व्यक्तित्व हुँदैन ।' सम्पूर्ण सत्ता नै पुँजीको हुने हुनाले यसलाई पुँजीवाद भनिएको हो ।

माथि भनिएजस्तो सामाजीकृत उत्पादन र निजीकृत लाभको प्रक्रियाबाट उत्पन्न संकटको समाधान के हो त ? उत्पादन र लाभ दुवैलाई निजीकृत गर्ने कुरा तत्कालीन अर्थव्यवस्थामा निस्सन्देह अकल्पनीय थियो, हाल पनि अकल्पनीय नै छ । उत्पादनलाई निजीकृत गर्ने र लाभलाई सामाजीकृत गर्ने कुरा पनि उत्तिकै अकल्पनीय हो । त्यस कारण पुँजीवादको यो अन्तरविरोधको समाधानको एउटै बाटो हो, उत्पादन र लाभ दुवैको सामाजिकीकरण या सामूहिक स्वामित्व र व्यवस्थापन, अर्थात् समाजवाद । त्यस कारण पनि पुँजीवादपछि आपरिहार्य रूपले समाजवाद आउँछ भन्ने तर्क गरिएको हो ।

युरोपमा सामाजिक जनवादी या लोककल्याणकारी राज्यहरूले उल्लेख्य मात्रामा यो अन्तरविरोधको हल खोजेका हुन्, जहाँ कतिपय उत्पादनका क्षेत्रलाई सामाजीकृत गरिए र उत्पादनको लाभलाई पनि कर, सामाजिक सुरक्षा, स्वास्थ्य र शिक्षामा लगानीजस्ता विभिन्न संयन्त्रको माध्यमबाट धेरै–थोरै सामाजीकृत गरिए । परिणाम, पुँजीवादको अन्तरविरोध उल्लेख्य रूपले मत्थर भयो र विस्फोटक रूप लिन पाएन । तर १९७० को आर्थिक मन्दीसँगै लोककल्याणकारी व्यवस्थाको पनि संकट सुरु भयो ।

यदि पुँजीवाद मान्छेको पुँजीसँगको अधीनस्थताको व्यवस्था हो भने त्यसको विकल्प समाजवाद पुँजीमाथिको मान्छेको सामूहिक स्वामित्व, नियन्त्रण र व्यवस्थापनको अवस्था हो, हुनुपर्ने नै भयो । कतिपयलाई मार्क्सवादी समाजवादको सामूहिकता या सामाजिकतामाथिको जोड सर्वसत्तावादको सैद्धान्तिक स्रोत हुन सक्ने चिन्ता लाग्छ । बुर्जुवा र तिनका प्रतिनिधि बौद्धिकहरूले यसकै आधारमा पनि समाजवादले निजी स्वतन्त्रता निषेध गर्छ भन्ने प्रचारबाजी गरेकै छन् । तर यो आरोपको ठीक विपरीत समाजवादी सामूहिकताले व्यक्तिको स्वतन्त्रता र त्यसमा आधारित संघको अनिवार्य माग गर्दछ, जसले खास विषयमा निर्णय गर्ने मात्र होइन, सामाजिकता र स्वतन्त्रता स्वयंको निर्धारण गर्छ । निस्सन्देह, स्वतन्त्रताबिनाको सामूहिकता दासता हो र सामाजिकताबिनाको स्वतन्त्रता अस्तित्वविहीन कल्पना मात्र । बुर्जवाहरूले दाबी गरेका सबै निजी स्वतन्त्रता सामाजिक रूपले नै निर्धारित भएका हुन् । मानिसको जीवनमा सामाजिकताबाट स्वतन्त्र रहने 'निजी' को अस्तित्व नै हुँदैन । मानिसको निजत्व स्वयंको निर्माण, प्रयोग र अभिव्यक्ति सामाजिक रूपले हुन्छ ।

मार्क्सकै शब्दमा समाजवाद 'स्वतन्त्र रूपले संगठित मानिसको संघ' हो, जसको सचेत र योजनाबद्ध व्यवस्थापनअन्तर्गत समाजका तमाम मुद्दाहरू सञ्चालित हुन्छन् । यस्तो संघको सामूहिकता र सामाजीकृत उत्पादनमार्फत मानिसले व्यक्ति–व्यक्तिबीचका द्वन्द्वको समाधान गर्छन् र आफ्नो सामाजिक या मानव प्रकृति प्राप्त गर्छन्, जो पुँजीवादले उनीहरूबाट खोसेको हुन्छ । पुँजीवादले मानिसलाई अप्राकृतिक हिसाबले स्वार्थी र व्यक्तिवादी बनाएर उनीहरूको सामाजिकता र मनुष्यत्व हरण गरेको हुन्छ । मार्क्सको समाजवादको यो अवधारणासँग मिल्दोजुल्दो मान्यता राख्छन्, जर्मन दार्शिनेक युर्गन हाबरमास । उनको विचारमा समाजवाद एउटा मुक्त समाजका यस्ता आवश्यक सर्तहरूको योग हो, जसलाई मानिस स्वयंले निर्धारण गर्नेछन् । त्यस्तै, समाजवादलाई सामाजिक जनवाद अर्थात् सामाजिक जीवनका सबै क्षेत्रमा जनवाद (लोकतन्त्र) को स्थापना र अभ्यास मान्ने निकै ठूलो सैद्धान्तिक र राजनीतिक परम्परा मार्क्सवादभित्रै थियो र छ । मार्क्सवादी पार्टीहरूका

नाम नै सामाजिक जनवादी हुने गर्थे । अलि फरक तरिकाले भन्दा समाजवाद स्वतन्त्र मानिसले समानताका आधारमा गर्ने सामूहिक प्रयत्नको अवस्था हो ।

पुँजीवादले मानिस–मानिसको बीचमा मात्रै होइन , मानिस र प्रकृतिको बीचमा पनि शत्रुतापूर्ण द्वन्द्व खडा गरिदिन्छ, जोबिना पुँजीवाद बाँच्नै सक्दैन । त्यसको ठीक विपरीत समाजवादले मानिसका सचेत र बुद्धिमत्तापूर्ण सामूहिक क्रियाकलापमार्फत प्रकृतिसँग द्वन्द्वको समाधान गर्छ । त्यस कारण पर्यावरणवाद स्वतस् मार्क्सवादी समाजवादको अनिवार्य अंग हो ।

**यो पनि**

**'आजसम्म कुनै पनि महान आन्दोलन विनारक्तपात भएको छैन' (मार्क्सको दुर्लभ अन्तरवार्ता)**

कतिपयलाई के लाग्छ भने यस्तो समाजवाद त अप्राप्य आदर्श मात्र हो । तर यो आलोचना त मानव अधिकार , लोकतन्त्र, खुला बजार आदि सबैका हकमा लागू हुँदैन र ? जस्तै, संसारमा मानव अधिकारले कल्पना गरेजस्तो समाज प्राप्त हुन सक्छ, भएको छ ? संसारमा लोकको शासनको रूपमा लोकतन्त्र कतै छ ? एडम स्मिथले भनेजस्तो खुला बजार कहिले थियो , कतै छ ? त्यस कारण समाजवादलाई इन्कार गर्नका लागि माथिको तर्क निकै कमजोर छ किनकि यो तर्कका आधारमा त संसारका सबैजसो आदर्श इन्कारयोग्य हुनेछन् । समाजवादको सम्भाव्यताको पक्षमा एउटा आम तर्क के हुन सक्छ भने हाम्रै जीवनमा हामीले समाजका कतिपय विषय सामाजीकृत या सार्वजनिक पद्धतिअन्तर्गत प्रभावकारी र सफलताका साथ सञ्चालन गरेका छौं या भएको देखेका छौं । यदि हाम्रो जीवनका केही क्षेत्रको सामूहिक सञ्चालन गर्न सम्भव छ भने थुप्रै क्षेत्रहरूको सामूहिक सञ्चालन गर्न किन सम्भव हुँदैन ? जस्तै, वन, खोला, बिजुली, पानी आदि सामूहिक स्वामित्वमा चल्न सक्छन् भने यातायात, कृषि, कारखाना आदि किन चल्न सक्दैनन् ?

समाजवादलाई सामूहिकताको रूपमा परिभाषा गरिरहँदा कतिपयले राज्यको स्वामित्व तथा नियन्त्रणलाई समाजवादी र निजी स्वामित्व एवं नियन्त्रणलाई पुँजीवादीको भनेर बुझ्ने र बुझाउने गर्छन् । तर सधैं त्यस्तो हुँदैन । पुँजीवादी व्यवस्थामा कतिपय राजकीय संस्था र क्रियाकलापले प्रत्यक्ष –अप्रत्यक्ष पुँजीपति वर्गको सेवा गरेका हुन्छन् । त्यसैले राजकीय स्वामित्व स्वतस् समाजवादी चरित्रको हुँदैन ।

समाजवादका लागि समाज कहिले तयार हुन्छ ? स् नेता या दलका आदर्श , प्रबुद्ध इच्छा, संकल्प, उच्च नैतिक बल र जबर्दस्त चाहना , प्रयत्न तथा प्रतिबद्धताले समाजवाद ल्याउँछ ? समाजमा दुस्खीहरूको संख्या बढ्दा समाजवादको आधार बन्छ ? कतिपयले यी प्रश्नमा सकारात्मक उत्तर दिने झुकाव राख्छन् । तर ऐतिहासिक भौतिकवादी दृष्टिकोणले हेर्दा यस्तो झुकाव सिद्धान्ततस् काल्पनिक समाजवादी विचारअन्तर्गत पर्दछ । इतिहास निर्माणबारे मार्क्स स्वयं यो सामान्यकृत मत राख्छन् कि मानिसले आफ्नो इतिहास आफैं बनाउँछन् तर उनीहरूले आफूले चाहे जसरी आफैंले छानेको अवस्थामा होइन । यो नियम समाजवाद निर्माणको हकमा पनि लागू हुन्छ नै ।

ऐतिहासिक भौतिकवादको सरल नियमअनुसार आफूभित्र उत्पादक शक्तिको विकासको ठाउँ रहुन्जेल कुनै पनि सामाजिक व्यवस्था ढल्दैन , पुँजीवाद पनि ढल्दैन । पुँजीवाद ढल्ने बिन्दुमा या संकटमा नपुगी समाजवादको आधार तयार हुँदैन । पुँजीवादमा संकट तब आउँछ, जब पुँजीको निरन्तर पुनरुत्पादन हुने या उत्पादक शक्तिको निरन्तर

विकास हुने भौतिक अवस्थाको अन्त्य भएको हुन्छ । यो नियम नेपालको हकमा लागू गर्दा के देखिन्छ भने हाल प्रभुत्व या शासनमा रहेको दलाल या अनुत्पादक पुँजीले आफूलाई निरन्तर विकास र विस्तार गर्न सकुन्जेल यसले उत्पादक पुँजीको विकासको ठाउँलाई संकुचित गरिरहन्छ । उत्पादक पुँजीको विकास समाजवादमा संक्रमणका लागि अनिवार्य मानिएको अवस्थामा दलाल पुँजीको हालको सफलता समाजवादउन्मुखताका लागि निर्णायक रूपले प्रतिकूल भइरहनेछ ।

पुुँजीवादको संकटबाट समाजवाद स्वत: आउँदैन । समाजवाद कुनै एजेन्सी या कर्ताका सचेत र योजनाबद्ध प्रयत्नबाट मात्र ल्याइन सक्छ । यस्तो एजेन्सी समाजका ती वर्ग या वर्गहरूले बन्दछ, जो पुँजीवादका पीडित समूह हुन् र जसले समाजवादमा मात्रै आफ्नो निजी तथा सामूहिक हित देख्छन् । यी वर्गले आफूलाई आफ्नो बहुसंख्या र चेतनाका आधारमा संगठित गर्नुपर्छ । नेपालको सन्दर्भमा हेर्दा त्यस्ता वर्ग छन् ? ती वर्ग संगठित छन् ? यसको ठोस अवस्थाको कुनै वैज्ञानिक अध्ययन भएको छैन । समाजवादउन्मुखता तात्कालिक लक्ष्य बताउने नेकपाले पनि आफ्नो दस्तावेजमा वर्गहरूबारे साह्रै थोरै र अन्योलपूर्ण कुरा लेखेको छ ।

नेकपाले आफूलाई सर्वहारा श्रमजीवी वर्गको राजनीतिक प्रतिनिधि भएको दाबी गर्छ । यो वर्ग कहाँ र कत्रो छ भन्ने कुरा नेकपा बताउँदैन । बरु लगत्तै आफूले प्रतिनिधित्व गर्नुपर्ने सूचीमा 'निम्न तथा मध्यम वर्ग र परिवर्तनमा सहयोगी हुने राष्ट्रिय पुँजीपति वर्ग' लाई समेत समावेश गर्छ । थप, वर्तमान राष्ट्रिय परिस्थितिको चर्चा गर्दै हाल 'सबै वर्ग, क्षेत्र र समुदायका जनताको एकता' मार्फत नवऔपनिवेशिक शोषणविरुद्ध लड्नुपर्ने प्रस्ताव गर्छ । प्रश्न उठ्छ, कुनै राजनीतिक पार्टीले एकै साथ सर्वहारादेखि पुँजीपति वर्गको वर्गीय हितको प्रतिनिधित्व गर्न सक्छ ? के नवऔपनिवेशिकताको वर्गीय संरचना हुँदैन, जसका कारण यसविरुद्ध सबै वर्गलाई गोलबन्द गर्न सकिन्छ ?

यदि सामाजिक कल्याणका नीतिहरूको कार्यान्वयनलाई हालको सन्दर्भमा समाजवादउन्मुखता मान्ने हो भने पनि यसले सार्वजनिक क्षेत्र तथा राज्यको प्रत्यक्ष र प्रभावकारी भूमिकाको जोडदार माग गर्दछ, जुन कुरा राज्यको कल्याणकारी भूमिकामा आफ्नो हित देख्ने वर्ग, समूह, नागरिक आदिको बलियो उपस्थिति र सक्रियताद्वारा मात्र सम्भव हुन्छ । छोटोमा भन्दा समाजवाद या समाजवादउन्मुखताको अनिवार्य वर्ग आधार हुन्छ । वर्ग आधारबिनाको समाजवादको चाहना 'मुंगेरीलालके हसिन सपने' जस्तै हो ।

## समाजवाद संक्रमणको अन्योल

समाजवादउन्मुखतालाई आफ्नो तात्कालिक लक्ष्यको रूपमा प्रचार गरिरहेको नेकपाले नेपाली जनवादी क्रान्ति समाजवादउन्मुख तथा जनताको जनवादका रूपमा प्रकट भएकाले हालको अवस्थालाई 'समाजवादतिर अगाडि बढ्ने आधार भएको' भनेर जिकिर गरेको छ । अर्कोतर्फ, नेकपाले धेरै ठाउँमा हालको चरण समाजवादको आधार तयार गर्ने समय रहेको दाबी गरेको छ । तर नेकपाको मूल मत पछिल्लो नै हो । चरणसम्बन्धी अन्योल अर्को ठाउँमा अलि प्रस्ट देखिन्छ । नेकपा एकातर्फ 'नेपाली समाज आम रूपमा समाजवादी क्रान्तिको ऐतिहासिक चरणमा प्रवेश गरेको' दाबी गर्छ भने अर्कोतर्फ तात्कालिक रूपमा 'समाजवाद होइन, समाजवादको आधार तयार पार्ने' कार्यभार रहेको दलिल गर्छ ।

समाजवाद नै लागू गर्न नसकिने अवस्थामा क्रान्तिले समाजवादको चरण प्रवेश गरेको भन्न मिल्छ ? पुँजीवादी जनवादी क्रान्ति सम्पन्न भएपछि समाजवादको चरण सुरु हुन्छ भन्ने मान्यता र हाल नै सामाजवादमा संक्रमण गर्न

सकिन्न भन्ने वस्तुस्थिति बोधको घुलनका कारण यस्तो अन्योलपूर्ण निष्कर्ष निक्लेको अनुमान गर्न सकिन्छ । तर यो अन्योलको अरू अन्योलहरूसँग पनि सम्बन्ध छ । नेकपा एकातिर सामन्तवादविरोधी जनवादी क्रान्ति 'मूलभूत रूपले सम्पन भएको ' निष्कर्ष निकाल्छ भने अर्कोतर्फ सामन्तवादका अवशेषलाई तत्कालीन क्रान्तिको चरणका दुई मुख्य शत्रुमध्ये एक मान्छ , अर्कोचाहिँ दलाल पुँजीवाद । सामन्तवादविरोधी क्रान्ति सम्पन्न हुनु भनेको सामन्तवाद आधारभूत रूपले समाप्त भएको मान्नु पर्ने हुन्छ , जुन अवस्थामा त्यसका अवशेष न्यून मात्रामा र कमजोर अवस्थामा मात्र बाँकी रहेका छन् भनेर मान्नुपर्ने हुन्छ ।

केही सामन्तवादी अवशेष बाँकी छन् भनेर मान्ने हो भने पनि ती अबको क्रान्तिका मुख्य शत्रुमध्ये एक हुन् भनेर मान्न भने किमार्थ सकिन्न । अवशेषले समाजको रूपान्तरणलाई मूल रूपले बाधा गर्ने भौतिक शक्तिको हैसियत निश्चय नै राख्दैन । आखिर कस्तो क्रान्तिकारीले अवशेषलाई आफ्नो प्रधान शत्रुमध्ये एक मान्दछ ? त्यस्तै, नेकपा एकातिर जनवादी क्रान्ति आधारभूत रूपले सम्पन्न भएको जिकिर गर्छ भने अर्कोतिर जनवादी क्रान्तिका बाँकी कार्यभार पूरा गर्ने कुरालाई क्रान्तिको महत्त्वपूर्ण कार्यभार मान्दछ । जनवादी क्रान्ति आधारभूत रूपले सम्पन्न भएको मान्दा पनि त्यसका केही थोरै कुरा बाँकी रहेको मान्न सकिन्छ । तर यी थोरै बाँकी कुरा अबको क्रान्तिको कार्यभारको मुख्य सूचीमा भने निश्चय नै नपर्नु पर्ने हो । सम्भवतस् यी सबै अन्योल आज नेपाली समाजको अर्थ –राजनीति कस्तो छ भन्ने अन्योल, अस्पष्टता र अज्ञानताबाट उत्पत्ति भएको हुनुपर्छ ।

### समाजवादको अवधारणाको अन्योल

नेकपाले आफ्नो समाजवाद 'प्रजातान्त्रिक समाजवाद' र 'सोभियत मोडल' को समाजवादभन्दा भिन्नै र 'उन्नत' हुने दाबी गरेको छ । लोकतन्त्र या बहुदलीय प्रतिस्पर्धात्मक प्रणाली समाजवादको अभिन्न अंग हुने नेकपाको सिद्धान्त छ । साथै , सर्वहारा वर्गको सत्ता , सर्वहारामाथिको उत्पीडनको अन्त्य, सर्वहारालाई सामाजिक न्याय र सुखद जीवन, समन्यायिक वितरण आदि यसका अन्य महत्त्वपूर्ण विशेषता हुनेछन् । यो समाजवादको अवधारणामा केही गम्भीर अन्योल छन् । सर्वहारा वर्गको सत्ता र बहुदलीय व्यवस्थाको साइनो कसरी सुमधुर होला ? समाजवादमा रूपान्तरणले वर्ग संरचनाको विघटन गर्दै लान्छ कि वर्गीय समाजभित्र मजदुरलाई आर्थिक न्याय र सुखद जीवन दिन्छ ? सर्वहारा वर्ग आफ्नै सत्तामा पनि सर्वहारा नै रहिरहन्छ ? सामाजीकृत उत्पादन र वितरणको स्थान कति हुन्छ ? उन्नत हुने संकल्प गरे पनि आर्थिक न्याय , समन्यायिक वितरण , सुखद जीवन , पर्यावरण संरक्षणजस्ता लक्ष्यले यसलाई आजका प्रजातान्त्रिक समाजवादी , सामाजिक जनवादी, ग्रीन पार्टीसँग नजिक लग्छ । माक्र्सवादलाई मार्गदर्शक माने पनि नेकपाको समाजवाद माक्र्सवादी समाजवादसँग टाढाको साइनो राख्छ ।

संक्षिप्तमा भन्दा , समाजको तत्कालीन परिस्थितिमा समाजवादको सम्भावना रहेकोरनरहेको, समाजवाद चाहने वर्ग भएकोरनभएको बुझ्नु र समाजवाद स्वयंको स्पष्टता निर्धारण गर्नु समाजवादी यात्राका आवश्यक सर्त हुन् ।

**(प्रसाई नेपाल खुला विश्वविद्यालयमा राजनीतिक दर्शनशास्त्र पढाउँछन् । उनको यो लेख नेपाल साप्ताहिकमा समाजवाद बहस भाग ५ मा प्रकाशीत भएको छ)**

# स्वाधीनतामा गासिँएको अफ्रीकी समाजवादी संघर्ष

• ज्योतिलाल बन

चिनारी

संसारका सात महादेशहरुमध्येको एउटा हो अफ्रीकी महादेश । विश्वको दोस्रो ठूलो महादेश पनि हो । भूमध्ये रेखाले ठिक बीचबाट काटेकोले उत्तर र दक्षिणगोलाद्र्धमा बराबर फैलिएको यो महादेशका ेसरदर क्षेत्रफल २ ,९७,८५,००० बर्ग कि.मि. रहेको छ । विश्वको सबैभन्दा ठूलो मरुभूमि सहारा (६८,००,००० बर्ग कि.मि.), सबैभन्दा लामो नदि नाइल, ठूलो हिरा खानि किम्वर खान , स्वर्ण उत्पादकनग र जोहान्सवर्ग यसै महादेशमा पर्दछन् । अग्ला पठारहरुबाट बनेको यस महादेशलाई मानवको उद्गम थलो मानिएको छ । यस महादेशमा ५४ देश रहेका छन् र हाल यहाँको कुल जनसंख्या लगभग १ अरब रहेको अनुमान गरिन्छ ।

प्राकृतिक संसाधनहरुबाट भरिपूर्ण रहे पनि अफ्रीका विश्वको सबैभन्दा दरिद्र र अविकसित भू –भागमा गनिन्छ । यो महादेशमा अहिले पनि निकै ठूलो जनसंख्या शिक्षाको अवसरबाट वञ्चित रहेको छ । यहाँ विद्यमान गरिबी र चेतनाको न्यूनता कै कारण धनी , बलिया र बाठा देशहरुले यस महादेशभित्रका देशहरुमा रजाइँ र यहाँका जनताहरुमाथि चरम शोषण उत्पीडन गर्दै आए ।

यूरोपमा भएको औद्योगिक क्रांतिपश्चात यूरोपीयनहरुले कच्चा माल प्राप्त गर्ने र उत्पादित माल बेच्नका लागि उपयुक्त ठाउँहरु खोज्ने क्रममा अफ्रीकी महादेश पत्ता लगाएका थिए । त्यहाँ हिरा, सुन, तामा, यूरेनियमजस्ता वहुमल्य खनिज सम्पदा फेला परेपछि यूरोपियनहरुका लागि अफ्रीकी महादेश ढुङ्गा खोज्दा देउता मिले सरहहुन गयो ।उनीहरुले ती सम्पदाहरुको दोहन गर्न थाले र यस महादेशभित्र आफ्नो आधिपतित्व कायम गर्न पुगे । अफ्रीकाको अर्थ व्यवस्थालाई यूरोप केन्द्रित गरी अधिकांश अफ्रीकी देशहरुलाई उपनिवेश बनाइयो र त्यहाँका जनतालाई दासमा परिणत गरियो ।

**पहिले स्पेन र फ्रान्सले लुछेको े अफ्रीकालाई क्रमशः यूरोपका अन्य देशहरु र अठारौं शताब्दीदेखि संयुक्त राज्य अमेरिकाले पनि लुछ्न थाले । यी उपनिवेशवादीहरुले अफ्रीकी जनताहरुलाई आफ्नो दाश बनाउन यूरोप अमेरिका ओसारे र अत्यन्त पाशविक अत्याचार गरे । उन्नाइसौं शताब्दीको उत्तरार्धमा यूरोप तथा अमेरिकामा दास प्रथा उन्मुलनको घोषणा गरियो । बीसौं शताब्दीको अन्त्यसम्म आइपुग्दा औपनिवेशिक शासन पनि औपचारिक रुपमा कायम रहेन । तर कुनै न कुनै हिसावले यी मुलुकहरुमा आफ्नो बजार विस्तार गर्ने , आधिपतित्व कायम राख्ने र यहाँको प्राकृतिक सम्पदा दोहन गर्ने वैदेशिक हस्तक्षेपको व्यवहार भने अहिले पनि रोकिन सकेको छैन ।**

अफ्रीकालाई पहिले प्रत्यक्ष र क्रुरतापूर्वक लुटिएको थियो भने अहिले परोक्ष र नरम विधि अपनाएर चुस्ने परंपराको विकास गरिएको छ । यसमा पहिले यूरोप र अमेरिकाले एकलौटी रजाई गरेका थिए भने अहिले भारत र चीन जस्ता देशहरु पनि थपिन पुगेका छन् । त्यसैले यतिबेला पनि अफ्रीकाका अधिकांश मुलुकहरु अघोषित औपनिवेशिकता र नवदासत्वको बन्धनबाट मुक्त हुन सकेका छैनन् ।

**समाजवादी आन्दोलनको विकासक्रम**

अफ्रीकी महादेशमा प्रथम विश्व युद्धको समाप्तिसम्म आइपुग्दा पुँजीवाद र उपनिवेशवादलाई उखेलेर फ्याक्ने संघर्षमां राष्ट्रिय मुक्ति आंदोलन तथा कम्युनिस्ट प्रवृत्तिहरु स्पस्ट देखिन थालेका थिए । सन् १९१७ मा बोल्शेविक क्रांतिबाट शुरू भएको विद्रोह र क्रांतिकारी उभार सम्पूर्ण उत्तरी अमरीका , यूरोप, अफ्रीका र एसियामा फैलन पुग्यो । बोल्शेविक क्रान्ति एउटा यस्तो क्रान्ति थियो जसले पहलो पटक पूजीवादलाई पूर्णतया उखेलेर फालेको मात्र नभै यस्तो शोषणकारी व्यवस्थाका ठाउँमामजदूर तथा उत्पीड़ितहरुलाई सत्तासीन बनाउने समाजवाद स्थापित गरेको थियो ।

सन १९२० को दशकमा राष्ट्रिय मुक्ति आन्दोलनहरु र समाजवादी पार्टिहरुका बीच विश्वव्यापी संश्रय बनाउने प्रयास र उभार आयो । १९२० को दशकको अन्त्यसम्म पुँजीवाद दुनिया आफ्नो सवभन्दा खराब आर्थिक संकटमा फस्न पुग्यो । यो संकट१२ वर्षसम्मअर्थात १९४१ मा संयुक्त राज्य अमेरिका द्वितीय विश्व युद्धमा होमिदासम्म जारी रह्यो ।

१९३० को दशक भित्र भएकोयो पँुजीवादी व्यवस्थाको पतनले यूरोप र जापानलाई फासीवाद तर्फ धकेल्यो । १९३० र १९४० कोे दशकमां फासीवाद विरुद्धको लड़ाइमा कम्युनिस्टर राष्ट्रीय मुक्ति आंदोलनलेनेतृत्व गरे । १९४५ मायुद्धको नतीजानिर्धारण गर्नमा यिनको भूमिका निर्णायक बनेको थियो ।

१९४५ को शुरूदेखि नै कम्युनिस्ट र राष्ट्रिय मुक्ति आंदोलनले पुँजीवाद र उपनिवेशवादलाई उखेलेर फ्याक्ने आफ्नो प्रयासलाई तीव्रता दिए । कोरिया , वियतनाम, पूर्वी यूरोप र अंततोगत्वा चीनमा उनीहरु निर्णायक रुपमा नै विजयी भए ।

१९४७ सम्म भारत पनि ब्रिटिश साम्राज्यवादबाट स्वतन्त्र भैसकेको थियो। त्यसै गरी अफ्रीकी महाद्वीपले पनि औपनिवेशक शासनको जुवा उतारेर फ्याक्नका लागि आफ्नो लोकप्रिय अभियान थालिसकेकोे थियो ।

द्वितीय विश्व युद्धपछि सम्पूर्णपँुजीवादी दुनियामा संयुक्त राज्य अमरिकी शासक वर्गको प्रभुत्व जम्न गयो । ब्रिटेन , फ्रांस, जर्मनी, इटली, स्पेन र जापान १९३० र १९४० को दशकमा आफ्ना सीमाहरु भित्र चलेको व्यापक लड़ाईले बेहाल अवस्थमा पुगेका थिए ।

सन् १९४२ र १९४३ मा स्तालिनग्रादमा भएको लड़ाईबाट सोवियत संघले भीषण क्षेति बेहोर्नु परेपनि द्वितीय विश्व युद्धपछि अंतर्राष्ट्रीय स्तरमा यो एउटा अर्कोे ठूलो शक्तिशाली देशको रुपमा विकास हुन पुगेको थियो । त्यतिबेला सैनिक र राजनैतिक हिसावले अमरिकी साम्राज्यवाद अगाडी देखिए पनि अन्य हिसावले सोवियत संघ अमेरिका भन्दा कम थिएन । सोवियत संघको उदयपछि समाजवाद पूर्वी यूरोपका सवै देशमाफैलन पुग्यो । यसैक्रममा यूगोस्लावियाले पनि फासीवादका विरुद्धको प्रतिरोधबाट आफुलाई मुक्त गरेर समाजवादकोबाटो रोजेको थियो ।

सन् १९५४ सम्म आइपुग्दा वियतनामका जनताले फ्रांसीसी साम्राज्यवादलाई पराजित गरे । तर दक्षिण पूर्व एशियाई राष्ट्रको दक्षिणी हिस्सालाई भने अमरीकी साम्राज्यवादले कब्जा ग ¥यो । यसै वर्ष अल्जीरियाको राष्ट्रीय मुक्ति मोर्चाले उत्तरी अफ्रीकामां फ्रांसीसी साम्राज्यवादका विरुद्ध सशस्त्र संघर्षको शुरुवात गरेको थियो।

अफ्रीकी देश घानाका प्रखर समाजवादी बुद्धिजीवी र त्यहाँका प्रथम राष्ट्रपति क्वाने न्त्रूmमाले १९४९ मा स्थापित कन्वेन्शन पीपुल्स पार्टीका तर्फबाट घानामास्वतन्त्रता संघर्षको थालनी गरेका थिए।न्त्रूmमा आफ्नो जीवनको अन्तिम समय (१९७२) सम्म अफ्रीकी क्रान्तिका मुख्य रणनीतिकार र रणकौशलकारको रुपमा क्रियाशील

रहे ।त्यतिबेला उपनिवेशवाद र साम्राज्यवादका विरुद्ध अफ्रीकिहरुको नेतृत्वमां चलेका आंदोलनहरु अलग–थलग थिएनन् । अफ्रीकी मुक्ति आंदोलर समाजवादका लागि उठेको संघर्षको आँधीलाई शोषण र उत्पीड़नका सवै रुपका विरुद्ध विश्वव्यापी प्रयासको संदर्भमां राखेर हेरेका थिए ।

**द्वितीय विश्वयुद्धपछि क्रुमाले भनेका थिए – “युद्धपछि पूजीवादी –साम्राज्यवादी राज्यभित्रका मजदूर संगठनहरु तुलनात्मक रुपमा बलिया र अनुभवी भएका छन् । त्यसैले अव पँुजीवादी अर्थव्यवस्थाद्वारा उत्पादित सम्पदामा मजदूर वर्गले बढी हिस्सा पाउनका लागि गरेको दाबीलाई नकार्ने स्थिति छैन । साम्राज्यवादी युद्धका कारणयूरोपीय पँुजीवादी व्यवस्था छिन्न –भिन्न अवस्थामा पुगेकाले पनि यो संभावना प्रवल बन्न पुगेको छ ।”**

साथै उनले “पँुजीवादी व्यवस्था आफ्नै आन्तरिक संकटबाट ग्रस्त बन्दै गएपछि औपनिवेशिक क्षेत्रहरुका मुक्ति आन्दोलनहरु सशक्त रुपले अगाडी बढ्दै छन् ।अव यस्ता आन्दोलनहरुबाट उठाइएका मागहरुलाई किनारा लगाउन वा बेवास्ता गर्न सकिने स्थिति छैन । खासगरी गिनी , घाँना,केन्या,अल्जीरिया, वियतनाम जस्ता मुलुकहरुमा उठेका आन्दोलनहरु अप्रतिरोध्य बन्दै गएको” वास्तविकता पनि उल्लेख गरेका थिए ।

न्क्रुमाका अनुसार – राष्ट्रीय मुक्ति आंदोलनको आँधीले साम्राज्यवादलाई आफ्नो रणनीति फेर्नका लागि बाध्यता नै सृजना गरिदिएको छ । साम्राज्यवादी देशहरुले आफ्नो देशमा ‘कल्याणकारी’ योजना लागू गरेको मात्र होइन , आफ्ना औपनिवेशिक क्षेत्रहरु भित्र पनि कतिपय सुधारवादी कदम अगाडी बढाउनका लागि त्यहाँका नयाँ शासकहरुलाईसहयोग गर्न थाले । आफ्नो औपनिवेशिक पकडलाई बलियो र दीर्घकालीन बनाउने नियत अनुसार नै साम्राज्यवादीहरुले यस्तो विधि अपनाएका थिए । तर उनका यस्ता चलाखीहरु सफल हुन सकेनन् । सन् १९९४ सम्म आइपुग्दा एक –एक गरेर अफ्रीकी देशहरुस्वतन्त्र भए । यसै बखत अफ्रीकी स्वाधीनता र समाजवादका महानायक नेलसन मण्डेलाको अगुवाईमा भएको प्रभावकारी संघर्षका कारण रंगभेदवादी स्वेत शासकहरुले प्रत्यक्ष शासन चलाउदै आएको दक्षिण अफ्रीका पनि ती शासकको चङ्गुलबाट मुक्त हुन पुग्यो ।

## अफ्रीकाम–नाटो र अफ्रीकाको सैन्यीकरण

तर अमेरिकाले अफ्रीकी महादेशमा आफ्नो वर्चस्व कायम राख्न अर्को जुक्ति निकाल्यो । त्यो थियो ‘अमेरिकी–अफ्रीकी कमाण्ड’ (अफ्रीकाम) को स्थापना । सन् २००८ मा ‘आतंकवादका विरुद्ध लड्न मद्दत गर्ने’ नाममा स्थापना गरिएको अफ्रीकामलेअफ्रीकमा एउटा यस्तो नेटवर्क बनायो , जो अमेरिकी सैन्य सहयोग र आर्थिक सहायतामा निर्भर रहेको छ र अमेरिकी आदेशको पालन गर्दछ ।

सन् २०१२ मायसद्वारा आयोजित ‘अप्रेशन अफ्रीकन इण्डेवर ’ ले अफ्रीकी महाद्वीपका३५ देशहरुमा अमेरिकी सैन्य कमानको देख –रेख भित्रं सैन्य अभ्यास गरेको थियो ।अमेरिकी डिफेन्स एण्ड स्टेट डिपार्टमेण्टका सल्लाहकार डाण जेणपीटर कामका अनुसार –‘अफ्रीकामको मुख्य उद्देश्य अफ्रीकाको हाईड्रोकार्बन र अन्य सामरिक महत्वका प्राकृतिक संसाधनहरुलाईअन्य अन्तर्राष्ट्रीय शक्तिहरुको हस्तक्षेपबाट बचाई यसलाई सुरक्षित किसिमले निर्धारित स्थानसम्म पु¥याउनु हो ।’

अमरिकाले जिबूतीमा एउटा सैन्य अखडा पनि स्थापनागरेको छ । यसका अतिरिक्त ड्रोन स्टेशन , सी.आई.ए.को अड्डा आदि अमरीकी साम्राज्यवाद तथा विभिन्न अफ्रीकी राज्यहरुका बीच भएको संयुक्त कार्वाही अन्तरगतका संझौताहरु हुन् । अमेरिकी राष्ट्रपति ओबामाले दिसम्बर २०१२ मा

गरेको घोषणा अनुसार ३५००अमेरीकीसैन्यप्रशिक्षकहरुलाई ३५ अफ्रीकी राज्यहरुमा पठाइएको थियो । 'आतंकवादका विरुद्ध लड़नका लागि गरिएको मद्दत ' का नामबाट हुदै आएका यस्ता सवै अभ्यासहरु सारतः साम्राज्यवादी हस्तक्षेप नै हुन् ।

लीबियाकातानाशाह कर्नल गद्दाफीका विरुद्ध अमरिका लगायतका साम्राज्यवादिहरुबाट भएको हस्तक्षेप र आक्रमणका क्रममा हजारौं मानिसहरु मारिए । यसै कारण लगभग २० लाख लीबियालीहरु आफ्नो घरबास छाडेर अन्यत्र जान बाध्य भएका थिए ।

लीबिया र सोमालियामा भएकों युद्ध यसका छिमेकी देश माली , नाइजर र केन्यामा समेत फैलन पुग्यो । दक्षिण सोमालियामाथि कब्जा जमाउन पुगेको केन्याले अमरिकी साम्राज्यवादीहरुको छत्रछायामा त्यस क्षेत्रभित्र २ देखि ३ हजार फौज लगेर राखेको थियो । यी सवै अमरिकी साम्राज्यवादीहरु र नाटोद्वारा व्यवस्था परिवर्तनका नाममा अफ्रीकी मुलुकहरुको राष्ट्रिय सार्वभौमिकतामाथि गरिएका हस्तक्षेप र हमलाहरु नै हुन् ।

## अबको बाटो

यूरोप तथा अमेरिकामा आर्थिक संकट गहिरिदै गएको छ । यो आर्थिक संकट त्यतिबेला राजनीतिक संकटमा परिणत हुन पुग्छ, जब व्हाइट हाउस, कांग्रेस, डाउनिङ्ग स्ट्रीट, ब्रुसेल्सतथा पेरिस करोडौं मजदूरं , किसानर युवाहरुलाई प्रभावित बनाउदै आएको आर्थिक दुर्दशाबाट पूँजीवादी व्यवस्थालाई बचाउनका लागि कुनै वैकल्पिक विचार पेश गर्न सक्दैनन् । यसरी गहिरिदै गएको विश्व पूँजीवादी संकटको वर्तमान अवस्थमायस्तो आर्थिक व्यवस्थाले न अफ्रीकी समस्याहरुको समाधान गर्न सक्छ न त यो यूरोप र उत्तरी अमरीकाका जनताका समस्याहरुको वास्तविक समाधान नै हो । त्यसैले अफ्रीका र यहाँका जनताको विकास तथा सम्बृद्धिका लागि वित्तीय पूँजीमा आधारित साम्राज्यवादी व्यवस्थासँग निर्णायक विच्छेदको नितान्त आवश्यकता देखिन्छ ।

यस्ता चुनौतिहरुलाई समाधानतर्फ लानका लागि व्यापक जनसमुदायमा राजनीतिक शिक्षा , आपसी एकताको विकास र संगठनको विस्तारमा क्रियाशील रहनु नै यतिबेला अफ्रीकी मुलुकहरुको प्रमुख आवश्यकता देखिन्छ । अफ्रीका र प्रवासी अफ्रीकिहरुको संकट कुनै पनि हिसावले संसारका सवै शोषित उत्पीडित जनताले अधिकार स्वतन्त्रताका लागि गर्दै आएका संघर्षहरुबाट पृथक छैन ।

अफ्रीकी यूनियनले यस महाद्वीपबाट अमरीका , फ्रांस, ब्रिटेन, जर्मनी, इजरायललगायत अन्य साम्राज्यवादी राज्य तथा तिनका सहयोगिहरुलाई हटाउनका लागि आवश्यक कार्वाही अगाडी बढाउन आवश्यक छ । यतिबेला पनि अफ्रीकी समस्याहरुको जरो यस महाद्वीपमा कुनै न कुनै रुपले जमेर बसेको साम्राज्यवादी व्यवस्थाको प्रभुत्व भित्र पाउन सकिन्छ ।

उत्तरी अमरीका र यूरोपमा रहेका अफ्रीकी प्रवासिहरुका संदर्भमां नस्लवाद तथा राष्ट्रीय उत्पीड़नका विरुद्ध हुदै आएका संघर्षहरु महत्वपूर्ण रहेका छन् । अफ्रीकी आप्रवासिहरुको शक्ति सर्व – अफ्रीकावादको आदर्श अनुसार नै संचालित रहेकाले अफ्रीकी स्वतन्त्रताको आंदोलनलाई समग्रतामा सुदृढ़ बनाउन यसले निर्णायक भूमिका निभाउदै आएको छ । यसले अझै सर्व अफ्रीकावाद वा अफ्रीकी पुनर्जागरणका लागि यो भूमिकालाई प्रभावकारी रुपमा अगाडी बढाउनु आवश्यक छ ।

सन् १९६३ देखि नै अफ्रीकी, अमेरिकी र केरिबियाई अफ्रीकी जनताले अफ्रीकी मुक्तिको अवधारणालाई लोकप्रिय बनाउने संघर्षमा महत्वपूर्ण भूमिका

निभाएउदै आएका छन् । १९८० र १९९० को दशकमां अफ्रीकी ÷अमरीकी जनताबाट प्रभावित दक्षिणी अफ्रीकी एकजुटता संघर्षलेत्यतिबेलाको रंगभेदी व्यवस्थाका विरुद्ध पहिलो पटक विधायी र प्रशासनिक कार्बाही गर्नमा सफलता पाएको थियो ।

अमेरिकामा ओबामा प्रशासन आएपछि सर्व – अफ्रीकी संघर्षको वर्ग चरित्रमाथि जोड दिनुपर्ने आवश्यकता बढ्न पुगेको छ । अफ्रीका अमरीकी साम्राज्यवादको कुनै पृष्ठभाग होइन । त्यसैले यसको स्वतन्त्रता तथा संप्रभुतालाई सही अर्थमा पूर्ण रुपले प्रयोग गर्ने मौका दिइनु पर्छ ।

संयुक्त राज्य अमरीकामा रहेका अफ्रीकी मूलका अमेरिकीहरुले निकै चर्को आर्थिक संकटको सामना गर्दै आएका छन् । द्वितीय विश्व युद्धपछिको जनसंघर्षबाट उनीहरुले जे जति राजनीतिक अधिकार प्राप्त गरेका थिए , त्यो पनि खोस्दै लगिएको छ । यो वर्ष (२०१६) सम्पन्न अमेरिकी राष्ट्रपतिको निर्वाचनमा रिपब्लिकन पार्टीबाट अनुदार र स्वेत नस्लवादी मान्यता राख्ने डोनाल्ड ट्रम्प विजयी भएपछि यो अधिकार अरु खोसिने संभावना बढेको छ ।

त्यसैले न्क्रूमाले आफ्नो पुस्तिका ‘क्रांतिकारी युद्धको हैण्डबुक’ मा उल्लेख गरे झै – साम्राज्यवाद र विदेशी उत्पीड़नका सवै रुपहरुलगायत नव – उपनिवेशवादलाई खुट्याएर यिनलाई परास्त गरी यस महाद्वीपीय फ्रेमवर्क भित्र नयाँ अफ्रीकी राष्ट्र विकसित गरिनु आजको नितान्त आवश्यकता बनेको छ । यसका लागि तमाम अफ्रीकी राष्ट्र तथा जनताहरुका बीचको आपसी एकता अपरिहार्य रहेको छ ।

अफ्रीकी मुलुकहरुमा स्वतन्त्रता र समाजवादका लागि आजसम्म चल्दै आएका संघर्षहरुको अनुभवका आधारमा भन्दा अफ्रीकी एकताको अवधारणाको केन्द्रमा समाजवाद र नयाँ अफ्रीकी समाजको समाजवादी परिभाषा रहेको छ ।

समाजवाद र अफ्रीकी एकता एक अर्काका पूरक हुन । संसारमा केवल एउटामात्रवास्तविक समाजवाद छ, त्यो हो वैज्ञानिक समाजवाद, जसको सिद्धान्त सवैतिर लागू हुन सक्छ र सार्वभौमिक छ ।

वैज्ञानिक समाजवादमा आधारित क्रांतिकारी सर्व – अफ्रीकावाद अफ्रीकी जनता तथा सम्पूर्ण संसारका आफ्ना सहयोगिहरुलाई पँुजीवादी समाज तथा विश्व साम्राज्यवादी व्यवस्थाको रूपान्तरणका लागि संगठित र एकताबद्ध हुनका लागि अधिकतम योगदान गर्न आवश्यक छ । अफ्रीकी स्वतन्त्रता , मुक्ति तथा समाजवादका निम्ति विगत छ दशक पहिलेदेखि चल्दै आएका संघर्षहरुले सिकाएको पाठ यही नै हो ।

### मुख्य सन्दर्भ सूची:

१) अबायोमी अजी किवे(पैन अफ्रीका न्यूज वायरका सम्पादक)

२) एन.डी. अरोडा, राजनीतिक विज्ञान ४३.२,

३)*'Neocolononial Ritual and Servitude to the West: Gratifying the African Elites with Human Rights Awards, Grants and Prizes'*

४) रामविलास शर्मा, महावीर प्रसाद द्वीवेदी और हिन्दी नव जागरण–४०, राजकमल प्रकाशन, नयी दिल्ली २००२

## डा. भुसालको खोजमुलक लेखः मार्क्सवाद के हो ?

• डा. वेदुराम भुसाल

**(डा. वेदुराम भुसाल नेकपाका स्थायी समिति सदस्य तथा राष्ट्रिय सभाका सदस्य हुन ।)**

### मार्क्सवादको सामान्य परिभाषा

**मार्क्सवाद**लाई, समाजवादी क्रान्तिको सिद्धान्त , श्रमजीवी वर्गको मुक्तिको सिद्धान्त , समाज परिवर्तनको क्रन्तिकारी सिद्धान्त आदि भनिन्छ ।

अन्तर्वस्तुको हिसावले यो एक वैज्ञानिक दर्शन , क्रान्तिकारी समाज विज्ञान र श्रमजीवी वर्ग पक्षधर राजनीतिक अर्थशास्त्र हो , जसले श्रमजीवी वर्गको मुक्ति र सिंगै समाजको परिवर्तनका निम्ति मार्गदर्शन गर्दछ ।

## मार्क्सवादको सान्धर्भिकता

'माक्रसले वौद्घिक रुपमा एउटा यस्तो युग प्रस्तावित गर्छन् , जुन सताव्दीऔंसम्म अर्थात राजनीतिक समाजको विलोप र नियमवद्घ समाजको आगमन नभएसम्म कायम रहनेछ । उनको विश्व अवधारणा तवमात्र विस्थापित हुनेछ , जव आवस्यकताको अवधाराणालाई स्वतन्त्रताको अवधाराणाले विस्थापित गर्ने कार्य पुराभएको हुनेछ ।' (एन्तोनियो ग्राम्शी )

माक्रसवादलाई अस्वीकार गर्न सकिएला तर यसलाई गलत सावित गरिएको छैन । माक्रसवादको सत्यता वा सान्दर्भिकता अस्वीकार गर्न सकिएला तर त्यसका वावजुद पनि यसको प्रभाव या असर रहिरहन्छ । ( Helena Sheehan –Marxism and philosophy of Science)

राजनैतिक र विचारधारात्मक दूवै पक्षबाट माक्रसवादले आफ्नो अन्तिम श्वास फेरिसकेको छैन । त्यसकारण माक्रसवादको मृत्यूको घोषणा अपरिपक्व हुनसक्छ । इतिहासले माक्रसलाई सही सावित नगरिसकेको हुनसक्छ तर त्यसले उनलाई स्पष्ट रूपमा गलत सावित गरिसकेको पनि त छैन । (डेविड वाकर- Historical Dictionary of Marxism )

## मार्क्सवादका मूलभूत मान्यता

१. द्वन्द्ववादी विश्वदृष्टिकोण । संसारका सबै वस्तु र घटनाको उत्पत्ति , विकास र परिवर्तनको मूल कारण वा आधार भौतिक पदार्थमा रहेको द्वन्द्वात्मक गति हो भन्ने मान्यता । यसै मान्यताका आधारमा माक्रसवादले हरेक वस्तु र घटनाको अध्ययन तथा विश्लेषण द्वन्द्ववादी ढङ्गले गर्ने गर्दछ ।

२. संसार परिवर्तन गर्ने मान्यता । यसै मान्यताका आधारमा माक्रसवादले संसारका कुनै पनि वस्तु , घटना, ब्यतिm, संस्था आदि सबैलाई विकास र परिवर्तनको प्रकृयामा हेर्ने गर्दछ ।

३.वर्गीय पक्षधरताको मान्यता । यसै मान्यताका आधारमा मार्क्सवादले वर्गीय समाजको परिवर्तन गर्ने तथा वर्गीय शोषण एवम् शासनको अन्त्य गर्ने मूल माध्यम वर्ग सघर्ष हो भनेर विश्लेषण गर्दछ र श्रमजीवी वर्गको पक्षपोषण गर्दछ ।

४. दर्शन र सिद्वान्तहरू चिन्तन पद्धति मात्र नभएर कार्य पद्धति पनि हुन भन्ने मान्यता । यसै मान्यताको आधारमा माक्रसवादले दर्शन र सिद्वान्तहरू गतिशील हुन्छन् र तिनिहरू जीबनका निम्ति हुन, जीबन तिनिहरूका निम्ति होइन भन्ने विश्लेषण गर्दछ ।

## मार्क्सवाददी दर्शनको परिभाषा

माक्रसबादी दर्शन संसारका सम्पूर्ण बस्तु र घटनालाई तिनीहरूका गतिको द्वन्द्वात्मकतामा र विकासको ऐतिहासिक प्रकृयामा हेर्ने , वुझ्ने तथा व्याख्या गर्ने र परिवर्तनका लागि तरिका बताउने दर्शन हो । यो अहिलेसम्मको सवैभन्दा विकसित र वैज्ञानिक भौतिकवादी दर्शन हो । यो तथ्यमा आधारित तर्क गर्ने दर्शन हो । यसलाई द्वन्द्वात्मक र ऐतिहासिक भौतिकवाद भनिन्छ । यो भौतिकवाद र द्वन्द्ववादको विकासको परिणाम हो । यसको उदय हुनुमा पुनर्जागरण आन्दोलन, औद्योगिक क्रान्ति र फ्रान्सेली क्रान्तिले मुख्य पृष्ठभूमिको काम गरेका छन् ।

## दर्शनको प्रारम्भ र विकास

दर्शनको इतिहास स्वस्पू mर्त प्रकृतिवादी भौतिकवादबातबाट प्रारम्भ हुन्छ । समाजको विकास संगसगै चिन्तन या दर्शनको पनि विकास भएर आएको छ । समाज वर्गमा विभाजित नहुदासम्म मानिसको चिन्तन आधारभूत रूपमा प्राकृतिक भौतिकवादी चरित्रको थियो । समाज वर्गमा विभाजित भएपछि चिन्तनमा पनि वर्ग पक्षधरताको उदय भयो र दर्शन दुई धारामा विभाजित भयो । मध्ययुग दर्शको विकासका दृष्टिले पुरै अन्धकार युग रहयो । 'ईश्वर जान्ने लक्ष्य नभएको ज्ञान सवै पाप हो ' भनियो । सातौं सदीमा अरव साम्राज्यको विस्तारपछि युनानी र रोमन दर्शन तथा विज्ञानको अध्ययन र प्रचार – प्रसार भयो ।आठौं सदीको उत्तरार्धमा शार्लेमानको साम्राज्य निर्माणपछि शिक्षा प्रणालीमा परिवर्तन र तर्क वितर्क चालु भयो ।पूजीवादी उत्पादन प्रणाली र यान्त्रिकीको विकाससँगै चिन्तनको पनि विकास भया ।युरोपमा पध्रौं सताव्दीबाट शुरु भएको पुनर्जागरण आन्दोलनले विज्ञान र दर्शनको विकासका निम्ति ढोका खोलिदियो । भौतिकवादका विभिन्न धाराहरू र द्वन्द्ववादका विभिन्न धाराहरूको विकास भयो ।

## समतामूलक समाजको चिन्तन

समतामूलक समाजका विचार पहिलेदेखिनै रहेका थिए । प्लेटोले एक प्रकारको पारिवारिक साम्यवाद भने । बुद्धले संघवादको कुरा गरे । हिन्दूहरूले राम राज्यको कुरा गरे । चीनमा आदिम व्यवस्था कायम राख्ने चिन्तन थियो । थोमस मूरले युटोपिया लेखेर (ई.१५१६) समानतायुक्त समाजको कल्पना प्रस्तुत गरे । तोमासो क्याम्पनेलाले सूर्यको शहर लेखेर (ई. १५९२) समानतायुक्त समाजको कल्पनिक चित्र प्रस्तुत गरे । ग्राचुस बावेले कन्सपिरेसी अफ इक्वेल्स् भनरे सारा असमानता हटाउने र साम्यवाद ल्याउने कुरागरे ।रवर्ट ओवेन, सेन्ट साइमन, चाल्र्स फुरिय आदिले काल्पनिक समाजवादका विभिन्न मान्यता अगाडि सारे । काल्पनिक समाजवादले पूँजीवादको विरोध , आलोचना र भत्सना ग ¥यो । त्यसको विनाश र नयाँ समाज निर्माणको सपना पनि देख्यो र शोणण गर्नु अनैतिक कार्य हो भनेर मान्छेलाई सम्झाउने प्रयत्न पनि ग ¥यो । तर त्यसले पूँजीवादी समाजको विकासका नियम , पूँजीवादमा हुने ज्यालादारी दासता र नयाँ समाजको निर्माणमा अगुवाइ गर्ने क्रान्तिकारी वर्गको पहिचान गर्न सकेन । माक्र्सवादले ती कमीहरूलाई पुराग¥यो ।

## पुनर्जागरण आन्दोलन र वैज्ञानिक आविस्कार

पन्ध्रौं शताब्दीमा आइपुगेपछि युरोपमा पुनर्जागरण (reneaissance) नामको एक बौद्धिक आन्दोलन शुरु भयो । त्यस आन्दोलनले आधुनिक शिक्षा प्राप्त मानिसहरूलाई प्राचीन युनानी तथा रोमन संसारको ज्ञान भण्डारमा प्रवेश गरायो र मध्यकालीन संस्कृतिको साँघुरो घेराबाट मुक्त गरी एक व्यापक दृष्टिकोणतर्फ उन्मुख गरायो । नयाँ नयाँ खोज तथा अनुसन्धान र चिन्तनका निम्ति अनुकूलता पैदा ग ¥यो । त्यस अनुकूल वातावरणमा अनेकौं वैज्ञानिक र दार्शनिक चिन्तकहरू जन्मिए ।

कोपर्निकस (१४७३–१५४३ ई.) ले ब्रहमाण्ड सम्बन्धी सूर्यकेन्द्रवादी सिद्धान्त प्रतिपादन गरे । उनको "खगोलीय पिण्डहरूको गतिका सम्बन्धमा " नामक कृति ई. १५४३ मा प्रकाशित भएपछि सार्वजनिक भएको सूर्यकेन्द्रबाद गम्भीर बैचारिक संघर्षको विषय बन्यो । चर्च र पाण्डित्यवादका पक्षधरहरूले यसको कडा विरोध गरे भने प्रगतिशील एवम् सृजनशील चिन्तकहरूले चाहिं यसलाई आफ्नो ब्यानर बनाएर अगाडि बढे । जर्दानो ब्रुनो (१५४८ – १६०० ई.) ले पाण्डित्यवादको विरोध र सूर्यकेन्द्रवादको समर्थन गर्दै त्यसमा रहेका कमजोर पक्षहरूलाई हटाउने प्रयत्न गर्नुका साथै अनन्त परमेश्वर भनेको नै प्रकृति हो भनेर प्रकृतिको अनन्ततालाई पुष्टि गर्ने कोशिष गरे ।

धर्माधिकरणले ब्रुनोलाई ज्यूँदै जलायो । तर पनि विज्ञान र चिन्तनको गति रोकिएन । केप्लर (१५७१–१६३० ई.) ले ग्रहहरूको गति सम्बन्धी नियम पत्ता लगाई १६१८ मा प्रकाशित गरे । विलियम हार्वे (१५७८ –१६५७ ई.) ले जैव शरीरमा हुने रक्त संचार प्रणाली पत्ता लगाई १६२८ मा प्रकाशित गरे । गिल्वर्ट (१५४० –१६०३ ई.) ले चुम्बक पत्ता लगाए । ग्यालेलियो (१५६४ –१६४२ ई.) ले पृथ्वीले सूर्यको परिक्रमा गर्दछभन्ने पत्ता लगाए । रवर्ट वायले (१६२७ –९१ ई.) ले एक कोशीय जीवाङ्गहरू पत्ता लगाए । न्यूटन (१६४२–१७२७ ई.) ले गुरुत्वाकर्षणको नियम पत्ता लगाए ।

पुनर्जागरण आन्दोलन र विज्ञान तथा प्रविधिको विकासले सामाजमा दुईवटा महत्वपूर्ण परिवर्तन ल्यायो । पहिलो – चिन्तनको क्षेत्रमा चर्चको आधिपत्य समाप्त भई विज्ञानको आधिपत्य शुरु भयो । दोस्रो – राजकीय नियन्त्रणमा पनि चर्चको आधिपत्य समाप्त भएर राज्यको आधिपत्य कायम भयो । पहिलो कुराले स्वतन्त्र चिन्तनका निम्ति ढोका खोलिदियो भने दोस्रोले चिन्तनमाथिको नियन्त्रणलाई कम ग¥यो ।

## औद्योगिक क्रान्ति

मान्छेको हातले उत्पादन कार्य गरिने कृषिप्रधान अर्थतन्त्रबाट मेशिनद्वारा उत्पादन कार्य गरिने औद्योगिक अर्थतन्त्रमा वदलिने प्रकृया । अठारौं सताव्दिमा वेलायतबाट शुरुभै अन्यत्र फैलिएको थियो । जेम्स वाटद्वारा वाष्प इञ्जिनको आस्किार भयो । हाते तानको सट्टा कपडा कार्खानाहरुको स्थापना भयो । छपाइ मेशिनको आविस्कार भयो । छपाखानाहरु खुले । नयाँ श्रम सम्वन्धहरु शुरुभए । एउटै कार्यस्थलमा सयौं मानिसहरु जम्मा भएर काम गर्नथाले । औद्योगिक मजदुर वर्गको उदय भयो । पूँजीपति वर्ग र मजदुर वर्ग वीचको अन्तर्विरोध वढ्दैगयो । आर्थिक अधिकारका आन्दोलन शुरुभए । पूँजीपति वर्गले सामन्त वर्गसँग राजनैतिक अधिकारका निम्ति लडेको थियो भने मजदुर वर्गले पूँजीपति वर्गसँग आर्थिक अधिकारका निम्ति लड्न थाल्यो ।

## फ्रान्सेली राज्य क्रान्ति र त्यसको प्रभाव

ई. १७८९ मा भएको फ्रान्सेली क्रान्तिले युरोपबाट सामन्तवादको अन्त्य ग ¥यो ।संसारमा पूजीवादी युगको थालनी ग ¥यो । स्वतन्त्रता , समानता र भ्रातृत्वको नारा दियो । यो क्रान्ति अपर्याप्त छ भन्ने ग्राचुस बावे जस्ता क्रान्तिकारी देखापरे । त्यस क्रान्तिपछि समाजवाद र साम्यवादको वहस व्यापक बन्यो ।

## मार्क्सवादको सिर्जनाका आधारहरू

माक्र्सवादको सिर्जना उन्नाइसौं शताब्दीको मध्यकालमा युरोपमा भएको हो । यसको सिर्जनाको आधार निर्माण गर्नमा पुनर्जागरण आन्दोलन, औधोगिक क्रान्ति र १७८९ को फ्रान्सेली राज्य क्रान्तिले मुख्य भूमिका निभाएका छन् । त्यसका तात्कालिक आधारहरू तिन प्रकार छन्-

### १) आर्थिक—सामाजिक आधार:

अठारौं शताब्दीको उत्तरार्धमा युरोपमा सामन्तवादका विरुद्ध क्रान्तिहरू शसफल भएका थिए र त्यहाँ पूँजीवादको स्थापना भइसकेको थियो । पूँजीवाद संगसंगै उसका विरुद्ध संघर्ष गर्ने मजदुर वर्गको पनि जन्म भएको थियो । पूँजीवादी उत्पादन प्रणालीको अभिन्न अंगका रूपमा रहको मजदुर वर्गले आफ्नो जन्मकालदेखि नै आफूमाथि भएको शोषण, दमन र अन्यायका विरुद्ध संघर्ष गर्न थालेको थियो ।

शुरु–शुरुमा यो वर्ग आफ्नो वर्ग दुष्मनका बारेमा सचेत थिएन । त्यस वेला मजदुर वर्गीय

आन्दोलनलाई मार्गदर्शन गर्ने निश्चित मार्गदर्शक सिद्धान्त पनि थिएन । त्यसैले मजदुरहरूले स्वतःस्फूर्त ढंगबाट एक्ला –एक्लै पूँजीपतिहरूमाथि व्यक्तिगत आक्रमण गर्ने प्रकृतिको आन्दोलन चलाएका थिए । मजदुरहरू व्यावहारबाट अनुभव प्राप्त गर्दै क्रमशः सचेत, संगठित र आन्दोलित हुँदै गएका थिए । जस्तो कि १८११ –१२ मा वेलायतका मजदुरहरूले स्वतःस्फूर्त ढंगले मेशिनतोड (लुडाइट) आन्दोलन चलाएका थिए र त्यस आन्दोलमा चर्को दमन भोगी असफल भएपछि सफलता प्राप्त गर्नका निम्ति संगठित भएर आन्दोलन गर्नु पर्दो रहेछ भन्ने अनुभव प्राप्त गरेर १८१३ देखि उनीहरू संगठित हुन थालेका थिए । १८३१ मा फ्रान्सको लियों शहरका कारखानामा कपडा बुन्ने मजदुरहरूले विद्रोह गरेका थिए । १८३२ देखि बेलायतका मजदुरहरूले मागपत्र (चार्टिष्ट) आन्दोलन शुरु गरेका थिए । १८३२ देखि १८४२ सम्म पूरै दशवर्ष चलेको त्यस चार्टिष्ट आन्दोलनमा लाखौं मजदुरहरू सहभागी भएका थिए । १८३२ मै पेरिसका मजदुरहरूले विद्रोह गरेका थिए । १८४४ मा जर्मनीको शिलेशिया (हाल पोल्याण्डमा पर्छ) शहरका कपडा बुन्ने मजदुरहरूले पनि विद्रोह गरेका थिए ।

उपर्युक्त मजदुर आन्दोलनहरू अर्थात् पूँजीपति वर्गका विरुद्ध मजदुर वर्गले चलाएका वर्ग संघर्षहरूबाट थुप्रै अनुभवहरू प्राप्त भएका थिए र श्रमजीवी वर्गमाथिको शोषण, दमन र उत्पीडनलाई समाप्त पार्नका लागि विद्यमान आर्थिक – सामाजिक र राजनीतिक व्यवस्थालाई उखेलेर फ्याक्नुपर्ने आवश्यकता महशुस हुनुका साथै त्यसो गर्नु अत्यावश्यक छ र सम्भव पनि छ भन्ने स्पष्ट भएको थियो । त्यसका निम्ति तत्कालीन समाजमा रहेका आर्थिक –सामाजिक र राजनीतिक सम्बन्ध एवम् संस्थाहरूको ठाउँमा कायम गरिने नयाँ सम्बन्ध एवम् संस्थाहरूको वारेमा स्पष्ट धारणा सहितको एक सिद्धान्त निर्माण गर्नुपर्ने आवश्यकता खड्किएको थियो । यही ऐतिहासिक आवश्यकता र व्यावहारिक अनुभवले माक्र्सवादको सिर्जनाका निम्ति एक महत्वपूर्ण आधारको काम गरेको थियो ।

## २) वैज्ञानिक आधार:

उन्नाइसौं शताब्दीको प्रारम्भसंगै विज्ञानका विभिन्न क्षेत्रको अध्ययन एवम् विश्लेषण गहिरिएको थियो । त्यस अध्ययनले वस्तु वा घटनाको सारतत्वको वारेमा जानकारी हासिल गर्नुका साथै परिवर्तनका कारणहरू पत्ता लगाउने काम हुन थालेको थियो । त्यस क्रममा प्राणी जगत्का भ्रूणहरूको अध्ययन गर्ने भ्रूण विज्ञान , जौविक प्रक्रियाहरूको अध्ययन गर्ने शरीरक्रिया विज्ञान, पृथ्वीको वाहिरी अर्थात् चट्टानी खण्ड (ऋचगकत) को अध्ययन गर्ने भूगर्भ विज्ञान जस्ता विज्ञानका नयाँ शाखाहरूको विकास भएको थियो र अध्ययन अनुसन्धानमा विशिष्टिकरण हासिल भएको थियो । त्यस गहन अध्ययनको परिणामस्वरूप तीन महान्ः आविष्कार भनिने जीवकोषको आविष्कार, ऊर्जाशक्तिको संरक्षण एवम् रूपान्तरणको नियमको आविष्कार र जीव विकासको सिद्धान्तको आविष्कार लगायतका थुप्रै वैज्ञानिक आविष्कारहरू भएका थिए ।

जर्मन जीव वैज्ञानिकहरू श्लेडेन९क्अजभिष्मभल० र श्वान्न९क्अजधबलल०द्वारा सन् १८३८ –३९ मा आविष्कार भएको सवै जैविक अंगहरू निर्माणको आधारभूत इकाई जीवकोष हो भन्ने कुराले जैविक जगत्को एकत्व वा एक रूपता प्रमाणित गर्नुका साथै विकासका गुणहरू स्वयम् पदार्थ भित्रै रहेका छन् भन्ने पुष्टि भएको थियो ।

जर्मन भौतिकशास्त्री जुलियस रवर्ट मायरद्वारा सन् १८४२–४७ मा आविष्कार भएको ऊर्जाशक्तिको संरक्षण एवम् रूपान्तरणको नियमबाट पदार्थका विभिन्न रूपहरूका बीचको अन्तर्सम्बन्ध तथा एकबाट अर्कोमा रूपान्तरणको सम्बन्धमा जानकारी भई पदार्थ र गतिका बीचको अविभाज्य सम्बन्ध र

पदार्थको गतिका विभिन्न रूपहरू बीचको सार्वभौमिक अन्तर्सम्बन्ध एवम् अन्तक्रिरया नै प्रकृतिमा हुने परिवर्तनका भौतिक कारण हुन् भन्ने पुष्टि भएको थियो ।

सन् १८५९ मा प्रकाशित गरिएको चाल्स डार्विनको जीव विकासको सिद्धान्तले जैविक जगत्मा निरन्तर विकास र परिवर्तन भइरहन्छ भन्ने कुराको साथै अहिले संसारमा रहेका जीवका जाति –प्रजातिहरू विकासको लामो प्रक्रियाका परिणाम हुन् भन्ने स्पष्ट पारेको थियो ।

उपर्युक्त तीन महान्ः आविष्कारहरूका अतिरिक्त अरु पनि धेरै आविष्कारहरू भएका थिए । ती आविष्कारहरूले मानव जातिलाई नयाँ –नयाँ कुराहरूको जानकारी गराएका थिए । जस्तो कि भौतिक पिण्डहरूमा हुने ध्रुवीय गुण९एयबिचष्तथ०ले भौतिक पदार्थमा हुने प्रतिपक्षको एकता र संघर्षको स्थितिलाई देखाएको थियो । त्यसैगरी रसायन तत्वको एकल सिद्धान्त९क्ष्लनभि तजभयचथ या अजझष्अब िअयm३उयकष्तष्यल० का आधारमा तत्व र मिश्रणहरूको निर्माण वारे ज्ञान हासिल भइरहेको थियो ।

विज्ञानको उपर्युक्त गहन अध्ययन एवम् अनुसन्धान र आविष्कारहरूको जगमा उँभिएर माक्र्सवादको सिर्जना गरिएको थियो । किनभने उपर्युक्त आविष्कारहरूले द्वन्द्वात्मक एवम् ऐतिहासिक भौतिकवादको विश्लेषण र पदार्थको गतिका नियमहरूको विकासका निम्ति प्रकृति विज्ञानका आधारहरू प्रदान गरेका थिए ।

### ३) सैद्धान्तिक÷दार्शनिक आधारहरू:

उन्नाइसौं शताब्दीको मध्यमा आइपुग्दा युरोपमा दर्शनशास्त्र, अर्थशास्त्र र काल्पनिक समाजवादी चिन्तनको क्षेत्रमा समेत धेरै ठूलो प्रगति भइसकेको थियो ।

दर्शनको क्षेत्रमा हेगेलले द्वन्द्वका नियमहरू सुत्रवद्ध गरिसकेका थिए भने फायरवाखले भौतिकवादको राम्रो विकास गरेका थिए । तर हेगेलेको द्वन्द्ववाद भाववादको सालनालमा वेरिएर रहेको थियो भने फायरवाखको भौतिकवाद चाहिं द्वन्द्ववादको अभावले गर्दा अपूर्ण थियो । कार्ल माक्र्स र फ्रेडरिख एंगेल्सले हेगेलको द्वन्द्ववादलाई फायरवाखदको भौतिकवादसंग मिलाएर टाउकाले टेकेर उँभिएको उल्टो अवस्थाबाट सुल्ट्याई खुट्टाले टेकेर हिंड्ने बनाए । यस सम्वन्धमा माक्र्स आफै लेख्छन् – ‘मेरो द्वन्द्ववादी पद्धति हेगेलकोभन्दा फरक मात्र नभएर त्यसको ठिक उल्टो छ । हेगलले मानव मस्तिष्कको जीवन प्रकृया अर्थात चिन्तन प्रकृयालाई स्वतन्त्र कर्ता बनाएका छन् , उनका लागि त्यो नै वास्तविक संसारको सिर्जनकर्ता हो र वास्तविक संसार चाहिं केवल विचारको वाहिरी एवम् इन्द्रियगम्य रूप मात्र हो । त्यसको विपरित मेरा लागि विचार भनेको भौतिक संसार मानव मस्तिष्कमा प्रतिविम्वित हुने र चिन्तनमा वदलिने चिज वाहेक अरु केहि पनि होइन । ’ **(पूँजी: दोश्रो जर्मन संस्करणको भूमिका)** ।

त्यसैगरी आर्थिक सिद्धान्तको क्षेत्रमा अर्थात् अर्थशास्त्रको क्षेत्रमा बेलायतका डेविड रिकार्डो र एडम स्मिथले श्रम मूल्य सिद्धान्त९ीबदयगच त्जभयचथ या ख्बगिभ०को प्रतिवादन गरिसकेका थिए । त्यस सिद्धान्तलाई विकास गर्दै कुनै पनि वस्तुको उत्पादन गर्दा सामाजिक हिसावले आवश्यक पर्ने श्रम – समयको आधारमा नै त्यस वस्तुको मूल्य निर्धारण हुन्छ भनेर पुष्टि गर्ने काम माक्र्सले गरे । उनले अतिरिक्त मूल्यको सिद्धान्त प्रतिपादन गरी पूँजीपतिले श्रमिकलाई गराउने अतिरिक्त श्रम र त्यस अतिरिक्त श्रम मार्फत् सिर्जना हुने अतिरिक्त मूल्य नै पूँजीवादी शोषणको मूल आधार हो भन्ने कुरा स्पष्ट पारे ।

त्यस्तै समाजशास्त्रको क्षेत्रमा थोमस मूरबाट शुरु भएको काल्पनिक समाजवादी चिन्तनको पनि विकास हुँदै गएको थियो । त्यसै क्रममा विकास भएका सेन्ट साइमन , चाल्र्स फूरिय र रवर्ट ओवेनका काल्पनिक समाजवादी विचारहरूले समाजलाई प्रभावित गरिरहेका थिए । अर्कोतर्फ ब्लांकी र बार्बेद्वारा नेतृत्व गरिएको षड्यन्त्रमूलक गतिविधिमा विश्वस गर्ने धार थियो । मार्क्स र एंगेल्सले चिन्तनलाई व्यवहारसंग गाँसेर वैज्ञानिक समाजवादी सिद्धान्तको प्रतिपादन गरे । समाज विकासका सामान्य नियमहरूको विज्ञान ऐतिहासिक भौतिकवादको प्रतिपादन भयो ।

### लिगभित्र विवाद र मार्क्स-एंगेल्सको अडान

मानव चिन्तनमा समतामूलक समाजका मान्यताहरू धेरै पहिलेदेखि नै रहेका थिए । आदिम सामुदायिक समाज समतायुक्त थियो । समाज दासप्रथात्मक युगमा प्रवेश गरेपछि पनि समतावादी चिन्तन यदाकदा प्रकट हुँदै ग ¥यो । जस्तो कि इशापूर्व छैटौं शताब्दीका नेपाली दार्शनिक गौतम बुद्ध र ईशापूर्व चौथो शताब्दीका युनानी दार्शनिक प्लेटोका चिन्तनमा त्यस किसिमका समतावादी मान्यता रहेका थिए । शायद ती समतावादी विचारहरूबाट समेत प्रभावित भएर दासप्रथाका विरुद्ध ठूल–ठूला विद्रोहहरू भए । समाज सामन्ती युगमा प्रवेश ग ¥यो र शोषणका झनै जटिल रूपहरू प्रकट भए । सामन्तवादका विरुद्ध पनि विद्रोहहरू भए । समाज पूँजीवादी युगमा पुग्यो । पूँजीवादमा अतिरिक्त श्रमको मूल्य शोषण गर्ने कार्य चर्कियो । त्यसका विरुद्ध अनेक ढंगले संघर्ष हुन थाल्यो । त्यही क्रममा काल्पनिक समाजवादी चिन्तनको जन्म भयो र त्यसबाट अझै अगाडि बढेर वैज्ञानिक समाजवादको उदय भयो ।

फ्रान्सेली क्रान्तिपछि समाजवाद र साम्यवादको वहस व्यापकबन्यो । ती विचार बोकेका संगठनहरू पनि बन्नथाले । १८३४ मा पेरिसमा जर्मन शरणार्थीहरूद्वारा "निर्वासितहरूको संघ " नामक प्रजातान्त्रिक–गणतन्त्रवादी चरित्रको गुप्त संगठन निर्माण भयो । १८३६ मा लण्डन मजदुर संघको निर्माण भयो । १८३६ मा निर्वासितहरूको संघभित्रका सर्वहारावादी तत्वहरू अलग भएर "न्यायी संघ" ९ीभबनगभ या ञ्गकत० को गठन गरे । एंगेल्सका अनुसार यो संघ वास्तवमा त्यसबेला ब्लांकी र बार्बेद्वारा नेतृत्व गरिएका फ्रान्सेली गुप्त समाजहरूको जर्मन शाखाभन्दा बढि केही थिएन र आंशिक रूपमा प्रचारात्मक काम गर्ने तथा आंशिक रूपमा षड्यन्त्रमूलक गतिविधि गर्ने यसका उद्देश्य थिए । कार्ल शापर , हेनरिख ब्राउएर, जोसेफ मोल आदि त्यस संघका नेताहरू थिए ।

पेरिसको सट्टा लण्डन क्रान्तिकारी गतिविधिको केन्द्र बनेपछि लिग जर्मनहरूको मात्र नभएर क्रमशः अन्तर्राष्ट्रिय स्वरूपको बन्न थाल्यो । लण्डनमा लगभग सबै युरोपेली मुलुकका मानिसको जमघट हुने भएकाले खुला र गुप्त हुँदै संघमा विभिन्न मुलुकका मानिस संगठिन हुन थाले । खुला संगठनलाई "कम्युनिष्ट श्रमिकहरूको शैक्षिक संघ" भन्न थालियो र त्यसको सदस्यता पत्रमा "सबै मानिस भाइभाई हुन् भन्ने मुख–वाक्य लेख्न थालियो । १८४७ को अगष्टमा मार्क्स र एंगेल्सद्वारा ब्रुसेल्समा "जर्मन श्रमिक समाज "को गठन गरियो । ती क्रान्तिकारी संगठनहरूमा "समता, भातृत्व र न्याय "का कुरा गरिन्थ्यो । सैद्धान्तिक स्पष्टता थिएन । मतभेदहरू प्रशस्त थिए ।

### मुख्य रूपमा चारखाले मत थिए:

(१) काल्पनिक समाजवादी

(२) अराजकतावादी ।

(३) षड्यन्त्रमूलक गतिविधि मार्फत सत्ता कब्जागर्ने।

(४) समानतासहितको स्वतन्त्रता र आर्थिक अधिकारसहितको लोकतन्त्र हुनुपर्छ भन्ने ।

त्यसैबीच माक्र्स र एंगेल्स दुवैजना आ –आफ्नो स्वतन्त्र अध्ययनबाट वर्गीय अन्तरविरोधहरू भएको समाज निर्माणमा आर्थिक कारणहरूले निर्णायक आधारको काम गर्दछन् भन्ने निष्कर्षमा पुगेपछि त्यस मान्यताले लिगका धेरै नेताहरूलाई प्रभावित ग¥यो । माक्र्स र एंगेल्सलाई लिगमा सामेल हुन बारम्बार अनुरोध गरियो । १८४७ को बसन्तमा जोसेफ मोलले माक्र्स र एंगेल्स दुवैलाई अलग–अलग भेटेर उहाँहरूको दृष्टिकोणसँग आपूmहरू सहमत भएको र लिगलाई पुरानो षड्यन्त्रमूलक गतिविधिको मान्यता राख्ने अवस्थाबाट मुक्त गरी सच्याएर अगाडि बढाउनको निम्ति त्यसमा उनीहरूको प्रवेश अनिवार्य भएकोमा जोड दिएपछि माक्र्स –एंगेल्स पनि लिगमा सामेल भए ।

१८४७ को ग्रिष्ममा लिगको प्रथम अधिवेशन भयो । त्यसमा माक्र्सको सहभागिता भएन । एंगेल्स लगायतका नेताहरूको सहभागितामा लिगलाई “कम्युनिष्ट लिग ”को रूपमा पुनर्गठित गरियो । लिगको उद्देश्य “बुर्जुवा शासनको अन्त्य , सर्वहारा वर्गको शासन स्थापना , वर्गीय अन्तरविरोधमा आधारित पुरानो बुर्जुवा समाजको अन्त्य र वर्गबिनाको एवम् व्यक्तिगत सम्पत्तिबिनाको नयाँ समाज स्थापना गर्नु ” रहेको तय गरियो । १८४७ नोबेम्बरको अन्त्य र डिसेम्बरको शुरुमा लिगको दोस्रो अधिवेशन भयो । त्यसमा माक्र्सको पनि सहभागिता रह्यो र उनले त्यहाँ लामो छलफल गरेर नयाँ सिद्धान्तको बारेमा स्पष्ट पार्ने काम गरे । लिगभित्र रहेका सबै अन्तरविरोध र आशंकाहरूको निवारण भयो । सर्वसम्मतिबाट नयाँ आधारभूत सिद्धान्तहरू स्वीकृत गरियो । “संसारका श्रमिकहरू एक होऔं ” भन्ने लिगको मुख –वाक्य ९ःयततय० तय भयो । नयाँ सिद्धान्त अनुसार घोषणापत्र तयार गर्न माक्र्स र एंगेल्सलाई जिम्मा दिइयो । छिट्टै उक्त घोषणापत्र तयार भयो र १८४८ को फेब्रुअरीमा लण्डनबाट विश्व प्रसिद्ध कम्युनिष्ट घोषणा –पत्र प्रकाशित भयो । यसरी दस्तावेजीय रूपमा माक्र्सवाद र कम्युनिष्ट आन्दोलन अस्तित्वमा आयो ।


सन्दर्भ ग्रन्थ सूची

| लेखक | पुस्तक | प्रकाशक | प्रकाशन मिति |
|---|---|---|---|
| थ्योदरओइजेर्मान | द्वन्द्वात्मक भौतिकवाद और दर्शन का इतिहास | प्रगति प्रकाशन, मस्को | १९८४ इ |
| केन फिलिप | विश्व के महान् वैज्ञानिक | राजपाल, दिल्ली | १९९८ ई. |
| T. Vlasova | Marxist-Leninist Philosophy | Progress Publishers, Moscow | 1987 a.d. |
| F. Engels | On the history of the Communist League | Progress Publishers, Moscow | 1977 a.d. |
| भी. आइ. लेनिन | मार्क्सवादका तीन श्रोत र तीन संघटक अंग (संकलित रचना, नेपाली, भाग १) | प्रगति प्रकाशन, मस्को | १९८० ई. |
| जी. प्लेखानोव | काल्पनिक समाजवाद की धाराएं | प्रकाशन संस्थान, नयी दिल्ली | २००४ ई. |
| बेदुराम भुसाल | नेपालमा प्रचलित दार्शनिक चिन्तनहरू | नेपाल प्रज्ञा प्रतिष्ठान, काठमान्डौं | २०६८ विसं |
| बेदुराम भुसाल | मार्क्सवादी दर्शन | भुसाल प्रकाशन, काठमाण्डौं | २०६७ वि.सं. |
| T.I. Oizerman and A.S Bogomolov | Principles of the theory of the Historical proces in philosophy | Progress publishers, Moscow | 1982 a.d. |
| Bertrand Russell | History of western Philosophy | Routledge, New York, | 1999 a.d. |

# 'आजसम्म कुनै पनि महान आन्दोलन विनारक्तपात भएको छैन' (मार्क्सको दुर्लभ अन्तरवार्ता)

- नयाँ समाज

**अमेरिकी रिपब्लिकनहरुको अखबार 'शिकागो ट्रिब्युन' महान दार्शनिक कार्ल माक्र्सको एउटा निकै दुर्लभ अन्तरवार्ता छापिएको थियो । उक्त अखबारका एक सम्वाददाताले कार्ल माक्ससँग उनको लण्डनस्थित आफ्नै घरमा सो अन्तर्वार्ता लिएका थिए । धैरै वर्षसम्म 'ट्रिब्युन' समाजवाद र उदीयमान ट्रेड युनियनहरु दुबैको भावनात्मक झड्काको बिस्फोटन बनेको थियो । एउटा रुढीवादी अखबारमा माक्र्सको यही नै एउटा लामो अन्तर्वार्ता थियो, जुन उनले यस्तो कहिल्यै दिएका थिएनन् ।**

**समाजवादीहरुको आन्दोलनको अन्तिम उद्देश्य श्रमका साधनहरुलाई समाजको सार्वजनिक सम्पत्तिको रुपमा फेर्नु नै त हो नि ?**

हो, पक्कै हो, हामी के भन्छौं भने आन्दोलनको परिणाम यस्तै हुनेछ । तर त्यसको लागि समय , शिक्षा र उच्चस्तर भएका सामाजिक संस्थाहरुको जरुरत हुनेछ ।

**तपाईंहरुको यो घोषणापत्र र मोर्चा केवल जर्मनी वा केही त्यस्तै एक –दुईटा देशहरुको लागि मात्र उपयोगी हुनेछन् ?**

यदि तपाईं यही घोषणापत्र मात्रै पढेर हाम्रो बारेमा नतिजा निकाल्ने प्रयास गर्नुहुन्छ भने म भन्छु – तपाईं हाम्रो संगठनका गतिविधिहरुको बारेमा केही पनि जान्न सक्नुहुन्न । स्पष्ट छ , यस घोषणापत्रका कैयौं कुराहरुको जर्मनीभन्दा बाहिर कुनै महत्व छैन । स्पेन , रुस, बेलायत र अमेरिकामा ती देशका आ–आफ्ना विशेष कठिनाइ अनुरुप मोर्चा र संगठनहरु बनेका छन् । ती सबै संगठनहरुबीच समानता भनेको केवल उद्देश्य मात्रै हो, जुन हामी सबै प्राप्त गर्न चाहन्छौं ।

**त्यो उद्देश्य भनेको के मजदुरवर्गको प्रभुत्व कायम गर्नु हो ?**

होइन हजूर । त्यो उद्देश्य हो – मजदुरवर्गको मुक्ति ।

**के यूरोपका समाजवादीहरु अमेरिकी मजदुर आन्दोलनलाई महत्वपूर्ण मान्दछन् ?**

हो हजूर । अमेरिकी मजदूर आन्दोलन त्यो देशको विकासको स्वाभाविक परिणाम हो । के पनि भनिन्छ भने त्यहाँ विदेशीहरुद्वारा बाहिरबाट आन्दोलन ल्याइएको हो । आजभन्दा ५० वर्षअगाडि जब बेलायतमा मजदुर आन्दोलनको रुप जुझारु हुन थालेको थियो , तब यहाँ पनि त्यस्तै भनिएको थियो र यो कुरा समाजवादको चर्चा हुन थाल्नुभन्दा अगावैको कुरा हो । अमेरिकामा सन् १८५७ देखि नै मजदुर आन्दोलन प्रभावशाली हुन लागेको हो । त्यसपछि मजदुर यूनियनहरु फल्न – फूल्न थाले । त्यसपछि त्यस्ता मजदुरसभाहरुको निर्माण हुनथाल्यो, जसबाट विभिन्न उद्योगहरुमा काम गर्ने मजदुरहरुबीच एकता कायम भयो । र , अन्त्यमा राष्ट्रिय मजदुर संघको स्थापना भयो । यदि तपाईंले यो क्रमिक विकासमाथि ध्यान दिनुभयो भने तपाईंलाई थाहा हुनेछ – विदेशीहरुको मद्दतविना नै अमेरिकामा समाजवाद पैदा भयो र त्यो पुँजीको केन्द्रीकरण तथा मजदुर एवं मालिकको बदलिंदो सम्बन्धका कारण संभव भयो ।

**अब तपाईं के बताउनुस् भने तपाईंको समाजवादले अहिलेसम्म के के गर्यो ?**

दुईवटै कुरा भएका छन् । समाजवादीहरुले पुँजी र श्रमको व्यापक संघर्षको बाटो देखाएका छन् । अर्थात् त्यसलाई विश्वव्यापी बनाएका छन् । यसैको फलस्वरुप संसारभरका मजदुरहरुबीच एकताको विचार जन्मिएको छ । र , विचार अहिले अरु बेसी आवश्यक भएको छ , किनकि पुँजीपतिहरुले मजदुरको बहालीका लागि संसारभरका मजदुरहरुमाथि आँखा लाउन थालेका छन् । अमेरिकामा मात्रै होइन , बेलायत, फ्रान्स, र जर्मनीका पुँजीपतिहरुले समेत स्वदेशी मजदुरहरुविरुद्ध विदेशी मजदुरहरुलाई उपयोग गर्न थालेका छन् । यसबाट के सावित भयो भने समाजवाद कुनै स्थानीय समस्या होइन रहेछ । र , यसको समाधान त संसारभरका मजदुरहरु एक भएर गर्नुपर्ने रहेछ । मजदुरवर्ग आफ्नो आन्दोलनका उद्देश्यहरुको बारेमा ज्ञान नहुँदा नहुँदै पनि आफसे आफ लगातार अगाडि बढिरहेको छ । समाजवादीहरुले त आन्दोलनको चरित्र र उद्देश्य बताउने काम गरेका हुन् ।

**मेरो विचारमा यसको मतलब हो , वर्तमान समाज व्यवस्थालाई उखेलेर फ्याँक्नु हो ?**

हाम्रो विचार के छ भने वर्तमान व्यवस्थामा एकातिर पुँजीपतिहरुको हातमा पुँजी र भूमि छ अनि अर्कोतिर मजदुरहरुसँग एउटा बजारको बस्तुको रुपमा बेच्नका लागि श्रमशक्ति मात्रै छ । यो व्यवस्था पनि एउटा त्यस्तो ऐतिहासिक अवस्था हो, जुन समाप्त हुनैपर्छ र त्यसको ठाउँमा योभन्दा बेसी उन्नत सामाजिक व्यवस्था कायम हुनैपर्छ । हामीलाई थाहा छ । सबै ठाउँमा समाज वर्गहरुमा विभाजित छ । आधुनिक औद्योगिक देशहरुमा औद्योगिक साधनहरुको विकास सँगसँगै पुँजीपति र मजदुरवर्ग बीचको आपसी वैमनस्य पनि बढिरहेको छ । समाजवादीहरुको दृष्टिकोणमा वर्तमान ऐतिहासिक अवस्थामा क्रान्तिको तत्व विद्यमान छ । कैयौं देशहरुमा मजदुर यूनियनहरुको आधारमा राजनीतिक संगठनहरु पनि निर्माण भएका छन् । अमेरिकामा पनि मजदुरवर्गको आफ्नै एउटा पार्टी बनाउनु जरुरी छ । मजदुरहरुले अब पेशेवर राजनीतिज्ञहरुमाथि अरु बेसी भरोसा गर्न सक्दैनन् । सांसदहरु गूटबाजीको शिकार भएका छन् र संसद त्यस्तैको अखडा भएको छ । राजनीति व्यबसाय भएको छ । यो दशा अमेरिकामा मात्र होइन , बरु यूरोपको पनि यस्तै हाल छ । फरक के मात्रै हो भने यूरोपबासीहरुको तुलनामा अमेरिकी जनता केही बेसी सावधान र दृढ निश्चय भएका मानिसहरु हुन् । अमेरिकामा सबैको रहस्य तुरुन्तै खुल्छ । महासागरको वारि जति शब्द –आडम्वर र मारकाट छ, त्यति उता पारितिर छैन ।

**जर्मनीमा समाजवादी पार्टीको तीब्रतापूर्वक भएको विकासको कारण के हो ?**

जर्मनीको वर्तमान समाजवादी पार्टी धैरै नै नयाँ पार्टी हो । बेलायत र फ्रान्समा झैं जर्मनीमा काल्पनिक समाजवादीहरुको विचारधाराको कुनै प्रभाव पहिलेदेखि विद्यमान थिएन । जर्मनीवालाहरु सिद्धान्त रचना गर्ने कार्यमा अरुभन्दा अलि बेसी नै कुशल छन् । विगतका अनुभवहरुबाट सिकेर जर्मनीवालाहरुले केही निर्णय गरे । तपाईंलाई थाहा छ होला – यूरोपका अरु देशहरुको तुलनामा यो पूँजीवादी ब्यवस्था जर्मनीको लागि धैरै नै नयाँ व्यवस्था हो । जब जर्मनीका मजदूरहरुले समाजवादी विचारलाई अंगीकार गरे , तब बेलायत र फ्रान्समा पुराना भइसकेका प्रश्नहरु जर्मनीमा नयाँनयाँ रुपमा उठन थाले । अनि ती देशहरुमा उत्पन्न भएका राजनीतिक प्रभावहरुको असर जर्मनीका मजदुरहरुको जीवनमाथि पनि पर्यो । त्यसैले आधुनिक औद्योगिक विकासको शुरुवातसँगसँगै त्यहाँका मजदुरहरुले आफ्नै स्वतन्त्र राजनीतिक

पार्टी बनाए । जर्मनीको संसदमा उनीहरुका आफ्नै प्रतिनिधि थिए । सरकारका नीतिहरुको विरोध गर्ने अर्को कुनै दल थिएन, त्यसैले त्यो जिम्मेवारी पनि मजदुरहरुकै प्रतिनिधिहरुको काँधमाथि आइपरेको थियो । यस पार्टीको रुपरेखाबारे बताउन धैरै समय लाग्नेछ, तर म यति चाहिं भन्नसक्छु – यदि जर्मनीको मध्यमवर्गमा घनघोर कायरता नभएको भए उनीहरु बेलायत र अमेरिकाको मध्यमवर्गको समान भएका भए सरकारविरुद्ध गर्नुपर्ने सबै राजनैतिक काम उनीहरुले नै गर्नुपर्दथ्यो ।

**इन्टरनेशनलवादीहरुबीच लासालवादीहरुको संख्या कति होला ?**

लासालको कुनै पार्टी छैन । हाम्रो संगठनमा लासालको सिद्धान्तमाथि विश्वास गर्ने केही मानिसहरु छन्, तर उनीहरुको संख्या धैरै नै कम छ । लासाललाई हाम्रा सामान्य सिद्धान्तहरुको अनुमान थियो । त्यसैले जब उनले सन् १८४८ का घटनाहरु पछि जगैदेखि आफ्ना गतिविधिहरु शुरुगर्दा कल्पना गरेका थिए – औद्योगिक प्रतिष्ठानहरुमा मजदुरहरुको सहयोगको वकालत गरेर आफ्नो आन्दोलनलाई फेरि एकपटक धैरै सफलतापूर्वक चलाउन सकिनेछ । यो चाहिँ मजदुरहरुलाई फेरि सक्रिय पार्ने उनको कोशिश थियो । यसलाई उनी आन्दोलनको वास्तविक उद्देश्य पूरा गर्ने साधन नै संझन्थे । उनको यस्तो आशयको चिठ्ठी मसँग छ ।

**के तपाईं यसलाई उनको रामवाण भन्न चाहनुहुन्छ ?**

निश्चित रुपले । उनले बिस्मार्कसँग भेटे , आफ्नो योजनाको बारेमा उनीसँग चर्चा गरे । अनि बिस्मार्कले त्यसबेला हरतरहले लासालका गतिविधिहरुलाई बढावा दिए ।

**यस्तो गर्नुको पछाडि बिस्मार्कको उद्देश्य के थियो ?**

उनी १८४८ को बिद्रोह भड्काउने मध्यमवर्ग विरुद्ध मजदुरवर्गलाई प्रयोग गर्नचाहन्थे ।

**के भनिन्छ भने तपाईं समाजवादका अध्यक्ष र नेता हुनुहुन्छ र तपाईं यहाँबाट , आफ्नो घरबाट, आजभोलिका सबै प्रकारका संगठनहरु र क्रान्तिहरुको संचालन गर्नुहुन्छ । यस सम्वन्धमा तपाईं केही भन्न चाहनुहुन्छ कि ?**

मलाई यस सम्बन्धमा जानकारी छ । मलाई लाग्छ– यो एकदम अर्थहीन कुरा हो , तर यसमा एउटा मनोरञ्जक पक्ष पनि छ । होदेतको प्रयासभन्दा दुई महिनाअगाडि बिस्मार्कले आफ्नो पत्रिका 'नर्थ जर्मन गजेट' मा मेरो विरुद्ध गुनासो गरेका थिए– मैले जेसुइट आन्दोलनका नेता फादर बैंकसँग मिलिभगत गरेरहेको छु । अनि हामी दुवैले मिलेर समाजवादी आन्दोलनलाई यस्तो रुप दिइरहेका हौं, ताकि बिस्मार्कले यो आन्दोलनसँग कुनै सम्बन्ध राख्न नसकून् ।

**तर लण्डनबाट तपाईंको अन्तर्राष्ट्रिय समाजले आन्दोलन त संचालन गरिरहेकै छ नि ?**

अन्तराष्ट्रिय समाजको उपयोगिता अब समाप्त भइसकेको छ र अब त्यसको कुनै अस्तित्व छैन । पहिले त्यसको अस्तित्व थियो र त्यसको माध्यमबाट आन्दोलनको संचालन पनि हुन्थ्यो । तर, हालका केही वर्षहरुमा समाजवादको विकास यति धैरै भइसकेको छ कि अब इन्टरनेशनलको कुनै जरुरत नै रहेन । अहिले विभिन्न देशहरुमा अखवारहरु प्रकाशित भइरहेका छन् । तिनीहरुबीच आपसमा आदान –प्रदान पनि भइरहेका छन् । विभिन्न देशहरुमा काम गरिरहेका पार्टीहरुबीच आपसी सम्बन्धको यही नै एकमात्र माध्यम हो । अन्तर्राष्ट्रिय समाजको स्थापना केको लागि गरिएको थियो भने मजदुरहरुलाई संगठित गर्न सकियोस् र विभिन्न राष्ट्रका मजदुरका संगठनहरुमा आपसी एकता कायम गर्न सकियोस् । हरेक देशका मजदुर संगठनहरुको आ –आफ्नै

खाले हितहरु छन् , जुन अरुसँग भिन्न छन् । त्यसैले लण्डनमा बसिरहेका इन्टरनेशनलका नेताहरुको कालो छायाँ हरेक ठाउँमा घुम्नथालेको कुरा मनगढन्त छ । के कुरा सत्य हो भने – जब इन्टरनेशनलको स्थापना भएको थियो , तब हामी विदेशी संगठनहरुलाई सल्लाह दिन्थ्यौं । हामी न्यूयोर्कका केही समूहहरुलाई इन्टरनेशनलबाट अलग्याउनका लागि पनि विवश भएका थियौं । तीमध्ये म्याडम वुडहलको प्रभाव भएको एउटा गूट पनि थियो । यो सन् १८७१ को कुरा हो । त्यस्ता अमेरिकी राजनीतिज्ञहरु धेरै छन , जो त्यस आन्दोलनबाट लाभ उठाउन चाहन्छन् । म उनीहरुको नाम लिन चाहन्न । तर , अमेरिकी समाजवादीहरु उनीहरुलाई राम्ररी नै चिन्दछन् ।

**मार्क्स ! के पनि भनिन्छ भने तपाईंका अनुयायीहरुका साथै तपाईंले धर्मको विरुद्ध आगो ओकल्ने खालको भाषण दिनुभएको छ । निश्चय नै तपाईं चाहनुहुन्छ – वर्तमान व्यवस्था सम्पूर्ण रुपमा समूल बर्बाद होस् !**

(एकै क्षण रोकिएर) हामीलाई थाहा छ –धर्मको विरुद्ध हिंसात्मक कारवाही गर्नु निरर्थक छ । समाजवादको विकास सँगसँगै धर्म गायब हुँदै जानेछ । र , धर्मको लोप सामाजिक विकासको कारणले हुनुपर्दछ । र यसमा शिक्षाको महत्वपूर्ण भूमिका हुनुपर्दछ ।

**तपाईं बोस्टनका पादरी कुकलाई चिन्नुहुन्छ ?**

मैले उनको बारेमा केही सुनेको छु । समाजवादको सम्बन्धमा उनको जानकारी धेरै नै गलत किसिमको छ । हालैको आफ्नो भाषणमा उनले भनेका थिए – "डा मार्क्स भन्छन् , अमेरिका, ग्रेट ब्रिटेन र शायद फ्रान्समा विना रक्तरंजित क्रान्ति नै मजदुरहरुको दशामा सुधार हुनेछ । तर , जर्मनी, इटली, रुस र अष्ट्रियामा अवश्य रक्तपात हुनेछ ।" (डा. मार्क्सले मुस्कुराउँदै भन्नुभयो) कुनै पनि समाजले के कुरा घोषणा गर्नु जरुरी छैन भने रुस , जर्मनी, अष्ट्रिया विशेषगरी इटलीमा यदि वर्तमान सरकारी नीतिहरु चलिरहे भने रक्तरंजित क्रान्ति अनिवार्य हुनेछ, फ्रान्सिसी क्रान्तिका घटनाहरु ती देशहरुमा दोहोर्याइनेछन् । यो त राजनीतिका कुनै पनि विद्यार्थीले बुझ्न सक्छ । तर , क्रान्तिहरु बहुमतद्वारा हुनेछन् । क्रान्ति एउटा पार्टीले मात्र गर्न सक्दैन, बरु सिंगो राष्ट्रले क्रान्ति गर्दछ ।

**त्यस आदरणीय व्यक्तिले १८७१ मा पेरिसका कम्युनिष्टलाई लेखिएको एउटा पत्रको एक अंश उल्लेख गरेका छन्, जसमा तपाईंले लेख्नुभएको छ ? अहिले हामी केवल ३० लाख छौं , आउँदो २० वर्षमा ५ करोड वा १० करोड हुनेछौं , तब संसार हाम्रो हुनेछ , किनकि तब पेरिस , लियोंस, मारसेलिजमा मात्रै घृणित पुँजीको विरुद्ध विद्रोह हुने होइन, बरु बर्लिन, म्यूनिख, ड्रेसडेन, लण्डन, लिभरपूल, म्यान्चेस्टर, ब्रसेल्स, सेन्ट पीटर्सवर्ग , न्यूयोर्क अर्थात् सम्पूर्ण संसारमा त्यस्ता बिद्रोहहरु हुनेछन् । अहिलेसम्मको इतिहासको यस अभूतपूर्व विद्रोहको सामुन्ने अतीत भयानक नराम्रो सपना जस्तै गायब हुनेछ , किनकि अनेक ठाउँमा एक्कैचोटि लगाइएको यो आगोले अतीतको आगोलाई भस्म गर्नेछ । " डा. मार्क्स ! के यहाँले यस्तो पत्र लेख्नुभएको साँचो हो ?**

यसको एउटा शब्द पनि मैले लेखेको होइन । म यस्तो अति नाटकीयताले भरिएका अनर्गल प्रलापहरु कहिले पनि लेख्दिन । म जे जति लेख्दछु, अति नै धेरै सोचविचार गरेर लेख्दछु । त्यसबेला यो पत्र 'ल फिगरो ' (फ्रान्सको एउटा अखवार)मा मेरो जाली हस्ताक्षरका साथ छापिएको थियो । त्यसबेला यस्ता सयौं पत्रहरु हावामा उडाइएका थिए । मैले त्यसबेला 'लण्डन टाइम्स'मा लेखेको थिएँ– "यी पत्रहरु जाली हुन् । " तर मेरो बारेमा जति धेरै झूठो प्रचार गरियो र असत्य लेखियो, यदि मैले ती सबै झूठहरुको खण्डन गरिरहें भने त्यसको लागि मलाई बीस जना सहायकहरुको जरुरत हुनेछ ।

**तर, तपाईंले पेरिसका कम्युनिष्टहरुको समर्थनमा लेख्नु त भएको थियो नै, होइन र ?**

मैले पत्र लेखेको थिएँ । (बिस्तृत जानकारीको लागि मार्क्सको प्रसिद्ध किताब 'फ्रान्समा गृहयुद्ध' पढ्नुहोला) खासगरी उनीहरुको बारेमा प्रमुख अखवारहरुका मुख्य लेखहरुमा जुन झूठ लेखिएको थियो, त्यसको तुलनामा मैले उनीहरुप्रति सहानुभूतिसहित केही लेखेको थिएँ । ती अखवारहरुका सम्पादकीय लेखहरुमा पेरिस कम्युनको बारेमा जून झूठ प्रचार गरिएको थियो, त्यसको खण्डनका लागि अंग्रेजी अखवारहरुमा छापिएका पेरिसबासीहरुका पत्रहरु नै काफी सक्षम छन् । कम्यूनको कारणले करिब ६० जनाको मृत्यु भएको थियो, जबकि मार्शल मेकमोहन र त्यसको हत्यारा सेनाले ६० हजारभन्दा बेसी मानिसहरुको हत्या गर्यो । कम्युनमाथि जति हिलो छ्यापियो, त्यति त आजसम्म कुनै पनि अरु आन्दोलनमाथि छ्यापिएको छैन ।

**जेहोस के समाजवाद ल्याउनका लागि समाजवादीहरु हत्या र रक्तपातको वकालत गर्छन् ?**

आजसम्म कुनै पनि महान आन्दोलन विनारक्तपात शुरु भएको छैन । अमेरिकाको स्वतन्त्रताका लागि रगत बग्यो । नेपोलियनले रक्तपातकै माध्यमबाट फ्रान्समाथि कब्जा गरे र त्यसरी नै उनको अन्त्य भयो । इटली, बेलायत, जर्मनी र यहाँसम्म कि हरेक देशमा यस कुराको सबूत–प्रमाण फेला पर्नेछन् । यदि हत्याकै बारेमा विचार गर्ने हो भने पनि यो कुनै नयाँ चीज होइन । ओर्सिनीले नेपोलियनको हत्या गर्ने प्रयास गरे, इसाईहरुले हत्या गरे, क्रामबेलको जमानामा प्यूरिटनहरुले हत्या गरे । र वास्तविकता के हो भने राजाहरुले जति हत्या गरे, त्यति त अरु कसैले पनि गरेका छैनन् । यी सबै हत्याहरु वा हत्याका प्रयासहरु समाजवाद आउनुभन्दा अगावै भएका हुन् । आज यदि कसैले पनि राजकीय वा सरकारी व्यक्तिको हत्याको प्रयास गरेमा त्यसको जिम्मेवारी समाजवादको टाउकोमा थोपरीदिने चलन बढेको छ । वर्तमान स्थितिमा जर्मन सम्राटको मृत्युबाट समाजवादीहरु धेरै नै दुःखित हुनेछन् । आफ्नो ठाउँमा उनी निकै उपायोगी व्यक्ति हुन् र अन्य राजनीतिज्ञहरुको तुलनामा बिस्मार्क आफ्ना अतिवादी कारवाहीहरुका कारणले हाम्रा उद्देश्यहरुका लागि धेरै नै उपयोगी सावित भएका छन् ।

**बिस्मार्कको बारेमा तपाईंको आफ्नो मूल्यांकन के छ ?**

जबसम्म नेपोलियनको पतन भएको थिएन, तबसम्म उनी एउटा प्रतिक्रियावादी व्यक्ति मानिन्थे । तर, जब नेपोलियनको पतन भयो, मानिसहरु उनलाई मूर्ख भन्न थाले । बिस्मार्कको पनि त्यही दशा हुनेछ । उनले एकीकरणको निहुँमा तानाशाहीको स्थापना गरे, तर अहिले उनका काला करतूतहरुको रहस्य मानिसहरुलाई थाहा भइसकेको छ । उनको पछिल्लो चाल राज्य–विप्लव गर्ने एउटा प्रयास थियो । तर, त्यो पनि असफल हुनेछ । फ्रान्सका समाजवादीहरुले जस्तै जर्मनीका समाजवादीहरुले पनि १८७० को युद्धलाई दुई राजवंशहरुको कोरा युद्ध संझेर त्यसको विरोध गरे । उनीहरुले जर्मनीलाई सावधान गर्दै आफ्नो घोषणा–पत्रमा भने– यदि जनताले यस तथाकथित सुरक्षात्मक लडाइँलाई विजय –अभियानको रुपलिन दिएमा उनीहरु सैनिक तानाशाहीको दमनको शिकार हुनेछन् । र किसान–मजदुरहरुमाथि निर्मम अत्याचार हुनेछ ।

फ्रान्ससँग सम्मानजनक शान्तिको समर्थनमा सभाहरु गर्ने र घोषणापत्र निकाल्ने काम गरेवापत जर्मनीका सोशल डेमोक्रेटिक पार्टीमाथि जर्मन सरकारले दमन गर्यो र पार्टीका अनेक नेताहरुलाई कैद गर्यो । फेरि पनि त्यही पार्टीका प्रतिनिधिहरुले नै जर्मन संसदमा फ्रान्सका प्रान्तहरु जबर्जस्ती

हड्पेर जर्मनीमा मिलाएकोमा जोड्दार विरोध गरिरहेका छन् । बिस्मार्कले शक्ति प्रयोग गरेर आफ्ना नीतिहरु लागु गरे । अनि मानिसहरुले उनको बुद्धिको तारीफ गरे । लडाइँ भयो, अनि जब बिस्माकको विजयका संभावनाहरु समाप्त भए, तब मात्र मानिसहरुले उनीबाट नयाँ विचारहरुको आशा गरे । तर, यस काममा उनी नराम्ररी असफल भए ।

उनीमाथि मानिसहरुको विश्वास कम हुनथाल्यो । उनको लोकप्रियता घट्नथाल्यो । उनलाई धन चाहिएको छ र राज्यलाई पनि धनको जरुरत छ । त्यसैले एउटा बनावटी संविधानको निहुँमा उनले एकीकरण र सेनासम्बन्धी आफ्ना योजनाहरुका लागि जनतामाथि कम्मरै भाँच्ने खालको कर लगाए । अनि अहिले उनी संविधानलाई नै रद्दीको टोकरीमा फ्याँकेर जनतामाथि अरु बेसी कर लगाउन चाहन्छन् । जनतामाथि मनपरी ढंगले कर लगाउनका लागि अब उनले समाजवादको हौवा खडा गरिरहेका छन् र दंगा –फसादको स्थिति सिर्जना गर्न सकभर प्रयास गरिरहेका छन् ।संवाददाता–के तपाईंलाई बर्लिनबाट लगातार सूचना प्राप्त भइरहेको छ ? मेरा साथीहरुले मलाई बराबर सूचना पठाइरहेका छन् । जर्मनी आजभोलि पूरै शान्त छ र यसले गर्दा बिस्मार्क पूरै दुःखित भएका छन् । उनले हेसेलमन , राकोब र वाँमन आदि ४८ जना युवा नेताहरुलाई जर्मनीबाट निष्काशित गरेका छन् । (बाबेलको आत्मकथाअनुसार ६१ जना नेताहरुलाई देश –निकालाको सजायँ दिइएको थियो । उनीहरुमध्ये अधिकांशले ४८ घण्टाभित्र जर्मनी छोड्नु पर्यो । यस्तो लाग्छ ।

**संवाददाताले ४८ घण्टाको समयलाई निष्काशितहरुको संख्या ठान्न पुगे ?**

ती नेताहरुले त्यसबेला जर्मनीका मजदुरहरुलाई शान्त पारिराखेका थिए । बिस्मार्कलाई यो कुरा थाहा थियो । उनलाई के पनि थाहा थियो भने त्यसबेला शहरमा करिब ७५ हजार मजदुरहरु भोकमरीको शिकार भइरहेका थिए । उनको अनुमान थियो – ती नेताहरु जर्मनीबाट बाहिर जानासाथ जनता बेचैन भएर विद्रोह गर्न थाल्नेछन् र आफूलाई रगतको होली खेल्ने सुवर्ण अवसर प्राप्त हुनेछ । सिंगो जर्मन साम्राज्यमा दमन –चक्र तीव्रतापूर्वक चल्नेछ र उनलाई आफ्नो 'रक्तपात तथा दमन –चक्र'को प्रिय सिद्धान्तलाई सम्पूर्ण रुपमा व्यवहारमा लागु गर्ने मौका प्राप्त हुनेछ । त्यसपछि त जनतामाथि मनपरी ढंगले कर लगाउन पनि सजिलो हुनेछ । तर , अहिलेसम्म त्यहाँ कुनै दंगा –फसाद भएको छैन । बिस्मार्क यस्तो स्थिति देखेर हैरान भइरहेका छन् । र सबै राजनीतिज्ञहरु उनलाई हास्यपात्र बनाएर उडाइरहेका छन् ।

**(९ जून, १८७९ को 'शिकागो ट्रिब्यून'मा प्रकाशित ।**

## महान अक्टोबर समाजवादी क्रान्ति र वर्तमान युग

• रमेश सुनुवार

कुनै दुई युगहरुलाई एउटा घटनाले छुट्याउँछ । प्राचीनकालको अन्त्य र मध्यकालको आरम्भ सन् ४७६ मा कन्स्टेन्टीनोपलको पतनबाट भएको थियो । त्यसैगरी मध्यकालको अन्त्य र आधुनिक कालको आरम्भ सन् १४५३ मा बैजन्तियाको पतनबाट भएको थियो । यस्ता घटनाहरुमा कुनै –कुनै त यति साना र साधारण हुन्छन् कि तिनीहरुलाई सीमाना मान्न पनि गाह्रो हुन्छ । उदाहरणको लागि, चैत ३० गते र वैशाख १ गतेको बीचमा कुनै उल्लेखनीय भिन्नता हुँदैन । तर त्यो एक रातले दुई महिनाहरुलाई र सँगसँगै दुई वर्षहरुलाई पनि छुट्याउँछ । प्राचीनकालको अन्त्य र मध्यकालको आरम्भ तथा मध्यकालको अन्त्य र आधुनिक कालको आरम्भ हुने घटनाहरु पनि यस्तै साधारण नै थिए । तर कुनै घटनाहरु चाहिँ यति महान हुन्छन्, जसले उथल–पुथल ल्याउँछन् र सिङ्गै युगलाई नै बदल्छन् । जस्तो कि कवि

गोपालप्रसाद रिमालले लेखेका छन् – 'एक जुगमा एकदिन एकचोटि आउँछ , उलट–पलट उथल–पुथल हेरफेर ल्याउँछ ।'

सन् १९१७ को अक्टोबर २४ मा भएको रुसी क्रान्ति एउटा यस्तै महान घटना थियो । त्यो क्रान्तिले दुई विपरित सामाकि व्यवस्थाहरुलाई छुट्याएको थियो र पूँजीवादी युगको अन्त्य र समाजवादी युगको आरम्भलाई संकेत गरेको थियो । महान अक्टोबर क्रान्तिले जुन युगको ढोका खोलेको थियो, त्यो हाम्रो वर्तमान युग हो ।

इतिहासमा धेरै क्रान्तिहरु भएका छन् तर अक्टोबर क्रान्तिको समकक्षी चाहिँ सन् १७८९ मा भएको फ्रान्सेली क्रान्ति मात्र देखिएको छ । यी दुई क्रान्तिहरुको बीचमा धेरै समानता छ । दुवै क्रान्तिहरु सुदृढ वैचारिक आधारमा उभिएका थिए । फ्रान्सेली क्रान्तिको पृष्ठभूमिमा अठाह «ौं शताब्दीका फ्रान्सेली प्रबोधनकालीन दार्शनिकहरुको तर्कवाद थियो र अक्टोबर क्रान्तिको पृष्ठभूमिमा माक्र्सवाद थियो । त्यसकारण आफ्नो लक्ष्यप्रति क्रान्तिकारीहरुमा कुनै द्विविधा थिएन । एउटाको लक्ष्य थियो– सामन्तवादको अन्त्य र प्रजातन्त्रको स्थापना । अर्कोको लक्ष्य थियो– पूँजीवादको अन्त्य र समाजवादको स्थापना । यसरी यी क्रान्तिहरुले आफ्नो विगतसँग पूर्णरुपले सम्बन्धविच्छेद गरेका थिए ।

## क्रान्तिको परिवेश

अक्टोबर समाजवादी क्रान्ति एउटा परिवेशमा भएको थियो, जुन माक्र्सवादको पूर्वशर्तभन्दा भिन्न थियो । यो परिवेशका दुई पक्षहरु थिए– आन्तरिक र बाह्य । आन्तरिक परिवेशको रुपमा रुसको आन्तरिक आर्थिक –सामाजिक अवस्था थियो र बाह्य परिवेशको रुपमा पूँजीवादको अन्तर्राष्ट्रिय स्वरुप थियो । रुसको आर्थिक अवस्था पश्चिमी युरोपको तुलनामा धेरै पिछडिएको थियो । सन् १८६१ मा भूदास प्रथाको अन्त्य भए पनि किसानहरुको अवस्थामा कुनै परिवर्तन भएको थिएन । पूँजीवादको विकास प्रारम्भिक चरणमा थियो र उद्योग तथा कलकारखानाको स्थापना पनि धेरै कम मात्रामा भएको थियो । अर्थतन्त्रको प्रमुख आधार कृषि थियो । त्यसकारण माक्र्सवादको दृष्टिकोणबाट हेर्दा रुसको अर्थतन्त्र समाजवादी क्रान्तिको लागि तयार थिएन ।

त्यसैगरी बाह्य परिवेशको रुपमा रहेको पूँजीवादको अन्तर्राष्ट्रिय स्वरुप पनि बदलिएको थियो । पूँजीवाद प्रतिस्पर्धी चरणबाट एकाधिकारी चरणमा प्रवेश गरेको थियो । परिणामस्वरुप त्यो प्रतिस्पर्धाको कारण उत्पन्न हुने संकटबाट मुक्त भएको थियो । त्यसकारण केही हदसम्म क्रान्ति टरेको थियो ।

माक्र्सको समयमा पूँजीवाद प्रतिस्पर्धी चरणमा थियो र प्रतिस्पर्धाकै कारण पूँजीवाद संकटमा पर्दथ्यो । त्यही आधारमा माक्र्सले क्रान्तिको सिद्धान्त बनाएका थिए । तर सन् १९०० बाट पूँजीवाद एकधिकारी चरणमा प्रवेश ग ¥यो । त्यसरी बदलिएको नयाँ परिवेशको कारण समाजवादी क्रान्तिको मार्गमा समस्या उत्पन्न भएको थियो ।

## क्रान्तिको सूत्रधार

यस्तो विषम परिवेशमा समाजवादी क्रान्ति सम्पन्न गर्नको लागि एकजना विशिष्ट व्यक्तिको आवश्यकता पर्दथ्यो । इतिहासको आवश्यकताले त्यस्तो व्यक्तिको जन्म पनि भयो । त्यो व्यक्ति थिए– भी. आई. लेनिन । वास्तवमा महान अक्टोबर समाजवादी क्रान्तिको सूत्रधार लेनिन थिए । उनको सुझबुझ , दूरदृष्टि र असाधारण परिश्रमबाटै त्यो क्रान्ति सम्भव भएको थियो ।

लेनिनको जन्म सन् १७७० मा रुसको एउटा सानो शहर सिम्बीस्कमा भएको थियो । उनी सानैदेखि कुशाग्र बुद्धि भएका व्यक्ति थिए । तर उनलाई

राजनीतिमा लाग्न उत्प्रेरित गर्ने कुरा चाहिँ एउटा भयानक र दुःखद घटना थियो । सन् १८८७ मा उनका दाजुलाई जार अलेक्जेण्डर तृतीयको हत्या गर्ने षडयन्त्र गरेको अभियोगमा फाँसीमा झुण्ड्याएर मृत्युदण्ड दिइयो । लेनिनका दाजु अलेक्जेण्डर 'नरोदनया भोल्या ' नामको एउटा भूमिगत पार्टीमा सम्लग्न थिए । त्यो पार्टीले रुसमा जारको शासनलाई अन्त्य गरेर किसानको नेतृत्वमा समाजवाद ल्याउने लक्ष्य बनाएको थियो । त्यही क्रममा त्यसले जार अलेक्जेण्डर द्वितीयलाई मृत्युको मुखमा पु¥याइसकेको थियो । त्यसपछि त्यसले सत्तामा आएका जार अलेक्जेण्डर तृतीयको हत्या गर्ने योजना बनाएको थियो, जसमा लेनिनका दाजुलगायत सम्पूर्ण योजनाकारहरु पक्राउ परे । उनीहरुलाई मृत्युदण्ड दिइयो । त्यो घटनाले किशोर लेनिनको मनमा ठूलो चोट लाग्यो । त्यसपछि उनले आफ्नो सम्पूर्ण जीवन क्रान्तिमा लगाउने र जार शासनलाई समूल नष्ट गर्ने प्रण गरे ।

त्यसको लागि उनले माक्र्सवादको गहन अध्ययन गरे । त्यसमा उनले क्रान्तिको सूत्र भेट्टाए । उनले के बुझे भने नरोदवादीहरुको लक्ष्य ठिक छ , तर तरीका मिलेन । जार शासनलाई अन्त्य गर्ने कुरा ठिक छ , तर त्यसको तरीका ठिक छैन । व्यक्तिहत्या, आतंकवाद र नायकवादबाट समस्याको वास्तविक समाधान हँुदैन । निश्चित सिद्धान्तको आधारमा जनआन्दोलनद्वारा सम्पन्न साजाजिक क्रान्तिबाट मात्र समस्याको वास्तविक समाधान हुन्छ । त्यसपछि उनी यस्तो क्रान्तिको मार्गमा अगाडि बढ्छन् ।

लेनिनले आफ्नो क्रान्तिको यात्रामा तीनवटा अवरोधहरुलाई पार गर्नुपरेको थियो । उनले तीनवटा वैचारिक धाराहरुको विरुद्ध कठिन संघर्ष गर्नुपरेको थियो । ती वैचारिक धाराहरु थिए – नरोदवाद, कानूनी माक्र्सवाद र मेन्शेभिक धारा । यी तीन धाराहरुमाथि विजय प्राप्त गरेपछि मात्र महान अक्टोबर समाजवादी क्रान्ति सुनिश्चित भएको थियो ।

नरोदवाद रुसको पहिलो वैचारिक धारा थियो , जसमा लेनिनका दाजु अलेक्जेण्डर पनि लागेका थिए । त्यो माक्र्सवादको घोर विरोधी थियो । त्यसले के निस्कर्ष निकालेको थियो भने रुसमा पूँजीवादको विकास भएको छैन, त्यसकारण मजदूर वर्गको नेतृत्वमा समाजवादी क्रान्ति हँुदैन , त्यसको सट्टा किसान वर्गको नेतृत्वमा किसानहरुको सामुदायिक खेतीलाई समाजवादमा बदल्न सकिन्छ । त्यसैगरी त्यसले व्यक्तिहत्या गरेर शासन बदल्न सकिन्छ भन्ने विश्वास गर्दथ्यो र बहुसंख्यक जनताको भूमिकालाई भन्दा एक – दुईजना बीरहरुको भूमिकालाई महत्व दिन्थ्यो । त्यति मात्र होइन , त्यसले रुसका क्रान्तिकारी युवाहरुको मन–मस्तिष्कमा ठूलो प्रभाव जमाएको थियो । त्यसकारण समाजवादी क्रान्तिको लागि मार्गप्रशस्त गर्नको लागि नरोदवादलाई समाप्त पार्नु आवश्यक थियो ।

नरोदवादको खण्डन गर्ने पहिलो कदम जी. बी. प्लेखानोभले उठाएका थिए । तर त्यसलाई पूर्णरुपले ध्वस्त पार्ने काम लेनिनले गरे । उनले त्यो काम आफ्ना दुई कृतिहरुद्वारा गरेका थिए – 'जनताका मित्र को हुन् ?' र 'रुसमा पूँजीवादको विकास' । लेनिनले 'जनताका मित्र को हुन् ?' मा नरोदवादीहरु जनताका असली मित्र होइनन् , जनताका असली मित्र त माक्र्सवादीहरु हुन् भन्ने कुरा सिद्ध गरेका थिए । त्यसैगरी अर्को कृति 'रुसमा पूँजीवादको विकास ' मा उनले रुसमा पूँजीवादको विकास भएको छैन र त्यसैकारण मजदूर वर्गको नेतृत्वमा समाजवादी क्रान्ति संभव छैन भन्ने नरोदवादीहरुको तर्कलाई खण्डन गर्दै रुसमा पूँजीवादको विकास भइरहेको छ र मजदूर वर्गको नेतृत्वमा समाजवादी क्रान्ति पनि संभव छ भन्ने कुरा तथ्यगत रुपमा सिद्ध गरेका थिए ।

लेनिनका यी दुई कृतिहरुको प्रकाशनपछि नरोदवादको नाम–निशान रहेन ।

समाजवादी क्रान्तिको मार्गमा दोस्रो अवरोध कानूनी माक्र्सवादी धारा थियो । कानूनी माक्र्सवादीहरु माक्र्सवादी नै थिए , तर उनीहरुको ज्ञान सतही थियो । उनीहर जार शासनद्वारा स्वीकृत वैधानिक पत्रिकाहरुमा आफ्ना विचारहरु प्रकाशित गर्दथे । त्यसकारण उनीहरुलाई कानूनी माक्र्सवादी भनिन्थ्यो । उनीहरु माक्र्सवादलाई पूँजीवादको हितमा लगाउन चाहन्थे । त्यसैगरी उनीहरु मजदूर वर्गको आन्दोलनलाई पूँजीवादीहरुको अनुकूल बनाउने र माक्र्सवादको क्रान्तिकारी तत्वलाई निकालेर त्यसलाई उदारवादी सिद्धान्तमा बदल्ने प्रयत्न गर्दथे । लेनिनले कानूनी माक्र्सवादीहरुको आदर्शवादी तथा उदारवादी पूँजीवादी स्वरुपको पनि भण्डाफोर गरिदिए ।

कानूनी माक्र्सवादीहरुजस्तै अर्काथरी माक्र्सवादीहरु पनि थिए, जसलाई 'अर्थवादी' भनिन्थ्यो । उनीहरु मजदूर वर्गलाई आर्थिक संघर्षमै सीमित गर्न चाहन्थे । उनीहरुको दृष्टिमा राजनीतिक कार्य पूँजीवादी पार्टीहरुको जिम्मेवारी हो । यसरी उनीहरुले मजदूर वर्गलाई राजनीतिक भूमिकाबाट वञ्चित गर्न चाहेका थिए । अर्थवादीहरुको यस्तो दृष्टिकोण माक्र्सवादबाट पलायन थियो । त्यसलाई पनि लेनिनले पूर्णरुपमा ध्वस्त पारिदिए ।

तेस्रो र अन्तिम अवरोध मेन्शेभिक धारा थियो , जुन सवभन्दा बलियो र खतर्नाक थियो । किनभने त्यो रुसी सामाजिक –जनवादी पार्टीको बीचबाटै उत्पन्न भएको थियो । त्यसको अतिरिक्त मेन्शेभिक धारामा प्लेखानोभ , मार्तोभ तथा ट्रटस्कीजस्ता माक्र्सवादी विद्वानहरु थिए ।

वास्तवमा मेन्शेभिक धारा अवसरवादी तथा बुर्जुवा वर्गको सहयोगी थियो । त्यसले रुसमा समाजवादी क्रान्तिको कुनै भविष्य देख्दैनथ्यो । त्यो सर्वहारा वर्गलाई एउटा स्वतन्त्र क्रान्तिकारी शक्ति होइन , पूँजीवादी वर्गको सहायक मात्र बनाउन चाहन्थ्यो ।

मेन्शेभिकको दृष्टिमा जारशासनको उन्मूलनपछि रुसमा धेरै समयसम्म पूँजीवादी सत्ता रहनुपर्दथ्यो, रुसमा समाजवादी क्रान्तिको लागि अवस्था तयार भइसकेको थिएन र मजदूरहरु आफ्नो हातमा सत्ता लिन र राज्य संचालन गर्न समर्थ भइसकेको थिएन । त्यसैगरी मेन्शेभिकलाई बदलिएको पूँजीवादको स्वरुपबारे पनि अत्तोपत्तो थिएन ।

लेनिनले आफ्नो नयाँ क्रान्तिकारी सिद्धान्तद्वारा मेन्शेभिक धारामाथि विजय प्राप्त गरेर समाजवादी क्रान्तिको मार्गप्रशस्त गरे ।

## नयाँ पार्टीको निर्माण

पश्चिमी युरोपमा माक्र्सवादी पार्टीहरु त्यसवेला शान्तिपूर्ण संघर्षको लागि उपयुक्त हुनेगरी बनाइएका थिए । तर लेनिन एउटा क्रान्तिकारी पार्टी बनाउन चाहन्थे । त्यसको लागि नयाँ प्रकारको पार्टी हुनुपर्दथ्यो ।

लेनिनको दृष्टिकोणमा नयाँ क्रान्तिकारी पार्टी वैचारिक रुपमा स्पष्ट , देशव्यापी, क्रियाशील, संगठित र अन्तर्सम्बन्धित सञ्जालको आधारमा निर्माण हुनुपर्दथ्यो । त्यसप्रकारको सञ्जाल बनाउने विधिको रुपमा उनले एउटा पत्रिका निकाल्ने योजना बनाए । त्यो पत्रिका थियो – 'इस्क्रा' (झिल्को) । 'इस्क्रा' का दुईवटा भूमिकाहरु थिए– मुखपत्र र संगठक ।
लेनिनले परिकल्पना गरेको पार्टी क्रान्तिकारी कार्य सम्पन्न गर्ने पार्टी थियो , जुन पछि बोल्शेभिक पार्टीको रुपमा स्थापित भयो । त्यही पार्टीको नेतृत्वमा अक्टोबर समाजवादी क्रान्ति सम्पन्न भएको थियो । वास्तवमा एउटा सही माक्र्सवादी सर्वहारा पार्टीको निर्माण गर्ने श्रेय लेनिनलाई जान्छ ।

लेनिनद्वारा स्थापित बोल्शेभिक पार्टी सर्वहारा वर्गको अग्रदस्ता थियो , जसले क्रान्तिमा सर्वहारालाई सही नेतृत्व प्रदान गर्नसक्दथ्यो ।

## नयाँ सिद्धान्तको सूत्रपात

लेनिनको लागि माक्र्सवादको मूल करा 'ठोस परिस्थितिको ठोस विश्लेषण ' थियो । त्यसकारण उनी कुनै सूत्रको मात्र पछि लाग्दैनथे । उनले तत्कालीन आन्तरिक र बाह्य परिवेशको सूक्ष्म अध्ययन तथा विश्लेषण गरेर समाजवादी क्रान्तिको लागि एउटा नयाँ निष्कर्ष निकाले । त्यो थियो एउटा देश वा केही देशहरुमा मात्र क्रान्ति हुन्छ भन्ने निष्कर्ष , जुन परम्परागत माक्र्सवादीहरुले निकाल्न सक्दैनथे । किनभने माक्र्सवादले विश्वभरि एकैपटक क्रान्ति हुन्छ भन्ने निष्कर्ष निकालेको थियो ।

तर त्यसको कारण माक्र्सवाद गलत हुनु थिएन , बरु पूँजीवादको स्वरुपमा परवर्तन हुनु थियो । माक्र्सवादले विश्वभरि (कम्तीमा पनि बेलायत , फ्रान्स र जर्मनीमा) एकैपटक क्रान्ति हुन्छ भन्ने निष्कर्ष पूँजीवादको प्रतिस्पर्धी चरणमा निकालेको थियो । तर सन् १९०० देखि पूँजीवाद एकाधिकारी चरणमा प्रवेश गरेको थियो । त्यसकारण अब विश्वभरि एकैपटक क्रान्ति हुनसक्दैनथ्यो । साम्राज्यवादको कडी कमजोर भएको स्थानमा मात्र क्रान्ति हुनसक्दथ्यो । यसरी साम्राज्यवादी युगमा क्रान्तिको नयाँ सिद्धान्त प्रवत्र्तन गरेर लेनिनले माक्र्सवादको थप विकास गरेका थिए । त्यसलाई पछि लेनिनवाद भनियो । लेनिनवादले नै वास्तवमा अक्टोबर समाजवादी क्रान्ति संभव बनाएको थियो ।

## क्रान्तिको आरम्भ

रुसमा १९१७मा दुईवटा क्रान्तिहरु भएका थिए । एउटा क्रान्ति फेब्रुअरी २७ मा भएको थियो र अर्को अक्टोबर २४ मा भएको थियो ।

फेब्रुअरीमा भएको क्रान्ति पूँजीवादी क्रान्ति थियो , जसले जारशासनलाई अन्त्य गरेको थियो र सत्ता पूँजीवादीहरुको हातमा हस्तान्तरण गरेको थियो । तर लेनिनको निष्कर्ष अर्कै थियो । उनले त्यो क्रान्तिमा सत्ता मजदूर –किसान वर्गको हातमा आउँछ भन्ने सोचेका थिए । परिणाम त्यस्तो नआएपछि उनले क्रान्तिलाई अपूर्ण ठाने । त्यसकारण उनले अब समाजवादी क्रान्तिमा जानुपर्छ भन्ने धरणा अगाडि ल्याए र त्यसको तयारीमा लागे ।

सन् १९१७ को अप्रिलमा लेनिन विदेशबाट रुस फर्किए र प्रसिद्ध अप्रिल थेसिस लेखे । त्यसमा उनले समाजवादी क्रान्तिको मार्गचित्र प्रस्तुत गरे । फेब्रुअरी क्रान्तिपछि रुसमा द्वैतसत्ताको अवस्था सृजना भएको थियो । अस्थायी संयुक्त सरकारसँग वैधानिक सत्ता थियो र सोभियतहरुसँग अवैधानिक सत्ता थियो । लेनिनको दृष्टिमा सोभियतहरु भावी समाजवादी सत्ताका भ्रूणहरु थिए र तिनीहरुसँग रहेको अवैधानिक सत्ता नै वास्तविक जनसत्ता थियो । त्यसकारण उनी सोभियतहरुमा आफ्नो पार्टीलाई सुदृढ बनाउनतिर लागे । जब सोभियतहरुमा बोल्शेभिक पार्टीको बहुमत भयो , त्यसपछि उनले 'सम्पुर्ण सत्ता सोभियतलाई सुम्प !' भन्ने नारा अगाडि सारे ।

सोभियतहरु फेब्रुअरी क्रान्तिको बेला स्वतःस्पू mर्त रुपले उत्पन्न जनसत्ताहरु थिए । त्यस्ता सोभियतहरु तीन प्रकारका थिए– मजदूर सोभियत, किसान सोभियत र सैनिक सोभियत । तर आरम्भमा सोभियतहरुमा मेन्शेभिक र अन्य पार्टीहरुको बहुमत थियो , जसले तिनीहरुको महत्वलाई बुझ् mदैनथे । त्यसकारण लेनिनले सोभियतहरुलाई बोल्शेभिक पार्टीको पक्षमा ल्याउन आफ्नो सम्पूर्ण ध्यान केन्द्रित गरे ।

त्यसैगरी लेनिनको कुशल निर्देशनमा बोल्शेभिक पार्टीले अस्थायी संयुक्त सरकारको अर्थहीनताबारे

जनतालाई सुसूचित पार्ने र मजदूरहरु तथा किसानहरुलाई समाजवादी क्रान्तिको लागि तयार पार्ने कार्य तीव्र गतिमा अगाडि बढायो ।

र लेनिनको नेतृत्वमा बोल्शेभिक पार्टीले शान्तिपूर्ण ढंगबाट समाजवादी क्रान्तिको तयारी गर्दागर्दै जुलाइ ३ मा अस्थायी संयुक्त सरकारले दमनको नीति लियो र जुलाइ ५ माबोल्शेभिक पार्टीको राजनीतिक गतिविधिमाथि प्रतिबन्ध लगायो । त्यसपछि लेनिन र अन्य बोल्शेभिक नेताहरु भूमिगत हुनुप¥यो । अब सशस्त्र विद्रोहबाट मात्र सर्वहारा वर्गले सत्ता आफ्नो हातमा लिनसक्ने अवस्था सृजना भयो । त्यसकारण लेनिनले सशस्त्र विद्रोहको कार्यक्रम बनाए र बोल्शेभिक पार्टी पूर्णरुपले सशस्त्र विद्रोहको तयारीमा लाग्यो ।

लेनिनले सेप्टेम्बरदेखि अक्टोबरसम्म सशस्त्र विद्रोह गर्ने योजना बनाएका थिए । त्यसअनुसार बोल्शेभिक पार्टीले सशस्त्र विद्रोहको तयारीलाई तीव्र बनायो ।
अक्टोबर १० मा बोल्शेभिक पर्टीको केन्द्रीय समितिको ऐतिहासिक बैठक बस्यो र केही दिनमा सशस्त्र विद्रोह शुरु गर्ने निर्णय गरियो । त्यसैगरी अक्टोबर १६ मा सशस्त्र विद्रोहको संचालन गर्नको लागि पार्टी केन्द्र निर्माण गरियो , जसको प्रमुख जोसेफ स्टालिन थिए ।

स्थायी संयुक्त सरकारले विद्रोहलाई दबाउने अवसर नपाओस् भन्ने उद्देश्यले तोकिएको मितिभन्दा पहिले विद्रोह शुरु गर्ने निर्णय गरिएको थियो ।अन्ततः अक्टोबर २४ को दिन क्रान्तिकारी सेनाले शिशिर दरवारमाथि आक्रमण ग ¥यो र त्यसलाई नियन्त्रणमा लियो , जहाँ अस्थायी संयुक्त सरकारका प्रतिनिधिहरु बसेका थिए । त्यसको भोलिपल्ट अक्टोबर २५ मा बोल्शेभिक पार्टीले एउटा घोषणापत्र जारी ग ¥यो, जसमा अस्थायी संयुक्त सरकार अपदस्त भएको र सोभियतले राज्यसत्ता आफ्ने हातमा लिएको घोषणा गरिएको थियो । यसरी महान अक्टोबर समाजवादी क्रान्ति सम्पन्न भएको थियो ।

## अक्टोबर क्रान्तिको परिणाम

रुसमा भएको अक्टोबर समाजवादी क्रान्तिलाई एउटा महान ऐतिहासिक घटनाको रुपमा मूल्यांकन गरिएको छ । त्यो क्रान्तिबाट मुख्य रुपमा तीनवटा परिणामहरु आएका थिए ।
पहिलो परिणाम थियो , समाजवादी व्यवस्थाको स्थापना । अक्टोबर क्रान्ति भएपछि विश्वको ६ भागको १ भागमा समाजवादी व्यवस्था स्थापित भएको थियो र ‘सोभियत संघ ’ नामको एउटा विशाल देश बनेको थियो ।

अक्टोबर क्रान्ति लेनिनवादको विजय थियो । त्यो लेनिनवादद्वारा निर्देशित बोल्शेभिकहरुको लामो , दृढ तथा कठिन परिश्रम र बीरतापूर्ण संघर्षको परिणाम थियो । र , यदि क्रान्तिकारी माक्र्सवादी पार्टीले नेतृत्व ग ¥यो भने मजदूरहरु र किसानहरु एउटा महान क्रान्तिकारी शक्ति बन्नसक्छन् र उनीहरुले एउटा नयाँ समाजको निर्माण गर्नसक्छन् भन्ने कुराको प्रत्यक्ष प्रमाण थियो ।

अक्टोबर क्रान्तिले रुसमा पूँजीवादी व्यवस्थाको अन्त्य गरेको थियो , मानव इतिहासमा पहिलो पटक सर्वहारा अधिनायकव लागु गरेको थियो र मजदूरहरु तथा किसानहरुको राज्यसत्ता स्थापित गरेको थियो । त्यो क्रान्ति विशुद्ध राजनीतिक परिवर्तन मात्र थिएन , त्यो त जनताको जीवनमा सर्वाङ्गीण परिवर्तनको सूचक थियो । त्यो क्रान्तिले देशको क्रान्तिकारी पुनर्निर्माण गरेर नयाँ समाजवादी समाजको सृजना आरम्भ गरेको थियो ।

दोस्रो परिणाम थियो , विश्वभरि सर्वहारा क्रान्तिको विस्तार । अक्टोबर क्रान्ति भएपछि विश्वभरि त्यसको प्रभाव पर्नथाल्यो , विश्वभरि सर्वहारा क्रान्तिको लहर चल्नथाल्यो । सर्वप्रथम पूर्वी

युरोपका देशहरुमा समाजवादी सत्ता स्थापना भए । त्यसपछि चीन , कोरिया, क्युबा, भियतनाम, कम्बोडिया, आदि देशहरुमा सर्वहारावर्गीय क्रान्तिहरु भए । त्यसैगरी त्यो क्रान्तिको प्रेरणाबाट सर्वहारा आन्दोलनहरु पनि विश्वव्यापी रुपमा चल्नथाले । परिणामस्वरुप विश्व दुई धारामा विभाजित भयो – पूँजीवादी धारा र समाजवादी धारा ।

तेस्रो परिणाम थियो, पूँजीवादी व्यवस्थामा सुधार । अक्टोबर क्रान्तिपछि विश्वमा आएको समाजवादको लहरले पूँजीवाद संकटमा प¥यो । अब त्यसले थोरै मात्र भए पनि लोककल्याणकारी काम नगरी आफूmलाई बचाउन नसक्ने भयो । त्यसकारण त्यसले आफ्नो शोषणकारी , अमानवीय तथा व्यक्तिवादी चरित्रलाई परिमार्जन गरेर समाजको हितमा ढाल्ने प्रयत्न ग ¥यो । त्यसैगरी त्यसले विशुद्ध पूँजीवादको सट्टा 'प्रजातान्त्रिक समाजवाद' नाम दिएर भ्रम छर्नथाल्यो ।

पूँजीवादले समाजवादका धेरै तत्वहरु लिएर आफूmलाई परिमार्जन गरेको छ । तर पूँजीवादको चरित्रअनुसार यो सुधार अस्थायी मात्र हो ।

## अक्टोबर क्रान्तिको मूल्यांकन

वर्तमान युगको लगि महान अक्टोबर समाजवादी क्रान्तिको ठूलो महत्व छ । किनभने त्यसले वर्तमान युगलाई परिभाषित गरेको थियो । त्यसबाट मानव समाजमा जुन परिवर्तनहरु भए , तिनीहरु वर्तमान युगका विशेषता र गरिमा हुन् । अक्टोबर क्रान्तिले नै सर्वप्रथम पूँजीवादभन्दा भिन्न र पूँजीवादी व्यवस्थाको विकल्पमा नयाँ सामाजिक व्यवस्थालाई अस्तित्वमा ल्याएको थियो ।

तर अक्टोबर क्रान्तिमा केही गल्ती पनि भएको थियो । त्यो गल्ती थियो, राज्यलाई प्रमुख बनाउनु । त्यसले सम्पूर्ण सम्पत्तिको स्वामित्व र सम्पूर्ण शासकीय अधिकार राज्यलाई सुम्पेको थियो । परिणामस्वरुप राज्यनियन्त्रित समाजवादको विकास भयो, जुन समाजवादको नकारात्मक पक्ष बन्यो ।

काम गर्दा गल्ती हुनसक्छ, यो स्वाभाविक कुरा हो । जस्तो कि स्वयं लेनिन भन्छन् –'काम गर्ने मानिसले गल्ती गर्छ । गल्ती त त्यसले मात्र गर्दैन, जसले केही काम गर्दैन । तर फेरि त्यो मानिस मात्र अगाडि बढ्न सक्छ , जसले पुरानो गल्तीलाई दोहो¥याउँदैन ।'

हो, त्यसकारण यदि हामी पनि अगाडि बढ्न चाहन्छौं भने, हामीले पुरानो गल्तीलाई दोहो¥याउनु हुँदैन । महान अक्टोबर समाजवादी क्रान्तिबाट हामीले लिने एउटा शिक्षा यही हो ।
त्यसैगरी लेनिनको अर्को कथन पनि मननयोग्य छ । उनले भनेका थिए – 'माक्र्सवादले त्यो विज्ञानको जगमात्र हालेको छ , जसलाई, यदि समाजवादीहरु जीवनमा पछि पर्न चाहँदैनन् भने , चौतर्फी विकास गर्नुपर्छ ।'

अक्टोबर क्रान्तिले पनि समाजवादको जगमात्र हालेको छ । यदि हामी जीवनमा पछि पर्न चाहँदैनौं भने, यसलाई चौतर्फी विकास गर्नुपर्छ । यदि अक्टोबर क्रान्तिबाट स्थापित समाजवादलाई पूर्ण मानियो भने , सोभियत संघ ढलेपछि समाजवाद नै ढल्यो भन्ने निष्कर्ष निस्किन्छ, जुन पूँजीवादीहरु र संशोधनवादीहरुले निकालेका छन् । त्यसकारण हामीले यस्तो सोच्ने गल्ती गर्नुहुँदैन । यो पनि अक्टोबर क्रान्तिबाट हामीले लिने शिक्षा हो ।

अक्टोबर क्रान्तिको अर्को महत्वपूर्ण शिक्षा के हो भने एउटै देशमा पनि क्रान्ति हुनसक्छ । त्यसकारण क्रान्तिकारीहरुले परिस्थिति तयार हुनासाथ क्रान्ति गर्ने प्रयत्न गर्नुपर्छ ।
त्यसैगरी अक्टोबर क्रान्तिबाट हामीले लिने अन्तिम महत्वपूर्ण शिक्षा यो हो – पूँजीवादी वर्गको

पक्षपोषक बनेर मेन्शेभिकहरु आउँछदछन् र तिनीहरुलाई परास्त गर्दै क्रान्तिको मार्गमा अगाडि बढ्नुपर्छ ।

अन्त्यमा, महान अक्टोबर समाजवादी क्रान्तिको शतवार्षिकीको उपलक्ष्यमा हामी यिनै शिक्षाहरुलाई मनन गर्दै अगाडि बढ्ने प्रतिज्ञा गरौं !

**स्रोत:आधारशीलाको प्रकाशन 'प्रस्थान'**

## माक्र्सवादको विकासका आधार र पृष्ठभूमी

- डा. बेदुराम भुसाल

## माक्र्सवादको सामान्य परिभाषा

माक्र्सवादलाई, समाजवादी क्रान्तिको सिद्धान्त , श्रमजीवी वर्गको मुति m को सिद्धान्त , समाज परिवर्तनको क्रन्तिकारी सिद्धान्त आदि भनिन्छ । अन्तर्वस्तुको हिसावले यो एक वैज्ञानिक दर्शन , क्रान्तिकारी समाज विज्ञान र श्रमजीवी वर्ग पक्षधर राजनीतिक अर्थशास्त्र हो , जसले श्रमजीवी वर्गको मुतिm र सिंगै समाजको परिवर्तनका निम्ति मार्गदर्शन गर्दछ ।

## माक्र्सवादको सान्धर्भिकता

'माक्र्सले वौद्धिक रुपमा एउटा यस्तो युग प्रस्तावित गर्छन् , जुन सताव्दीऔंसम्म अर्थात राजनीतिक समाजको विलोप र नियमवद्घ समाजको आगमन नभएसम्म कायम रहनेछ । उनको विश्व अवधारणा तवमात्र विस्थापित हुनेछ , जव आवस्यकताको अवधाराणालाई स्वतन्त्रताको अवधाराणाले विस्थापित गर्ने कार्य पुराभएको हुनेछ ।' (एन्तोनियो ग्राम्शी )

माक्र्सवादलाई अस्वीकार गर्न सकिएला तर यसलाई गलत सावित गरिएको छैन । माक्र्सवादको सत्यता वा सान्दर्भिकता अस्वीकार गर्न सकिएला तर त्यसका वावजुद पनि यसको प्रभाव या असर रहिरहन्छ । ( Helena Sheehan –Marxism and philosophy of Science)

राजनैतिक र विचारधारात्मक दूवै पक्षबाट माक्र्सवादले आफ्नो अन्तिम श्वास फेरिसकेको छैन । त्यसकारण माक्र्सवादको मृत्यूको घोषणा अपरिपक्व हुनसक्छ । इतिहासले माक्र्सलाई सही सावित नगरिसकेको हुनसक्छ तर त्यसले उनलाई स्पष्ट रूपमा गलत सावित गरिसकेको पनि त छैन । (डेविड वाकर- Historical Dictionary of Marxism )

## माक्र्सवादका मूलभूत मान्यता

१. द्वन्द्ववादी विश्वदृष्टिकोण । संसारका सबै वस्तु र घटनाको उत्पत्ति , विकास र परिवर्तनको मूल कारण वा आधार भौतिक पदार्थमा रहेको द्वन्द्वात्मक गति हो भन्ने मान्यता । यसै मान्यताका आधारमा माक्र्सवादले हरेक वस्तु र घटनाको अध्ययन तथा विश्लेषण द्वन्द्ववादी ढङ्गले गर्ने गर्दछ ।

२. संसार परिवर्तन गर्ने मान्यता । यसै मान्यताका आधारमा माक्र्सवादले संसारका कुनै पनि वस्तु , घटना, ब्यतिm, संस्था आदि सबैलाई विकास र परिवर्तनको प्रकृयामा हेर्ने गर्दछ ।

३.वर्गीय पक्षधरताको मान्यता । यसै मान्यताका आधारमा मार्क्सवादले वर्गीय समाजको परिवर्तन गर्ने तथा वर्गीय शोषण एवम् शासनको अन्त्य गर्ने मूल माध्यम वर्ग सघर्ष हो भनेर विश्लेषण गर्दछ र श्रमजीवी वर्गको पक्षपोषण गर्दछ ।

४. दर्शन र सिद्घान्तहरू चिन्तन पद्धति मात्र नभएर कार्य पद्धति पनि हुन भन्ने मान्यता । यसै मान्यताको आधारमा माक्र्सवादले दर्शन र सिद्धान्तहरू गतिशील हुन्छन् र तिनिहरू जीबनका निम्ति हुन, जीबन तिनिहरूका निम्ति होइन भन्ने विश्लेषण गर्दछ ।

## मार्क्सवाददी दर्शनको परिभाषा

माक्र्सबादी दर्शन संसारका सम्पूर्ण बस्तु र घटनालाई तिनीहरूका गतिको द्वन्द्वात्मकतामा र विकासको ऐतिहासिक प्रकृयामा हेर्ने , वुझ्ने तथा व्याख्या गर्ने र परिवर्तनका लागि तरिका बताउने दर्शन हो । यो अहिलेसम्मको सवैभन्दा विकसित र वैज्ञानिक भौतिकवादी दर्शन हो । यो तथ्यमा आधारित तर्क गर्ने दर्शन हो । यसलाई द्वन्द्वात्मक र ऐतिहासिक भौतिकवाद भनिन्छ । यो भौतिकवाद र द्वन्द्ववादको विकासको परिणाम हो । यसको उदय हुनुमा पुनर्जागरण आन्दोलन, औद्योगिक क्रान्ति र फ्रान्सेली क्रान्तिले मुख्य पृष्ठभूमिको काम गरेका छन् ।

## दर्शनको प्रारम्भ र विकास

दर्शनको इतिहास स्वस्पू mर्त प्रकृतिवादी भौतिकवादबातबाट प्रारम्भ हुन्छ । समाजको विकास संगसगै चिन्तन या दर्शनको पनि विकास भएर आएको छ । समाज वर्गमा विभाजित नहुदासम्म मानिसको चिन्तन आधारभूत रूपमा प्राकृतिक भौतिकवादी चरित्रको थियो । समाज वर्गमा विभाजित भएपछि चिन्तनमा पनि वर्ग पक्षधरताको उदय भयो र दर्शन दुई धारामा विभाजित भयो । मध्ययुग दर्शको विकासका दृष्टिले पुरै अन्धकार युग रह्यो । 'ईश्वर जान्ने लक्ष्य नभएको ज्ञान सवै पाप हो ' भनियो । सातौं सदीमा अरव साम्राज्यको विस्तारपछि युनानी र रोमन दर्शन तथा विज्ञानको अध्ययन र प्रचार – प्रसार भयो ।आठौं सदीको उत्तरार्धमा शार्लेमानको साम्राज्य निर्माणपछि शिक्षा प्रणालीमा परिवर्तन र तर्क वितर्क चालु भयो ।पूजीवादी उत्पादन प्रणाली र यान्त्रिकीको विकाससँगै चिन्तनको पनि विकास भया ।युरोपमा पध्रौं सताव्दीबाट शुरु भएको पुनर्जागरण आन्दोलनले विज्ञान र दर्शनको विकासका निम्ति ढोका खोलिदियो । भौतिकवादका विभिन्न धाराहरू र द्वन्द्ववादका विभिन्न धाराहरूको विकास भयो ।

## समतामूलक समाजको चिन्तन

समतामूलक समाजका विचार पहिलेदेखिनै रहेका थिए । प्लेटोले एक प्रकारको पारिवारिक साम्यवाद भने । बुद्धले संघवादको कुरा गरे । हिन्दूहरूले राम राज्यको कुरा गरे । चीनमा आदिम व्यवस्था कायम राख्ने चिन्तन थियो । थोमस मूरले युटोपिया लेखेर (ई.१५१६) समानतायुक्त समाजको कल्पना प्रस्तुत गरे । तोमासो क्याम्पनेलाले सूर्यको शहर लेखेर (ई. १५९२) समानतायुक्त समाजको कल्पनिक चित्र प्रस्तुत गरे । ग्राचुस बावेले कन्सपिरेसी अफ इक्वेल्स् भनरे सारा असमानता हटाउने र साम्यवाद ल्याउने कुरागरे ।रवर्ट ओवेन, सेन्ट साइमन, चाल्र्स फुरिय आदिले काल्पनिक समाजवादका विभिन्न मान्यता अगाडि सारे । काल्पनिक समाजवादले पूँजीवादको विरोध , आलोचना र भत्सना ग ¥यो । त्यसको विनाश र नयाँ समाज निर्माणको सपना पनि देख्यो र शोणण गर्नु अनैतिक कार्य हो भनेर मान्छेलाई सम्झाउने प्रयत्न पनि ग ¥यो । तर त्यसले पूँजीवादी समाजको विकासका नियम , पूँजीवादमा हुने ज्यालादारी दासता र नयाँ समाजको निर्माणमा अगुवाइ गर्ने क्रान्तिकारी वर्गको पहिचान गर्न सकेन । माक्र्सवादले ती कमीहरूलाई पुराग¥यो ।

## पुनर्जागरण आन्दोलन र वैज्ञानिक आविस्कार

पन्ध्रौं शताब्दीमा आइपुगेपछि युरोपमा पुनर्जागरण ९च्भलबष्ककबलअभ० नामको एक बौद्धिक आन्दोलन शुरु भयो । त्यस आन्दोलनले आधुनिक शिक्षा प्राप्त मानिसहरूलाई प्राचीन युनानी तथा रोमन संसारको ज्ञान भण्डारमा प्रवेश गरायो र मध्यकालीन संस्कृतिको साँघुरो घेराबाट मुक्त गरी एक व्यापक दृष्टिकोणतर्फ उन्मुख गरायो । नयाँ नयाँ खोज तथा अनुसन्धान र चिन्तनका निम्ति अनुकूलता पैदा ग ¥यो । त्यस अनुकूल वातावरणमा अनेकौं वैज्ञानिक र दार्शनिक चिन्तकहरू जन्मिए ।

कोपर्निकस (१४७३–१५४३ ई.) ले ब्रह्माण्ड सम्बन्धी सूर्यकेन्द्रवादी सिद्धान्त प्रतिपादन गरे । उनको “खगोलीय पिण्डहरूको गतिका सम्बन्धमा ” नामक कृति ई. १५४३ मा प्रकाशित भएपछि सार्वजनिक भएको सूर्यकेन्द्रबाद गम्भीर बैचारिक संघर्षको विषय बन्यो । चर्च र पाण्डित्यवादका पक्षधरहरूले यसको कडा विरोध गरे भने प्रगतिशील एवम् सृजनशील चिन्तकहरूले चाहिं यसलाई आफ्नो ब्यानर बनाएर अगाडि बढे । जर्दानो ब्रुनो (१५४८ – १६०० ई.) ले पाण्डित्यवादको विरोध र सूर्यकेन्द्रवादको समर्थन गर्दै त्यसमा रहेका कमजोर पक्षहरूलाई हटाउने प्रयत्न गर्नुका साथै अनन्त परमेश्वर भनेको नै प्रकृति हो भनेर प्रकृतिको अनन्ततालाई पुष्टि गर्ने कोशिष गरे । धर्माधिकरणले ब्रुनोलाई ज्यूँदै जलायो । तर पनि विज्ञान र चिन्तनको गति रोकिएन । केप्लर (१५७१–१६३० ई.) ले ग्रहहरूको गति सम्बन्धी नियम पत्ता लगाई १६१८ मा प्रकाशित गरे । विलियम हार्वे (१५७८ –१६५७ ई.) ले जैव शरीरमा हुने रक्त संचार प्रणाली पत्ता लगाई १६२८ मा प्रकाशित गरे । गिल्वर्ट (१५४० –१६०३ ई.) ले चुम्बक पत्ता लगाए । ग्यालेलियो (१५६४ –१६४२ ई.) ले पृथ्वीले सूर्यको परिक्रमा गर्दछभन्ने पत्ता लगाए । रवर्ट वायले (१६२७ –९१ ई.) ले एक कोशीय जीवाङ्गहरू पत्ता लगाए । न्यूटन (१६४२–१७२७ ई.) ले गुरुत्वाकर्षणको नियम पत्ता लगाए ।

पुनर्जागरण आन्दोलन र विज्ञान तथा प्रविधिको विकासले सामाजमा दुईवटा महत्वपूर्ण परिवर्तन ल्यायो । पहिलो – चिन्तनको क्षेत्रमा चर्चको आधिपत्य समाप्त भई विज्ञानको आधिपत्य शुरु भयो । दोस्रो – राजकीय नियन्त्रणमा पनि चर्चको आधिपत्य समाप्त भएर राज्यको आधिपत्य कायम भयो । पहिलो कुराले स्वतन्त्र चिन्तनका निम्ति ढोका खोलिदियो भने दोस्रोले चिन्तनमाथिको नियन्त्रणलाई कम ग¥यो ।

## औद्योगिक क्रान्ति

मान्छेको हातले उत्पादन कार्य गरिने कृषिप्रधान अर्थतन्त्रबाट मेशिनद्वारा उत्पादन कार्य गरिने औद्योगिक अर्थतन्त्रमा वदलिने प्रकृया । अठारौं सताव्दिमा वेलायतबाट शुरुभै अन्यत्र फैलिएको थियो । जेम्स वाटद्वारा वाष्प इन्जिनको आस्किार भयो । हाते तानको सट्टा कपडा कार्खानाहरुको स्थापना भयो । छपाइ मेशिनको आविस्कार भयो । छपाखानाहरु खुले । नयाँ श्रम सम्वन्धहरु शुरुभए । एउटै कार्यस्थलमा सयौं मानिसहरु जम्मा भएर काम गर्नथाले । औद्योगिक मजदुर वर्गको उदय भयो । पूँजीपति वर्ग र मजदुर वर्ग वीचको अन्तर्विरोध वढ्दैगयो । आर्थिक अधिकारका आन्दोलन शुरुभए । पूँजीपति वर्गले सामन्त वर्गसँग राजनैतिक अधिकारका निम्ति लडेको थियो भने मजदुर वर्गले पूँजीपति वर्गसँग आर्थिक अधिकारका निम्ति लड्न थाल्यो ।

## फ्रान्सेली राज्य क्रान्ति र त्यसको प्रभाव

ई. १७८९ मा भएको फ्रान्सेली क्रान्तिले युरोपबाट सामन्तवादको अन्त्य ग ¥यो ।संसारमा पूजीवादी युगको थालनी ग ¥यो । स्वतन्त्रता , समानता र भ्रातृत्वको नारा दियो । यो क्रान्ति अपर्याप्त छ भन्ने ग्राचुस बावे जस्ता क्रान्तिकारी देखापरे । त्यस क्रान्तिपछि समाजवाद र साम्यवादको वहस व्यापक बन्यो ।

## मार्क्सवादको सिर्जनाका आधारहरू

माक्र्सवादको सिर्जना उन्नाइसौं शताब्दीको मध्यकालमा युरोपमा भएको हो । यसको सिर्जनाको आधार निर्माण गर्नमा पुनर्जागरण आन्दोलन, औधोगिक क्रान्ति र १७८९ को फ्रान्सेली राज्य क्रान्तिले मुख्य भूमिका निभाएका छन् । त्यसका तात्कालिक आधारहरू तिन प्रकार छन्-

**१) आर्थिक —सामाजिक आधार:** अठारौं शताब्दीको उत्तरार्धमा युरोपमा सामन्तवादका विरुद्ध क्रान्तिहरू शसफल भएका थिए र त्यहाँ पूँजीवादको स्थापना भइसकेको थियो । पूँजीवाद संगसंगै उसका विरुद्ध संघर्ष गर्ने मजदुर वर्गको पनि जन्म भएको थियो । पूँजीवादी उत्पादन प्रणालीको अभिन्न अंगका रूपमा रहको मजदुर वर्गले आफ्नो जन्मकालदेखि नै आफूमाथि भएको शोषण , दमन र अन्यायका विरुद्ध संघर्ष गर्न थालेको थियो ।

शुरु–शुरुमा यो वर्ग आफ्नो वर्ग दुष्मनका बारेमा सचेत थिएन । त्यस वेला मजदुर वर्गीय आन्दोलनलाई मार्गदर्शन गर्ने निश्चित मार्गदर्शक सिद्धान्त पनि थिएन । त्यसैले मजदुरहरूले स्वतःस्फूर्त ढंगबाट एक्ला –एक्लै पूँजीपतिहरूमाथि व्यक्तिगत आक्रमण गर्ने प्रकृतिको आन्दोलन चलाएका थिए । मजदुरहरू व्यावहारबाट अनुभव प्राप्त गर्दै क्रमशः सचेत, संगठित र आन्दोलित हुँदै गएका थिए । जस्तो कि १८११ –१२ मा वेलायतका मजदुरहरूले स्वतःस्फूर्त ढंगले मेशिनतोड (लुडाइट) आन्दोलन चलाएका थिए र त्यस आन्दोलमा चर्को दमन भोगी असफल भएपछि सफलता प्राप्त गर्नका निम्ति संगठित भएर आन्दोलन गर्नु पर्दो रहेछ भन्ने अनुभव प्राप्त गरेर १८१३ देखि उनीहरू संगठित हुन थालेका थिए । १८३१ मा फ्रान्सको लियों शहरका कारखानामा कपडा बुन्ने मजदुरहरूले विद्रोह गरेका थिए । १८३२ देखि बेलायतका मजदुरहरूले मागपत्र (चार्टिष्ट) आन्दोलन शुरु गरेका थिए । १८३२ देखि १८४२ सम्म पूरै दशवर्ष चलेको त्यस चार्टिष्ट आन्दोलनमा लाखौं मजदुरहरू सहभागी भएका थिए । १८३२ मै पेरिसका मजदुरहरूले विद्रोह गरेका थिए । १८४४ मा जर्मनीको शिलेशिया (हाल पोल्याण्डमा पर्छ) शहरका कपडा बुन्ने मजदुरहरूले पनि विद्रोह गरेका थिए ।

उपर्युक्त मजदुर आन्दोलनहरू अर्थात् पूँजीपति वर्गका विरुद्ध मजदुर वर्गले चलाएका वर्ग संघर्षहरूबाट थुप्रै अनुभवहरू प्राप्त भएका थिए र श्रमजीवी वर्गमाथिको शोषण, दमन र उत्पीडनलाई समाप्त पार्नका लागि विद्यमान आर्थिक – सामाजिक र राजनीतिक व्यवस्थालाई उखेलेर फ्याक्नुपर्ने आवश्यकता महशुस हुनुका साथै त्यसो गर्नु अत्यावश्यक छ र सम्भव पनि छ भन्ने स्पष्ट भएको थियो । त्यसका निम्ति तत्कालीन समाजमा रहेका आर्थिक –सामाजिक र राजनीतिक सम्बन्ध एवम् संस्थाहरूको ठाउँमा कायम गरिने नयाँ सम्बन्ध एवम् संस्थाहरूको वारेमा स्पष्ट धारणा सहितको एक सिद्धान्त निर्माण गर्नुपर्ने आवश्यकता खड्किएको थियो । यही ऐतिहासिक आवश्यकता र व्यावहारिक अनुभवले माक्र्सवादको सिर्जनाका निम्ति एक महत्वपूर्ण आधारको काम गरेको थियो ।

**२) वैज्ञानिक आधार:** उन्नाइसौं शताब्दीको प्रारम्भसंगै विज्ञानका विभिन्न क्षेत्रको अध्ययन एवम् विश्लेषण गहिरिएको थियो । त्यस अध्ययनले वस्तु वा घटनाको सारतत्वको वारेमा जानकारी हासिल गर्नुका साथै परिवर्तनका कारणहरू पत्ता लगाउने काम हुन थालेको थियो । त्यस क्रममा प्राणी जगत्का भ्रूणहरूको अध्ययन गर्ने भ्रूण विज्ञान , जौविक प्रक्रियाहरूको अध्ययन गर्ने शरीरक्रिया विज्ञान , पृथ्वीको वाहिरी अर्थात् चट्टानी खण्ड (ऋचगकत) को अध्ययन गर्ने भूगर्भ विज्ञान जस्ता विज्ञानका नयाँ शाखाहरूको विकास भएको थियो र अध्ययन अनुसन्धानमा विशिष्टिकरण हासिल भएको थियो । त्यस गहन अध्ययनको परिणामस्वरूप तीन महान्् आविष्कार भनिने जीवकोषको आविष्कार , ऊर्जाशक्तिको संरक्षण एवम् रूपान्तरणको नियमको आविष्कार र जीव विकासको सिद्धान्तको आविष्कार लगायतका थुप्रै वैज्ञानिक आविष्कारहरू भएका थिए ।

जर्मन जीव वैज्ञानिकहरू श्लेडेन९क्अजभिष्मभल० र श्वान्न९क्अजधबलल०द्वारा सन् १८३८ –३९ मा

आविष्कार भएको सवै जैविक अंगहरू निर्माणको आधारभूत इकाई जीवकोष हो भन्ने कुराले जैविक जगत्को एकत्व वा एक रूपता प्रमाणित गर्नुका साथै विकासका गुणहरू स्वयम् पदार्थ भित्रै रहेका छन् भन्ने पुष्टि भएको थियो ।

जर्मन भौतिकशास्त्री जुलियस रवर्ट मायरद्वारा सन् १८४२–४७ मा आविष्कार भएको ऊर्जाशक्तिको संरक्षण एवम् रूपान्तरणको नियमबाट पदार्थका विभिन्न रूपहरूका बीचको अन्तर्सम्बन्ध तथा एकबाट अर्कोमा रूपान्तरणको सम्बन्धमा जानकारी भई पदार्थ र गतिका बीचको अविभाज्य सम्बन्ध र पदार्थको गतिका विभिन्न रूपहरू बीचको सार्वभौमिक अन्तर्सम्बन्ध एवम् अन्तक्रिरया नै प्रकृतिमा हुने परिवर्तनका भौतिक कारण हुन् भन्ने पुष्टि भएको थियो ।

सन् १८५९ मा प्रकाशित गरिएको चाल्स डार्विनको जीव विकासको सिद्धान्तले जैविक जगत्मा निरन्तर विकास र परिवर्तन भइरहन्छ भन्ने कुराको साथै अहिले संसारमा रहेका जीवका जाति –प्रजातिहरू विकासको लामो प्रक्रियाका परिणाम हुन् भन्ने स्पष्ट पारेको थियो ।

उपर्युक्त तीन महान्ः आविष्कारहरूका अतिरिक्त अरु पनि धेरे आविष्कारहरू भएका थिए । ती आविष्कारहरूले मानव जातिलाई नयाँ –नयाँ कुराहरूको जानकारी गराएका थिए । जस्तो कि भौतिक पिण्डहरूमा हुने ध्रुवीय गुण९एयबिचष्तथ०ले भौतिक पदार्थमा हुने प्रतिपक्षको एकता र संघर्षको स्थितिलाई देखाएको थियो । त्यसैगरी रसायन तत्वको एकल सिद्धान्त९क्ष्लनभि तजभयचथ या अजझष्अब ियm उयकष्तष्यल० का आधारमा तत्व र मिश्रणहरूको निर्माण वारे ज्ञान हासिल भइरहेको थियो ।

विज्ञानको उपर्युक्त गहन अध्ययन एवम् अनुसन्धान र आविष्कारहरूको जगमा उँभिएर माक्र्सवादको सिर्जना गरिएको थियो । किनभने उपर्युक्त आविष्कारहरूले द्वन्द्वात्मक एवम् ऐतिहासिक भौतिकवादको विश्लेषण र पदार्थको गतिका नियमहरूको विकासका निम्ति प्रकृति विज्ञानका आधारहरू प्रदान गरेका थिए ।

**३) सैद्धान्तिक ÷दार्शनिक आधारहरू:** उन्नाइसौं शताब्दीको मध्यमा आइपुग्दा युरोपमा दर्शनशास्त्र , अर्थशास्त्र र काल्पनिक समाजवादी चिन्तनको क्षेत्रमा समेत धेरै ठूलो प्रगति भइसकेको थियो ।

दर्शनको क्षेत्रमा हेगेलले द्वन्द्वका नियमहरू सुत्रवद्ध गरिसकेका थिए भने फायरवाखले भौतिकवादको राम्रो विकास गरेका थिए । तर हेगेलेको द्वन्द्ववाद भाववादको सालनालमा वेरिएर रहेको थियो भने फायरवाखको भौतिकवाद चाहिं द्वन्द्ववादको अभावले गर्दा अपूर्ण थियो । कार्ल माक्र्स र फ्रेडरिख एंगेल्सले हेगेलको द्वन्द्ववादलाई फायरवाखदको भौतिकवादसंग मिलाएर टाउकाले टेकेर उँभिएको उल्टो अवस्थाबाट सुल्ट्याई खुट्टाले टेकेर हिंड्ने बनाए । यस सम्वन्धमा माक्र्स आफै लेख्छन् – 'मेरो द्वन्द्ववादी पद्धति हेगेलकोभन्दा फरक मात्र नभएर त्यसको ठिक उल्टो छ । हेगलले मानव मस्तिष्कको जीवन प्रकृया अर्थात चिन्तन प्रकृयालाई स्वतन्त्र कर्ता बनाएका छन् , उनका लागि त्यो नै वास्तविक संसारको सिर्जनकर्ता हो र वास्तविक संसार चाहिं केवल विचारको वाहिरी एवम् इन्द्रियगम्य रूप मात्र हो । त्यसको विपरित मेरा लागि विचार भनेको भौतिक संसार मानव मस्तिष्कमा प्रतिविम्वित हुने र चिन्तनमा वदलिने चिज वाहेक अरु केहि पनि होइन । ' **(पूँजी: दोश्रो जर्मन संस्करणको भूमिका)** ।

त्यसैगरी आर्थिक सिद्धान्तको क्षेत्रमा अर्थात् अर्थशास्त्रको क्षेत्रमा बेलायतका डेविड रिकार्डो र एडम स्मिथले श्रम मूल्य सिद्धान्त९ीबदयगच त्जभयचथ या ख्बगिभ०को प्रतिवादन गरिसकेका

थिए । त्यस सिद्धान्तलाई विकास गर्दै कुनै पनि वस्तुको उत्पादन गर्दा सामाजिक हिसावले आवश्यक पर्ने श्रम – समयको आधारमा नै त्यस वस्तुको मूल्य निर्धारण हुन्छ भनेर पुष्टि गर्ने काम माक्र्सले गरे । उनले अतिरिक्त मूल्यको सिद्धान्त प्रतिपादन गरी पूँजीपतिले श्रमिकलाई गराउने अतिरिक्त श्रम र त्यस अतिरिक्त श्रम मार्फत् सिर्जना हुने अतिरिक्त मूल्य नै पूँजीवादी शोषणको मूल आधार हो भन्ने कुरा स्पष्ट पारे ।

त्यस्तै समाजशास्त्रको क्षेत्रमा थोमस मूरबाट शुरु भएको काल्पनिक समाजवादी चिन्तनको पनि विकास हुँदै गएको थियो । त्यसै क्रममा विकास भएका सेन्ट साइमन , चाल्र्स फूरिय र रवर्ट ओवेनका काल्पनिक समाजवादी विचारहरूले समाजलाई प्रभावित गरिरहेका थिए । अर्कोतर्फ ब्लांकी र बार्बेद्वारा नेतृत्व गरिएको षड्यन्त्रमूलक गतिविधिमा विश्वस गर्ने धार थियो । माक्र्स र एंगेल्सले चिन्तनलाई व्यवहारसंग गाँसेर वैज्ञानिक समाजवादी सिद्धान्तको प्रतिपादन गरे । समाज विकासका सामान्य नियमहरूको विज्ञान ऐतिहासिक भौतिकवादको प्रतिपादन भयो ।

## लिगभित्र विवाद र मार्क्स-एंगेल्सको अडान

मानव चिन्तनमा समतामूलक समाजका मान्यताहरू धेरै पहिलेदेखि नै रहेका थिए । आदिम सामुदायिक समाज समतायुक्त थियो । समाज दासप्रथात्मक युगमा प्रवेश गरेपछि पनि समतावादी चिन्तन यदाकदा प्रकट हुँदै ग ¥यो । जस्तो कि इशापूर्व छैटौं शताब्दीका नेपाली दार्शनिक गौतम बुद्ध र ईशापूर्व चौथो शताब्दीका युनानी दार्शनिक प्लेटोका चिन्तनमा त्यस किसिमका समतावादी मान्यता रहेका थिए । शायद ती समतावादी विचारहरूबाट समेत प्रभावित भएर दासप्रथाका विरुद्ध ठूल–ठूला विद्रोहहरू भए । समाज सामन्ती युगमा प्रवेश ग ¥यो र शोषणका झनै जटिल रूपहरू प्रकट भए । सामन्तवादका विरुद्ध पनि विद्रोहहरू भए । समाज पूँजीवादी युगमा पुग्यो । पूँजीवादमा अतिरिक्त श्रमको मूल्य शोषण गर्ने कार्य चर्कियो । त्यसका विरुद्ध अनेक ढंगले संघर्ष हुन थाल्यो । त्यही क्रममा काल्पनिक समाजवादी चिन्तनको जन्म भयो र त्यसबाट अझै अगाडि बढेर वैज्ञानिक समाजवादको उदय भयो ।

फ्रान्सेली क्रान्तिपछि समाजवाद र साम्यवादको वहस व्यापकबन्यो । ती विचार बोकेका संगठनहरू पनि बन्नथाले । १८३४ मा पेरिसमा जर्मन शरणार्थीहरूद्वारा “निर्वासितहरूको संघ ” नामक प्रजातान्त्रिक–गणतन्त्रवादी चरित्रको गुप्त संगठन निर्माण भयो । १८३६ मा लण्डन मजदुर संघको निर्माण भयो । १८३६ मा निर्वासितहरूको संघभित्रका सर्वहारावादी तत्वहरू अलग भएर “न्यायी संघ” ९ीभबनगभ या व्गकत० को गठन गरे । एंगेल्सका अनुसार यो संघ वास्तवमा त्यसबेला ब्लांकी र बार्बेद्वारा नेतृत्व गरिएका फ्रान्सेली गुप्त समाजहरूको जर्मन शाखाभन्दा बढि केही थिएन र आंशिक रूपमा प्रचारात्मक काम गर्ने तथा आंशिक रूपमा षड्यन्त्रमूलक गतिविधि गर्ने यसका उद्देश्य थिए । कार्ल शापर , हेनरिख ब्राउएर, जोसेफ मोल आदि त्यस संघका नेताहरू थिए ।

पेरिसको सट्टा लण्डन क्रान्तिकारी गतिविधिको केन्द्र बनेपछि लिग जर्मनहरूको मात्र नभएर क्रमशः अन्तर्राष्ट्रिय स्वरूपको बन्न थाल्यो । लण्डनमा लगभग सबै युरोपेली मुलुकका मानिसको जमघट हुने भएकाले खुला र गुप्त हुँदै संघमा विभिन्न मुलुकका मानिस संगठिन हुन थाले । खुला संगठनलाई “कम्युनिष्ट श्रमिकहरूको शैक्षिक संघ” भन्न थालियो र त्यसको सदस्यता पत्रमा “सबै मानिस भाइभाई हुन् भन्ने मुख–वाक्य लेख्न थालियो । १८४७ को अगष्टमा माक्र्स र एंगेल्सद्वारा ब्रुसेल्समा “जर्मन श्रमिक समाज ”को गठन गरियो । ती क्रान्तिकारी संगठनहरूमा “समता, भ्रातृत्व र न्याय ”का कुरा गरिन्थ्यो ।

सैद्धान्तिक स्पष्टता थिएन । मतभेदहरू प्रशस्त थिए ।

मुख्य रूपमा चारखाले मत थिए:

(१) काल्पनिक समाजवादी

(२) अराजकतावादी ।

(३) षड्यन्त्रमूलक गतिविधि मार्फत सत्ता कव्जागर्ने।

(४) समानतासहितको स्वतन्त्रता र आर्थिक अधिकारसहितको लोकतन्त्र हुनुपर्छ भन्ने ।

त्यसैबीच मार्क्स र एंगेल्स दुवैजना आ –आफ्नो स्वतन्त्र अध्ययनबाट वर्गीय अन्तरविरोधहरू भएको समाज निर्माणमा आर्थिक कारणहरूले निर्णायक आधारको काम गर्दछन् भन्ने निष्कर्षमा पुगेपछि त्यस मान्यताले लिगका धैरै नेताहरूलाई प्रभावित ग ¥यो । मार्क्स र एंगेल्सलाई लिगमा सामेल हुन बारम्बार अनुरोध गरियो । १८४७ को बसन्तमा जोसेफ मोलले मार्क्स र एंगेल्स दुवैलाई अलग–अलग भेटेर उहाँहरूको दृष्टिकोणसँग आपूmहरू सहमत भएको र लिगलाई पुरानो षड्यन्त्रमूलक गतिविधिको मान्यता राख्ने अवस्थाबाट मुक्त गरी सच्याएर अगाडि बढाउनको निम्ति त्यसमा उनीहरूको प्रवेश अनिवार्य भएकोमा जोड दिएपछि मार्क्स –एंगेल्स पनि लिगमा सामेल भए ।

१८४७ को ग्रिष्ममा लिगको प्रथम अधिवेशन भयो । त्यसमा मार्क्सको सहभागिता भएन । एंगेल्स लगायतका नेताहरूको सहभागितामा लिगलाई "कम्युनिष्ट लिग "को रूपमा पुनर्गठित गरियो । लिगको उद्देश्य "बुर्जुवा शासनको अन्त्य , सर्वहारा वर्गको शासन स्थापना , वर्गीय अन्तरविरोधमा आधारित पुरानो बुर्जुवा समाजको अन्त्य र वर्गबिनाको एवम् व्यक्तिगत सम्पत्तिबिनाको नयाँ समाज स्थापना गर्नु " रहेको तय गरियो । १८४७ नोबेम्बरको अन्त्य र डिसेम्बरको शुरुमा लिगको दोस्रो अधिवेशन भयो । त्यसमा मार्क्सको पनि सहभागिता रह्यो र उनले त्यहाँ लामो छलफल गरेर नयाँ सिद्धान्तको बारेमा स्पष्ट पार्ने काम गरे । लिगभित्र रहेका सबै अन्तरविरोध र आशंकाहरूको निवारण भयो । सर्वसम्मतिबाट नयाँ आधारभूत सिद्धान्तहरू स्वीकृत गरियो । "संसारका श्रमिकहरू एक होऔं " भन्ने लिगको मुख –वाक्य ९ःयततय० तय भयो । नयाँ सिद्धान्त अनुसार घोषणापत्र तयार गर्न मार्क्स र एंगेल्सलाई जिम्मा दिइयो । छिट्टै उक्त घोषणापत्र तयार भयो र १८४८ को फेब्रुअरीमा लण्डनबाट विश्व प्रसिद्ध कम्युनिष्ट घोषणा –पत्र प्रकाशित भयो । यसरी दस्तावेजीय रूपमा मार्क्सवाद र कम्युनिष्ट आन्दोलन अस्तित्वमा आयो ।


सन्दर्भ ग्रन्थ सूची

| लेखक | पुस्तक | प्रकाशक | प्रकाशन मिति |
|---|---|---|---|
| थ्योदरओइजेर्मान | द्वन्द्वात्मक भौतिकवाद और दर्शन का इतिहास | प्रगति प्रकाशन, मस्को | १९८४ इ |
| केन फिलिप | विश्व के महान् वैज्ञानिक | राजपाल, दिल्ली | १९९८ ई. |
| T. Vlasova | Marxist-Leninist Philosophy | Progress Publishers, Moscow | 1987 a.d. |
| F. Engels | On the history of the Communist League | Progress Publishers, Moscow | 1977 a.d. |
| भी. आइ. लेनिन | मार्क्सवादका तीन श्रोत र तीन संघटक अंग (संकलित रचना, नेपाली, भाग १) | प्रगति प्रकाशन, मस्को | १९८० ई. |
| जी. प्लेखानोव | काल्पनिक समाजवाद की धाराएं | प्रकाशन संस्थान, नयी दिल्ली | २००४ ई. |
| बेदुराम भुसाल | नेपालमा प्रचलित दार्शनिक चिन्तनहरू | नेपाल प्रज्ञा प्रतिष्ठान, काठमान्डौं | २०६८ विसं |
| बेदुराम भुसाल | मार्क्सवादी दर्शन | भुसाल प्रकाशन, काठमाण्डौं | २०६७ वि.सं. |
| T.I. Oizerman and A.S Bogomolov | Principles of the theory of the Historical proces in philosophy | Progress publishers, Moscow | 1982 a.d. |
| Bertrand Russell | History of western Philosophy | Routledge, New York, | 1999 a.d. |

# राजनीतिको मूल स्ट्रिमः समाजवाद

• डम्बर खतिवडा

संविधानतः नेपाल 'समाजवादउन्मुख' राज्य हो । नेपालका अधिकांश राजनीतिक दल सिद्धान्तले 'समाजवादी' छन् । व्यवहारमा सिद्धान्त प्रतिबिम्बित छ छैन, त्यो अर्कै कुरा । शब्दमा भने सबै एक से एक समाजवादी । एउटा भनाई छ – 'तपाई समाजवादी हुनुस् नहुनुस् तपाईको खुशी तर राजनीतिमा सफल हुन चाहनुहुन्छ भने कुनै न कुनै प्रकारले समाजवाद जप्न कहिल्यै नछोडनुस् , किनकी समाजवाद राजनीतिको बजारमा सबैभन्दा सजिलोगरी बिक्ने मालवस्तु हो । ' एउटा कोणबाट हेर्दा आज नेपालको अवस्था यस्तै छ ।

नेपाली काङ्ग्रेस – प्रजातान्त्रिक समाजवादी । सत्तारुढ नेकपादेखि माले , मसाल, नेमकिपा, बैद्य र विद्रोही विप्लवसम्म मार्क्सवादी –लेनिनवादी–माओवादी समाजवादी । यहाँसम्म कि बिल्कुल नयाँ पुस्ताको राजनीतिक पहलकदमी विवेकशील नेपाली दलले 'स्वतन्त्रता, समानता र भातृत्वको गतिशील सन्तुलनबाट मानवतावादको प्रवर्द्धन गर्ने' धारणा राख्दछ । शब्दमा समाजवाद नभनिए पनि अर्थ र मर्मको दृष्टिकोणले यो 'समाजवादी दर्शन' नै हो ।

यतिधेरै समाजवादीहरुको बीचमा भर्खरै समाजवादलाई नै विचार , सिद्धान्त, दर्शन र मूल आदर्श बनाएर समाजवादी पार्टी , नेपाल निर्माण भएको छ । घोषित रुपमा आफूलाई समाजवादी नभन्ने दुईवटा मात्र दल देखिन्छन् नेपालमा – राप्रपा र साझा विवेकशील पार्टी । राप्रपाले सम्वर्द्धनवादलाई आफ्नो राजनीतिक दर्शन बनाएको छ । साझाले परोपकारी लोकतन्त्रमा आधारित पुँजीवादलाई ।

अर्को कोणबाट हेर्दा समाजवादप्रतिको यो मोह एक सकारात्मक परिघटना हो । अंग्रेजीमा एउटा भनाई छ– 'एक्जिस्टेन्स कम्स बिफोर इसेन्स । ' यसको सामान्य अर्थ भनेको विचारलाई वस्तुले निर्धारण गर्दछ । यसलाई राजनीतिमा भन्न सकिन्छ- कुनै पनि राजनीतिक अवधारणा यथार्थमा परिणत हुनु अघि सघन विमर्शमा हुनुपर्दछ । समाजवाद अधिकांश पार्टीहरुको एजेण्डा बन्दै जानु नेपाल निकट भविष्यमा समाजवादतिर प्रवृत हुने लक्षण पनि हो । जसरी हिजो गणतन्त्र , लोकतन्त्र, संघीयता विमर्शमा थिए , आज यथार्थमा परिणत भए, त्यसरी नै आज समाजवाद जुनस्तरको छलफलमा छ , त्यो भविष्यमा अवश्य व्यवहारमा परिणत हुनेछ ।

तर, कुन समाजवाद रु कस्तो समाजवाद रु किन समाजवाद रु कसरी समाजवाद रु आदि प्रश्न अझै अनुत्तरित छन । यी सबै दलहरुले भनेको समाजवाद एउटै हो कि फरक(फरक हुन रु एउटै हो भने एउटै उद्देश्यका लागि यतिका धेरै दल किन चाहियो रु फरक(फरक हुन भने समान शब्दाबलीले सृजना गर्ने भ्रम वा अन्यौलबाट कसरी मुक्ति पाउने रु के आधारमा मतदाताले यी दलका समाजवादी मान्यताको फरक छुट्याउने रु यी प्रश्नमा प्रवेश गर्नु अघि सम्भवत् राजनीतिक दर्शनहरुको सामान्य ज्ञान आवश्यक पर्दछ ।

राजनीतिक दर्शन मूलतः ११ प्रकारका देखिन्छन् । सम्बर्द्धनवाद, उदारवाद, साम्यवाद, समाजवाद, राष्ट्रवाद, फासीवाद, धार्मिक कट्टरतावाद , संघवाद, जैविकतावाद, अराजकतावाद र महिलावाद ।

सम्बर्द्धनवादको सारतत्व 'समाजको परम्परागत मौलिक चरित्रको रक्षा र रुढीवादी नैतिक मूल्यको संरक्षण' हो । मूलतः यो थोमस हब्सको चिन्तनमा आधारित राजनीतिक दर्शन हो । बेलायतको टोरी

यो विचारधाराको दृष्टिकोणबाट ऐतिहासिक दल हो । अमेरिकाका रिपब्लिकनहरु राजतन्त्र त मान्दैनन् अरु विषयमा कन्जरर्भेटिभ नै हुन्छन् ।
सम्बर्द्धनवाद कुनै क्रान्तिकारी विचारधारा हैन । क्रान्तिबाट डराएका कुलिनहरुको आत्मरक्षाको कवच हो । नेपालमा राप्रपा विशेषतः कमल थापा समूहले यो विचारधाराको प्रतिनिधित्व गर्दछ ।

फ्रि म्यान ९ स्वतन्त्र व्यक्ति ० र फ्रि मार्केट ९ स्वतन्त्र बजार० अर्थात् 'स्वतन्त्रता' उदारवादको सारतत्व हो । यो विचारधारा जोह्न लकको दर्शन र बेलायती गौरवमय क्रान्तिबाट अनुप्रेरित भएको हो । बेलायतको ह्वीग पार्टी जसको नाम फेरेर 'लिवरल डेमोक्र्याट्स ' बनाइयो, यो विचारधाराको मुख्य ऐतिहासिक दल हो । हुनतः नेपाली कांग्रेसले आफूलाई प्रजातान्त्रिक समाजवादी नै भन्न रुचाउँछ तर , सन् १९९० यताका उसको सम्पूर्ण व्यवहारहरु उदारवादमा आधारित छन् ।

साम्यवादले 'समानता' लाई मुख्य तत्व मान्दछ । यो मार्क्सवादको लेनिनवादी धारा हो । निजी सम्पति, राज्य, वर्ग, बजार र अतिरिक्त मूल्य ९मुनाफा० को अन्त्य नै मानवमुक्ति हो भन्ने सोच साम्यवाद हो । प्रारम्भमा यो समाजवादी विचारधारा भित्रकै एक हाँगो थियो । सन् १९१७ पछि जब लेनिनले आफ्नो पार्टीको नाम 'रुसी सामाजिक जनवादी मजदुर पार्टी ' फेरेर 'कम्युनिष्ट पार्टी' बनाए, समाजवादी अन्तर्राष्ट्रिय परित्याग गरी, कम्युनिष्ट अन्तर्राष्ट्रिय 'कोमिन्टर्न' गठन गरे, लोकतन्त्रको साटो सर्वहारा राज्य र सोभियत प्रणालीका नाममा एकदलीय प्रणाली अबलम्बन गरे, साम्यवाद समाजवादी आन्दोलनबाट फरक भयो ।

नेपालमा नेकपाका सबै घटक वा समूह यही चिन्तनबाट जन्मिएका हुन् । तर , आज उनीहरु चरम वैचारिक संकटबीच छन् । एकातिर मार्क्सवाद, लेनिनवाद, स्टालिनवाद, माओवाद, टिटो, क्यास्त्रो र किम इल सुंगको विरासतबाट आफूलाई स्वतन्त्र र मुक्त घोषण गर्न पनि सक्दैनन् अर्कोतिर आफूलाई लोकतन्त्रवादी प्रमाणित गर्ने हज्जार मिथ्या प्रयास पनि गरिरहन्छन् । जसरी नेपाली कांग्रेस सैद्धान्तिक औपचारिकताले प्रजातान्त्रिक समाजवादी तर व्यवहारले उदारवादी दल हो, ठीक त्यस्तै नेकपाका घटकहरु औपचारिक सिद्धान्तले साम्यवादी तर व्यवहारले सामाजिक फासीवादी समूहहरु हुन् ।

राष्ट्रवादले 'जन्म, जन्मस्थान वा भाषिक सांस्कृतिक मनोविज्ञानका कारण एकै प्रकारका भएका मानव समूहको आत्मगौरव' लाई मुख्य तत्व मान्दछ । फ्रान्स , जर्मनी र इटलीको एकीकरण युद्धको समयमा यो विचारधारा जन्मिएको थियो । यो मूलतः हिगेलको दर्शनमा आधारित सोच हो । यसले विवेकपूर्ण कार्यका लागि जनसहमतिको आवश्यकता नहुने मान्यता राख्दछ । नेपालमा राष्ट्रवादलाई मात्र मुख्य दर्शन बनाएको कुनै दल छैनन् । दलहरुले आफ्नो राजनीतिक सिद्धान्तमा यो 'कम्पोनेन्ट' लाई आ(आफ्नो तरिकाले समावेश गरेको छन् ।

फासीवाद राष्ट्रवादी चिन्तनको अतिवादी धार हो । मूलतः यो नित्सेको दर्शनमा आधारित छ । फासीवादले 'विवेकपूर्ण शासन र राज्यको सर्वोपरिता' मा विश्वास गर्दछ । 'श्रेष्ठ जातिसंग श्रेष्ठ ज्ञान र विवेक हुन्छ , श्रेष्ठ विवेकले श्रेष्ठ राज्य, श्रेष्ठ साम्राज्य र श्रेष्ठ सभ्यता निर्माण गर्छ' भन्ने सोच नै मूलतः फासीवाद हो । विनिटो मुसोलिनीको फासिष्ट पार्टी र हिटलरको नाजी पार्टी यस विचारधाराका मुख्य दल हुन् । नेपालमा फासीवादलाई औपचारिक दर्शन बनाएको कुनै पार्टी नभए पनि बेलाबेला 'एक्स्ट्रिम' राष्ट्रवादीहरु देखिने गरेका छन् , त्यसको स्रोत फासीवाद नै हो ।

धार्मिक कट्टरतावादले 'निश्चित धार्मिक भावनाबाट अभिप्रेरित राज्य र समाज नैतिकरुपमा बलियो हुन्छ, विपरित धर्मसंगको प्रतिरोधबिना धर्म रक्षा र

विस्तार गर्न सकिन्न । तसर्थ धर्मयुद्ध ९जेहाद० स्वभाविक र जायज हो ' भन्ने मान्यता राख्दछ । सबै धर्मालम्बीहरुमा यस्ता सोच पाइन्छन् । मुस्लिम ब्रदर हुड , तालेवान, बोकोहराम, अल काइदाजस्ता मुस्लिम संगठनहरु यही दर्शनका उपज हुन् । युरोपमा क्रिश्चियन डेमोक्र्याटस पार्टीहरु यही सोचबाट उदित भएका थिए , पछि सम्बर्धनवादमा रुपान्तरण गरे । भारतमा शिवसेनालाई प्रारम्भमा यस्तै दल मानिन्थ्यो , अहिले मराठी राष्ट्रवादतिर अभिप्रेरित छ । नेपालमा भने धार्मिक कट्टरतावादी दल अहिलेसम्म देखिएको छैन । यो सुखद पक्ष हो ।

संघवादी चिन्तनमा 'देश फरक राष्ट्रियताहरुको संयुक्त राजनीतिक एकाई हो । समरुप राज्य असम्भवप्राय छ । जाति , भाषा, धर्म, संस्कृति, इतिहास, भुगोल र मनोविज्ञानको भिन्नता स्वभाविक हो । राज्य बहुसांस्कृतिक अस्तित्व हो । जातीय , भाषिक र सांस्कृतिक समूहहरुको कूलयोग देश हो । राज्य त्यसको संरचना र प्रणाली । तसर्थ , स्वशासन, साझेदारी शासन , स्वायक्तता, समावेशिता र आत्मनिर्णयको अधिकार जरुरी हुन्छ' भन्ने सोच राखिन्छन् । मूलतः यो शक्ति अकेन्द्रणको दर्शनमा आधारित छ । राजनीतिमा संघवादी चिन्तन निक्कै पुरानो हो । तर, आधुनिक भनिएको पोष्टमोर्डानिज्मले संघवादलाई समर्थन गर्दछ । मूलतः महाआख्यानको अन्त्य , केन्द्रभंग र बहुकेन्द्रको स्थापनाजस्ता दार्शनिक सोचले संघवादी राजनीतिक दर्शनलाई पुष्टि गर्दछ ।

जैविकतावाद भने प्रकृतिवादी दर्शनबाट प्रेरित विचारधारा हो । यसले सामाजिक बेथिति र मानवीय दुःखको मुख्य कारण प्रकृति र मान्छेको सम्बन्धमा हुने असन्तुलनलाई मान्दछ । वातारणीय विनाश , तापमान वृद्धि , जलवायु परिवर्तन, दीगो विकास आदि अवधारणा यस दर्शनसँग जोडिएका छन् । युरोपियन ग्रिन पार्टीहरु यस विचारधारालाई अबलम्बन गर्ने राजनीतिक दल हुन् । नेपालमा यही दर्शनबाट प्रेरित भएर 'हरियाली पार्टी' बनेको थियो । अहिले पनि 'नेपाल ग्रिन पार्टी' नामको एउटा सानो समूह छँदैछ ।

अराजकतावादले 'आधिकारिकताको विघठन र स्वस्फूर्त सहकारी संगठन ' मा जोड दिन्छ । यस विचारमा 'निजी सम्पति', 'वैवाहिक संस्था', 'राज्य' र 'धार्मिक सम्प्रदाय ' प्राधिकारका स्रोत हुन् । यिनीहरुको अन्त्यपछि मात्र मानव समाज खुशी र सुखी हुन सक्दछ । यो विचारधारा मिखायल बाकुनिन, पिटर क्रोपटकिनजस्ता दार्शनिकहरुले अगाडि बढाएका थिए । घोषित रुपमा आफूलाई अराजकतावादी बताउने राजनीतिज्ञ प्रुधो थिए । नेपालमा यो धारको पनि कुनै दल छैन ।

महिलावाद लैङ्गिक प्रश्नहरुको राजनीतिक अभिव्यक्ति हो । महिला मताधिकार , महिला शिक्षा, सम्पतिमा महिला अधिकार , वंश परम्परा, विवाह, बसाईसराई तथा अन्तर्देशीय विवाहमा महिला नागरिकताको प्रश्न, प्रजनन स्वास्थ्य तथा गर्भपतनको अधिकार, रोजगारीमा महिला आरक्षण र सुरक्षा, महिला कार्यघण्टा र महिलाजन्य बिदा तथा सुविधाहरु , महिला विरोधी प्रथा र अन्धविश्वास विरुद्धको सामाजिक जागरण , प्रेम विवाह र सम्बन्धविच्छेदको अधिकार , स्त्रिभ्रुण हत्या विरुद्धको आन्दोलन र गर्भसुरक्षा, राजनीतिमा महिला सहभागिता आदि महिलावादी राजनीतिका मुख्य एजेण्डा हुन् ।

समाजवादको मौलिकता भने 'समानता र स्वतन्त्रता अभिभाज्य छन् ', स्वतन्त्रताको अभिव्यक्तिका रुपमा 'लोकतन्त्र' र समानताको अभिव्यक्तिका रुपमा 'समाजवाद' अक्षुण हुन्छन् भन्ने सोचबाट निर्मित छ । यसले उदारवाद र साम्यवादको प्रतिद्वन्दितालाई कृत्रिम र अर्थहीन मान्दछ । व्यक्ति र समाज अविभाज्य छन् । व्यक्ति बिना समाज र समाज बिना व्यक्ति हुँदैन

। तसर्थ , व्यक्तिवाद र सामुहिकताबीचको प्रतिद्वन्द्विता अर्थहीन छ ।

आर्थिक हैसियत बिना राजनीतिक स्वतन्त्रता प्राप्त हुँदैन । राजनीति स्वतन्त्रता बिना आर्थिक हैसियत प्राप्त हुँदैन । तसर्थ , खुशी र सुखी मानव समाज निर्माण गर्न आर्थिक समानता र राजनीतिक स्वतन्त्रता अभिभाज्य छन् । राजनीतिक स्वतन्त्रताका लागि लोकतन्त्र र आर्थिक अवसरका लागि सामाजिक न्यायसँगसँगै लागू हुनु पर्दछ । 'लोकतन्त्र भनेको अरु केही हैन , त्यो समाजवादमा जाने बाटो हो, समाजवाद भनेको अरु केही हैन, त्यो अझ उन्नतस्तरको लोकतन्त्र' हो भन्ने मान्यता नै समाजवादी दर्शनको सार हो ।

उदारवादले खुल्ला बजार , साम्यवादले बजार अर्थतन्त्रको अन्त्य र समाजवादले सामाजिक बजार अर्थतन्त्रको पक्षपोषण गर्दछ । बेलायती छापाहरुका 'सोसलिष्ट' शब्दको प्रयोग सन् १८२७ तिरबाट शुरुवात भएको थियो । सन् १८३० पछि बेलायतमा रबर्ट ओवेन र फ्रान्समा सेन्ट साइमनका अनुयायीले आफूलाई औपचारिक रुपमा 'सोसलिष्ट' घोषित गरे । 'सोसलिष्ट' शब्द ल्याटिन भाषाको 'सोसियर' बाट बनेको विश्वास गरिन्छ , जसको,अर्थ हुन्छ–संयुक्त वा साझेदारी । 'प्रकृतिमा विद्यमान फरक प्रवर्गहरुले एकअर्कालाई निषेध हैन, अस्तित्वका लागि साझेदारी गरिरहेका हुन्छन ' भन्ने चिन्तनलाई समाजवाद भनिन्छ ।

सन् १८६३ मा फर्डिनान्ड लासालको नेतृत्वमा गठन भएको 'जनरल जर्मन वर्कर्स एशोसिएसन ' विश्वको पहिलो समाजवादी राजनीतिक संगठन थियो । सन् १८६९ कार्ल लिब्नेख्त र अगष्ट बेबेलले 'डेमोक्र्याटिक बकर्स पार्टी अफ जर्मनी ' गठन गरे । सन् १८७५ मा यी दुई पार्टीहरु मिलेर 'सोसलिष्ट बर्कस पार्टी अफ जर्मनी ' बन्यो । यो पार्टीको कार्यक्रमलाई 'गोथा कार्यक्रम ' भनिन्छ । कार्ल मार्क्सले यसको खण्डन गर्दै 'गोथा कार्यक्रमको आलोचना' लेखेका थिए ।

यही विन्दूबाट विश्व राजनीतिमा 'कम्युनिष्ट' र 'सोसलिष्ट' धार फरक हुन थालेको हो । सन् १९१७ को रुसी अक्टोबर क्रान्तिपछि एकदलीय प्रणाली अपनाइयो । समाजवादीहरुमा एकदलीय प्रणालीको कल्पनासम्म थिएन । लेनिनसँग सोसलिष्टहरुको घनघोर वैचारिक संघर्ष भयो । विशेषतः क्रान्तिकारी समाजवादी धारबाट नेतृ रोजा लक्जेम्बर्गले लेनिनको चर्को आलोचना गरिन् । संशोधनवादी धारबाट कार्ल काउत्स्कीले लेनिनको उत्तिकै आलोचना गरे ।

तर, लेनिनले मानेन् । 'सोसलिष्ट इन्टरनेशनल ' परित्याग गरी कम्युनिष्ट पार्टीहरुको विश्व संगठन 'कोमिन्टर्न' बनाए । यो घटना कम्युनिष्ट र सोसलिष्टहरुको विभाजनको निर्णायक मोड थियो । लेनिनवादीहरुले विश्वभरि कम्युनिष्ट नाम प्रयोग गरे । समाजवादी धारमा भने विभिन्न नाम प्रयोग गर्ने प्रचलन थियो । जस्तै , 'लेवर पार्टी', 'बकर्स पार्टी', 'सोसलिष्ट पार्टी ' 'लेफ्ट–डेमोक्र्याट पार्टी ', 'सोसलिष्ट रिभोल्यूसनरी पार्टी ', 'सोसल–डेमोक्र्याट पार्टी' 'सोसलिष्ट युनिटी एण्ड सोलिडारिटी पार्टी ' 'लिवरल सोसलिष्ट पार्टी' आदि ।

अबको युगमा राजनीतिक विचारधाराहरु एकअर्काबाट स्वतन्त्र र मुक्त छैनन् । हरेक राजनीतिक दर्शन आफैमा राजनीतिक आन्दोलन बन्न सजिलो छैन । जस्तो कि जैविकतावाद युरोपेली ग्रिन पार्टीका रुपमा भिन्नै राजनीतिक आन्दोलन बन्यो । तर , पछिल्लो चरणमा अरु विचारधाराका दलहरुले पनि जैविकतावादी चिन्तनलाई आफूमा समाहित गरे । महिलावाद बेलायती उदारवादी आन्दोलनको एक अभिन्न अंग थियो, कन्जर्भेटिभहरु त्यसको विरुद्धमा थिए । महिलावादी दर्शनमा आधारित भएर भिन्नै

राजनीतिक दल बनाउने प्रयास पनि विश्वमा नभएका हैनन् तर ती प्रयास सफल भएनन् ।

एक्काइशौं शताब्दिको नेपालका लागि राजनीतिक विचारधारा निर्माण गर्दा सम्बर्द्धनवाद , धार्मिक कटट्रतावाद, फासीवाद र अराजकतावाद बिल्कुल असान्दर्भिक देखिन्छन् । राष्ट्रवादलाई नयाँ अर्थमा विनिर्माण गर्नुपर्दछ । अन्यथा , त्यसले सामाजिक फासीवादको बाटो समाउने खतरा छ । साम्यवादको विश्वसंकटपछि नेपालका कम्युनिष्टहरुले राष्ट्रवादलाई आधार बनाएर अस्तित्व रक्षाको प्रयास गरेको देखिन्छ । दर्शनमा साम्यवाद, अर्थनीतिमा नवउदारवाद , नारामा समाजवाद र राजनीतिमा राष्ट्रवादको समिश्रण भएर प्रकारान्तले नेपालका कम्युनिष्टहरु 'सामाजिक फासीवादी' बन्न पुगेका छन् ।

नेपालमा जैविकतावाद , महिलावाद, संघवाद र समाजवादको एक विशिष्ट संश्रय बन्न जरुरी छ । त्यो सकारात्मक विकासक्रम हुनेछ । भर्खरै घोषणा भएको समाजवादी पार्टीले आफ्नो सिद्धान्तलाई 'समुन्नत संघीय समाजवाद ' भनेर त्यसको संकेत गरेको छ । मधेसी , जनजातिलगायतका सीमान्तकृत जनसमुदायका आन्दोलनहरु समाजवादी पार्टीमा एकीकृत हुनु मूलतः संघवाद र समाजवादको विशिष्ट संश्रय हो । यो घटनासंगै नेपालको राजनीति उदारवाद , समाजवाद र साम्यवादको त्रिकोणात्मक संघर्षमा अभिव्यक्त हुने निश्चितप्राय छ ।
हुनतः नेपाली कांग्रेस र नेकपाले पनि आफूलाई समाजवादी नै भन्दछन् । यसर्थ कांग्रेस, कम्युनिष्ट र सोसलिष्टबीचको भिन्नता छुट्याउन मतदातालाई त्यति सजिलो हुनेछैन । यो भिन्नता अब व्यवहारिक प्रयोजनको प्रश्न बन्ने छ । सन् १९९० यता कांग्रेसले अबलम्बन गरेका नवउदारवादी आर्थिक नीतिहरु पछि आफूलाई सोसलिष्ट भन्ने नैतिक अधिकार तथा व्यवहारिक प्रयोजन खासै रहँदैन । माथि चर्चा भएझैं नेकपा भने एक भयानक वैचारिक द्विविधाको तासे महल हो । यो सोभियत संघ , पूर्वी युरोप वा पश्चिम बंगालझैं कतिखेर गर्लाम्मगुर्लुम्म ढल्छ , यसै भन्न सकिन्न ।

राजनीतिक दर्शन बीच समाजवादी दर्शनको भिन्नता जस्तै समाजवादी धारभित्रकै हाँगाबिँगाहरुको चर्चा उत्तिकै आवश्यक छ । समाजवादी धारमा मुख्यतः युटोपियन समाजवाद , फेवियन समाजवाद, प्रजातान्त्रिक समाजवाद, उदार समाजवाद, सामाजिक लोकतन्त्र , ह्युमानिटारियन समाजवाद, स्केडिनेवियन समाजवाद , गान्धियन समाजवाद, सेन्डिकालिज्मजस्ता धारहरु छन् । त्यसो त हिटलरको नाजी पार्टीले पनि 'राष्ट्रिय समाजवाद' भन्ने गर्दथ्यो ।

युटोपियन समाजवाद– समाजवादको एक प्रारम्भिक आर्दशवादी तथा काल्पनिक चिन्तन थियो । थोमस मूरको किताब 'युटोपिया' बाट यो नाम लिइएको हो । थोमस मुर , तमोजा काम्पानेल्ला , रवर्ट ओवेन , सैन्ट साइमन , चार्ल्स फुरियर यो धारका मुख्य चिन्तक थिए ।

फेवियन समाजवाद – समाजवादको बेलायती हाँगा हो । जर्ज बनार्ड शाँजस्ता चर्चित लेखकहरु यो अभियानमा जोडिएका थिए । मूलतः यो धारले क्रान्तिकारी आन्दोलनबाट हुने मानवीय क्षतिलाई रोकी शान्तिपूर्ण आन्दोलनबाटै समाजवादी आन्दोलनका लक्ष्य पुरा हुनुपर्ने धारणा राख्दथ्यो ।

प्रजातान्त्रिक समाजवाद – मार्क्सवादमाथि एक संशोधनवादी आलोचना थियो । जर्मन संशोधनवादीहरु एडर्वट बर्नस्टिन र कार्ल काउत्स्की यो धारका नेता थिए । उनीहरुले सामान्य संसदीय प्रणालीको अभ्यासबाटै समाजवाद संभव हुने धारणा राख्दथे ।

उदार समाजवाद – यो समाजवादी चिन्तनको इटालियन धारा हो । कार्लो रोसेली यो धाराका

मुख्य चिन्तक थिए । यो चिन्तनमा लिवरल झ्यालुहरु राजनीतिक औजारहरु हुन र त्यसको उद्देश्य स्वतन्त्रता र न्याय हो । समानता एक अमूर्त शब्द भएको हुँदा त्यसको ठाउँमा समाजवादको आदर्श चिन्तन स्वतन्त्रता र न्याय हुनुपर्दछ भन्ने सोचलाई उदार समाजवाद भनिन्छ ।

सामाजिक लोकतन्त्र – समाजवादको एक क्रान्तिकारी हाँगो हो । मूलतः यसले रेडिकल डेमोक्रेसीको कुरा गर्दछ । यो धारको आर्दश चिन्तक रोजा लम्जेम्बर्गलाई मान्ने गरिन्छ । हाबर्ट माक्र्युज, जाँ पाल सार्त्र, सिमोन द बाउभिर तथा फ्रेकफर्ट स्कुल अफ थटका अनुयायीहरुले ‘नववामपन्थी’ दृष्टिकोणबाट यो धारलाई परिमार्जित गरेका थिए । यो धारले मार्क्सवाद र उदार लोकतन्त्र दुवैका कमजोरहरुको चित्रण र समाधानका विन्दूहरु सिफारिस गर्दछ ।

ह्युमानिटारियन समाजवाद – यो समाजवादको अमेरिकी हाँगो हो । यसले समाजवाद र लोककल्याणकारी राज्यको अवधारणालाई मिश्रण गरी सामाजिक न्याय र सामाजिक सुरक्षाको पक्षपोषण गर्दछ । अमेरिकी समाजवादी पार्टी खासै प्रभावशाली हुन नसकेपछि उनीहरु डेमोक्रेटिक पार्टी भित्रैबाट यस्ता सोचहरु अगाडि बढाउँदछन् । अहिलेका चर्चित डेमोक्र्याटिक सिनेटर बर्नी स्यान्डर्स यही धारका समाजवादी हुन ।

स्केन्डिनेवियन समाजवाद – यो मूलतः नार्डिक शासन प्रणालीलाई आर्दश मान्ने समाजवादी धार हो । यसले प्रत्यक्ष लोकतन्त्र , गैरपदसोपानीय समाज र संस्कृति , मध्यम वर्गको विस्तारमार्फत् आर्थिक समानताको प्रत्याभूति , कोक्रोदेखि चिहानसम्म राज्य नागरिकसँगै हुने अवधारणालाई जोड दिन्छ ।

गान्धीयन समाजवाद – समाजवादको भारतीय संस्करण हो । गान्धीबाट प्रेरित भारतीय कांग्रेसभित्रका समाजवादीहरु मूलतः जयप्रकाश नारायण र डा। राममनोहर लोहियाले यो धारलाई अभिप्रेरित गरे । भारतमा यो धारका थुप्रै राजनीतिक दल छन् । नारायणको ‘सम्पूर्ण क्रान्ति’ र लोहियाको ‘सप्त क्रान्ति’ यसका मानक मान्यता हुन् । भारतीय जनता पार्टीका संस्थापक नेता अटल बिहारी बाजपेयीले एकपटक भनेका थिए , ‘भारतमा समाजवादको कुरा गर्नेहरुले यदि गान्धीयन समाजवादको कुरा गरेको हो भने त्यसमा विजेपीको कुनै आपत्ति छैन ।’

सेन्डिकालिज्म– समाजवादको फ्रान्सेली धारा हो । यो धारले ट्रेड युनियन आन्दोलनमार्फत् उद्योगधन्दाहरुको स्वामित्व कामदारहरुले लिने , कर्पोटेरिज्मलाई समाप्त गर्ने , ट्रेड युनियनहरु राजनीतिक दलहरुदेखि स्वतन्त्र हुनु पर्नेआदि धारणा राख्दछ ।

नेपालको सन्दर्भमा समाजवादको कुरा गर्दा यी कुनै पनि धारलाई जस्ताको त्यस्तै पछयाउनु हुँदैन । नेपालको सामाजिक तथा ऐतिहासिक विकासक्रम अनुरुप निम्न विशेषताहरु भएको समाजवाद ‘समुन्नत संघीय समाजवाद’ हुन सक्छ ।

एक– लोकतन्त्रलाई एक आर्दश राजनीतिक प्रणालीका रुपमा स्वीकार गर्ने तर संसदीय प्रणालीमा मात्र सीमित नहुने । प्रत्यक्ष , सहभागितामुलक, समावेशी र समानुपातिक अवधारणाहरुमा आधारित लोकतन्त्रको विकास गर्ने । त्यसका लागि राज्यका सबै तहमा प्रत्यक्ष निर्वचित कार्यकारी , पूर्ण समानुपातिक संसदको व्यवस्था गर्ने । राजनीतिक दलहरुभित्र प्रत्यक्ष तथा समानुपातिक निर्वाचन र प्राइमर निर्वाचन हुनै पर्ने कानुनी व्यवस्था गर्ने ।

दुई– निजी, राजकीय, सहकारी र सामुदायिक स्वामित्वबीच प्रष्ट क्षेत्रगत विभाजन हुने समन्वयात्मक अर्थतन्त्र अर्थात् सामाजिक बजारअर्थतन्त्रको ढाँचा अबलम्बन गर्ने । सुरक्षा ,

पूर्वाधार विकास, शिक्षा, स्वास्थ्य, सामाजिक सुरक्षा, सार्वजिनक अवसरको वितरणआदि सरकारी स्वामित्वमा ल्याउँने । ठूला उद्यमशील अर्थतन्त्रका क्षेत्र निजीलाई दिने । स्थानीय अर्थतन्त्र सहकारीलाई दिने । जंगल , सार्वजनिक जमिन, सामुदायिक सेवा आदि सामुदायिक क्षेत्रलाई व्यवस्थापन गर्न दिने ।

तीन– समाजवादलाई गरिबीको समान वितरणको रुपमा हैन, समृद्धिको समन्यायिक वितरणका रुपमा बुझ्ने र सोही बमोजिमको आर्थिक नीति अबलम्बन गर्ने । आर्थिक बृद्धि , समन्यायिक वितरण, दीगो विकास र आत्मिक खुशीमा आधारित चारआयामिक समातामुलक समृद्धि लागु गर्ने ।

चार– संघीयतालाई पहिचान, स्वशासन, स्वायत्तता, साझेदारी, सहभागिता, आत्मनिर्णय र आत्मसम्मानको आधार हुने गरी पुनव्र्यवस्थापन गर्ने । बहुभाषिक नीति अनुरुप सरकारी कामकाज र प्रादेशिक भाषाहरुको व्यवस्थापन गर्ने । यसमा लागि प्रदेशहरुको पुनर्सीमाङ्कन गर्ने ।

पाँच– सुशासन र सदाचारलाई समाजवादको आधारशीला बनाउँने । कर्मचारीतन्त्र र अख्तियारको पुनर्गठन गर्ने । निर्वाचन प्रणाली परिवर्तन गर्ने । प्रणाली र कानुनी व्यवस्थका आधारमा राजनीतिक लागत र निर्वाचन खर्चको पारदर्शीता कायम गर्नु । राजनीतिक दलहरुको खर्चका लागि स्टेट फन्डिङ्ग गर्ने । वास्तविक कारोवारमा आधारित कर प्रणाली लागू गर्ने । चुस्त र मितव्ययी सरकारको अवधारणा मार्फत् चालु खर्च ४५ भन्दा मुनी झार्ने र पुँजीगत खर्चमा तीव्र बृद्धि गर्ने ।

नेपालमा यदि कसैले समाजवादको कुरा गर्दछ भने त्यसको प्रस्थानविन्दू यिनै हुन् । यी प्रश्नमा प्रवेश नगर्ने तर समाजवादको रटान नछोड्ने तरिका राजनीतिक झुठ र बेइमानी बाहेक केही हैन ।

**समाजवाद र साम्यवाद सम्बन्धी आधारभूत ज्ञान**

समाजवाद एउटा सामाजिक व्यवस्था , जसले समाजवादी क्रान्तिको फलस्वरुप जन्म लिन्छ , साम्यवादी सामाजिक –आर्थिक संरचनाको पहिलो अवस्था । समाजवाद उत्पादनका साधनहरुको सामाजिक स्वामित्वमा आधारित हुन्छ , जसले शोसक वर्गहरु तथा मानिसद्वारा मानिसको शोषणलाई वर्जित गर्दछ र समाजमा मित्रताको भावनाले युक्त सहयोग र पारस्परिक साहयताको सम्बन्ध स्थापित गर्दछ । समाजअन्तर्गत हरेकप्रकारको सामाजिक उत्पीडन , जातिहरुको असमानता, शहर तथा गाउँ , मानसिक तथा शारीरिक श्रमको बीचमा अन्तर्विरोधहरुलाई मेटाइदिन्छ (यद्यपि तिनीहरुको बीचमा अझै पनि धेरै अन्तर रहिरन्छन्) ।

समाजवादी समाज दुई मैत्रीपूर्ण वर्गहरु – मजदूरहरु र किसानहरु – तथा बुद्धिजीवी समुदायजस्ता सामाजिक समूहबाट बन्दछ । वर्गहरु तथा सामाजिक समूहहरुको बीचमा अन्तर निरन्तर मेटिंदै जान्छन् । सम्पूर्ण सामाजिक समूहहरुका सम्बन्धहरुको विशेषता तिनीहरुको सामाजिक – राजनीतिक तथा विचारधारात्मक एकता तथा समाजवादी जातिहरुका सम्बन्धहरुको विशेषता मित्रता, सहयोग र बन्धुत्वको पारस्परिक साहयता हो ।

सामाजिक स्वामित्वको आधारमा समाजवादअन्तर्गत अर्थव्यवस्था तथा सम्पूर्ण समाजको नियोजित विकास हुन्छ । सामाजिक उत्पादनको विकासबाट जनताको बढ्दो भौतिक तथा सांस्कृतिक आवश्यकताको बढीभन्दा बढी मात्रामा पूर्ति हुन्छ । सामाजिक जीवन व्यापक जनवादमा आधारित हुन्छ, श्रमजीवीहरुलाई सक्रिय रुपमा सामाजिक जीवनमा भाग लिनको लागि आकर्षित गरिन्छ । समाजवादी –जनवादले श्रम ,

विश्राम, स्वास्थ्यरक्षा, वृद्धावस्थामा सुरक्षा, आवास, निःशुल्क शिक्षा , कानूनको अगाडि नागरिकहरुको समानता, आदिजस्ता सामाजिक अधिकार तथा भाषण, अन्तःकरण, प्रेश, सभाहरु, सम्मेलनहरु, जुलुश, राजकीय तथा सामाजिक कार्यहरुको संचालनमा सहभागिताजस्ता राजनीतिक स्वतन्त्रताहरु सुनिश्चित गर्दछ ।
समाजवादअन्तर्गत उत्पादक शक्तिहरु अझै त्यति विकसित हुँदैनन् , जसबाट उपजहरुको प्रचुरता सुनिश्चित हुनसकोस् र श्रम अझै समाजका सम्पूर्ण सदस्यहरुको लागि जीवन्त आवश्यकता बन्दैन । त्यसकारण भौतिक सम्पदाको वितरण यो सिद्धान्तानुसार गरिन्छ- हरेकबाट उसको क्षमतानुसार, हरेकलाई उसको श्रमानुसार ।
समाजवादको अझ बढी परिष्कारको प्रक्रियामा साम्यवादी संरचनाको उच्चतम् अवस्थामा विस्तार–विस्तार संक्रणको लागि आवश्यक पूर्वाधारहरुको निर्माण हुन्छ । समाजवादअन्र्तत युद्ध शुरु गर्नमा अभिरुचि राख्ने कुनै पनि शक्तिहरु हुँदैनन् – समाजवाद र शान्ति अभिन्न छन् । समाजवाद हतियारहरुको प्रतिस्पर्धाको विरुद्ध, शान्ति र सुरक्षाको लागि नाभिकीय युद्धलाई रोक्नको लागि संघर्षको एउटा किल्ला हो ।

## समाजवाद तथा साम्यवाद

साम्यावदी सामाजिक–आर्थिक संरचनाका दुई चरण – निम्न र उच्च चरण । यिनीहरुमा आर्थिक , सामाजिक तथा आत्मिक परिपक्वताको विषयमा अन्तर हुन्छ । दुवै चरणहरु शोषणबाट मुक्त मानिसहरुको सहयोग तथा पारस्परिक साहयताका सम्बन्धहरुमा आधारित हुन्छन् । यी सम्बन्धहरुको अर्थव्यवस्थामा प्राधान्य हुन्छ र यिनीहरु उत्पादक शक्तिहरुको स्वरुपको अनुरुप हुन्छन् । तर समाजवादको गठनको क्रममा पूँजीवादी सम्पत्तिको अधिकरण तथा किसानहरु र मजदूरहरुको सहकारीकरणको माध्यमबाट सामाजिक सम्पत्तिको निर्माण हुन्छ । फलस्वरुप समाजवादी स्वामित्वका दुई रुपहरुको , राष्ट्रिय (सम्पूर्ण जनताको) स्वामित्व तथा सामूहिक फार्महरुको (सामूहिक–सहकारी) स्वामित्वको र दुई मुक्त वर्गहरुको , मजदूर वर्ग तथा सामूहिक किसानहरुको उत्पत्ति हुन्छ ।

समाजवादको विशेषता यो पनि हो कि शहर तथा गाउँको बीचमा ऐतिहासिक विरोधलाई मेटाएर यसले तिनीहरुको भौतिक तथा सांस्कृतिक विकासको स्तर , श्रमको संगठनको स्वरुप , जीवनपद्धति, चिकित्सा तथा सांस्कृतिक सुविधाहरु, आदिमा अन्तरहरुलाई अझै मेटाउँदैन ।
समाजवादले मानसिक तथा शारीरिक श्रमको बीचमा अझै पनि विद्यमान धेरै अन्तरहरुलाई मेटाउँदैन र त्यसैकारण बुद्धिजीवी समुदाय , एउटा सुस्पष्ट सामाजिक समूहरुको रुपमा अझै पनि कायम रहन्छ र विकसित हुन्छ । अन्ततः आर्थिक र आत्मिक विकासको अझै पनि अपर्याप्त मात्रामा उपभोग्य वस्तुहरुको श्रमको परिमाण तथा गुणानुसार वितरणलाई र साथसाथै समाजमा माल–मुद्रा–सम्बन्धहरुलाई आवश्यक बनाउँदछ ।

साम्यवादको भौतिक तथा प्राविधिक आधारको निर्माण, सम्पूर्ण सामाजिक सम्बन्धहरुको परिष्कार तथा तिनीहरुको साम्यवादी सम्बन्धहरुमा रुपान्तरण, साम्यवादी चेतनाले युक्त मानिसको गठनले साम्यवादी संरचनालाई अझ उच्च चरणमा संक्रमणतिर लैजानेछन् , जब उत्पादनका साधनहरुमाथि सम्पूर्ण जनताको समान स्वामित्व स्थापित हुनेछ, वर्गविभेद समाप्त हुनेछन् , शहर तथा गाउँको बीचमा , मानसिक तथा शारीरिक श्रमको बीचमा सारभूत अन्तरहरुमाथि नियन्त्रण प्राप्त गरिनेछ , श्रम हरेकको पहिलो जीवन्त आवश्यकता बन्नेछ, भौतिक सम्पदाको वितरण आवश्यकतानुसार गरिनेछ । यो दीर्घकालीन ऐतिहासिक अवधिको प्रक्रिया हुनेछ ।

संसारमा साम्यवादको स्थापनासँगै राज्य तथा सम्पूर्ण राजनीतिक र कानूनी उच्च संरचनाको लोप हुनेछ । साम्यवाद स्वतन्त्र तथा सामाजिक दृष्टिले सचेत श्रमजीवीहरुको अत्यन्त सुसंगठित समाज हो, जसले स्वशासन, साम्यवादी जीवनका ती सर्वमान्य प्रतिमानहरुको आधारमा कार्य गर्नेछ, जसको पालनले मानिसहरुको आन्तरिक आवश्यक तथा आदतको रुप ग्रहण गर्नेछ । जातिहरु एक – अर्कोको अझ नजिक आउनेछन् र अन्ततः उनीहरुको बीचका सम्पूर्ण अन्तरहरु लुप्त हुनेछन् । उत्पादनको साम्यवादी पद्धतिको आधारमा उत्पन्न सामाजिक संगठनले प्रत्येक व्यक्तिको चौतर्फी विकास तथा समृद्धि र उसको सम्पूर्ण क्षमताहरुलाई समाजको अधिकतम लाभको लागि उपयोगमा ल्याउने व्यवस्था सुनिश्चित गर्न सक्नेछ र वास्तवमा गर्नेछ ।

## समाजवादी क्रान्ति

समाजको आमूल , गुणात्मक रुपान्तरण , जनु पूँजीवादबाट समाजवादमा संक्रमणको द्योतक हो । समाजवादी क्रान्तिले प्रभुत्व तथा अधीनताको निजी स्वामित्वमा आधारित उत्पादन – सम्बन्धहरुको स्थानमा परस्पर सहयोग तथा पारस्परिक साहयताका सम्बन्धहरुको स्थापना गर्दछ र यसरी मानिसद्वारा मानिसको शोषणलाई समाप्त पार्दछ । समाजवादी क्रान्तिका आधारभूत सिद्धान्तहरुको निरुपण कार्ल माक्र्स र फ्रेडरिख एंगेल्सले गरेका थिए, जसले सामाजिक विकासका नियमहरुको खोज गरेका थिए । उनीहरुले यो सिद्ध गरे कि समाजवादी क्रान्ति समाजको विकासको नियमसंगत परिणाम हो , र मजदूर वर्गको विश्वव्यापी ऐतिहासिक कार्यभारको पुष्टि गरे तथा समाजवादको निर्माणको लागि सर्वहारा वर्गको अधिनायकत्वको स्थापनाको आवश्यकता सिद्ध गरे ।

मजदूर वर्गद्वारा सत्तामाथि अधिकार क्रान्तिकारी रुपान्तरणको आरम्भ मात्र हो । नयाँ समाजको निर्माणको कार्यको परिधिमा आधारभूत सामाजिक रुपान्तरणहरुको एउटा सम्पूर्ण अवधि आउँदछ , जसलाई माक्र्सले पूँजीवादबाट साम्यवादमा संक्रमणको विशेष अवधि भनेका थिए ।
पूँजीवादको साम्राज्यवादी चरणको विश्लेषणको आधारमा माक्र्सवादको सिर्जनात्क ढंगले विकास गरेर लेनिनले मूलतः नयाँ अनेकानेक अत्यन्त महत्वपूर्ण प्रस्थापनाहरुबाट क्रान्तिको सिद्धान्तलाई समृद्ध बनाए । ती प्रस्थापनाहरु हुन्: पहिले एउटा वा केही देशहरुमा समाजवादी क्रान्तिको विजयको संभावना, जसबाट भिन्न–भिन्न सामाजिक–आर्थिक तथा राजनीतिक प्रणालीहरु भएका देशहरुको सहअस्तित्वको आवश्यकता उत्पन्न हुन्छ ; क्रान्तिको विष्फोट सबभन्दा पहिले ती स्थानहरुमा हुन्छ, जुन विश्व –पूँजीवादी अर्थव्यवस्थाको श्रृंखलामा सबभन्दा कमजोर कडीहरु हुन्छन्; बुजुवा जनवादी क्रान्तिहरुमा सर्वहारा वर्गको नेतृत्व तथा यी क्रान्तिहरुको समाजवादी क्रान्तिहरुमा विकास ; क्रान्तिहरुको विजयको लागि मजदूर वर्ग तथा किसान समुदायको संघबद्धताको निर्णायक महत्व ; विकसित पूँजीवादी देशहरुका मजदूरहरुको संघर्षको राष्ट्रिय मुक्ति आन्दोलनहरुसँग सम्बन्ध ; क्रान्तिकारी परिस्थिति ; वस्तुगत तथा आत्मगत कारकहरुको पारस्परिक क्रिया ; समाजवादी क्राािन्तका अनेक रुपहरु तथा विभिन्न अन्य प्रस्थापनाहरु ।

सोभियत संघ र अन्य देशहरुमा समाजवादको निर्माणका व्यहवारले यो प्रदर्शित गरे कि समाजवादी क्रान्तिका मुख्य नियमसंगतिहरु यी हुन्: मजदूर वर्गद्वारा राजनीतिक नेतृत्व तथा राज्यसत्ताको प्रश्नको श्रमजीवीहरुको हितमा समाधान, मजदूर वर्ग र किसान समुदायको संघबद्धता, पूँजीवादी स्वामित्वको अन्त , कृषिको समाजवादी पुनर्गठन, नियोजित आर्थिक विकास , सांस्कृतिक क्रान्ति, जातीय उत्पीडनको उन्मूलन ,

समाजवादी उपलब्धिहरुको रक्षा , सर्वहारा अन्तर्राष्ट्रियतावाद ।

उत्पादक शक्तिहरुको विकासको स्तर , राष्ट्रिय विशेषताहरु, जनताको आम संस्कृतिको स्तर , उनीहरुका ऐतिहासिक परम्पराहरु , देशमा तथा अन्तर्राष्ट्रिय रंगमंचमा वर्गीय शक्तिहरुको परस्पर सम्बन्धमा निर्भर भएर यी नियमसंगतिहरु भिन्न–भिन्न प्रकारले प्रकट हुन्छन् र विभिन्न देशहरुमा पूँजीवादबाट समाजवादमा संक्रमणको स्वरुपलाई निर्धारित गर्दछन् । यसप्रकार सम्बद्ध परिस्थितिहरुमा निर्भर भएर क्रान्ति शान्तिपूर्ण अथवा अशान्तिपूर्ण हुन सक्दछ । माक्र्सवाद – लेनिनवादले यो मान्दछ कि वर्गसंघर्षको तीक्ष्णता तथा उग्रता प्रतिक्रियावादी बुर्जुवा क्षेत्रहरुद्वारा बहुसंख्यक जनताको इच्छाको प्रतिरोधको शक्ति , यी क्षेत्रहरुद्वारा बलप्रयोगको मात्रामा निर्भर हुन्छ । वर्तमान युगमा समाजवादी क्रान्तिको सिद्धान्तको थप विकास भएको छ । यसलाई अनेकौं नयाँ निष्कर्षहरुबाट समृद्ध बनाइएको छ ।

ती निष्कर्षहरु हुन्: विभिन्न देशहरुमा शान्तिपूर्ण क्रान्तिको लागि अनुकूल अवस्थाहरुको अस्तित्व ; पिछडिएका देशहरुमा गैरपूँजीवादी विकास तथा राष्ट्रिय जनवादी राज्यको स्थापनाको संभावना ; वित्तीय अल्पतन्त्रको विरोध गर्ने सम्पूर्ण जनवादी आन्दोलनहरुलाई एकताबद्ध गर्ने आवश्यकता । अपेक्षाकृत लामो तथा बहुपक्षीय प्रक्रिया हुनुको कारण समाजवादी क्रान्तिको माग यो छ कि सम्पूर्ण जनवादी शक्तिहरुको सुदृढिकरण गर्नुपर्दछ, समाजवादी तथा आम जनवादी प्रवृत्तिहरुको एउटै शक्तिशाली, एकाधिकारविरोधी आन्दोलनमा संयोजन हुनुपर्दछ , विकासशील देशहरुको समाजवादी दिशानिर्धारण सुनिश्चित हुनुपर्दछ ।

## समाजवादी यथार्थवाद

एउटा कलात्मक विधि , जसको सार यथार्थतालाई त्यसको क्रान्तिकारी विकासमा वास्तविक , ऐतिहासिक दृष्टिले मूर्त ढंगबाट प्रतिबिम्बित गर्नु तथा साम्यवादी सौन्दर्यात्मक आदर्शको प्रकाशमा प्रस्तुत गर्नु हो । समाजवादी यथार्थवादको कलाको उत्पत्ति तथा यसको गठन विश्व रंगमंचमा एउटा नयाँ प्रगतिशील , क्रान्तिकारी समाजिक शक्तिको रुपमा मजदूर वर्गको उत्पत्तिसँग जोडिएका छन् , जुन मानव–मूल्यहरुको वास्तविक उत्पादक हो । समाजवादी यथार्थवादका प्रथम कृतिहरुको रचना २०औं शताब्दीको आरम्भमा , रुसमा पूँजीवादको संकट, सर्वहारा वर्गसंघर्षको विकास तथा समाजवादी क्रान्तिको तयारी परिसिथतिहरुमा भएको थियो (म्याक्सिम गोर्कीको उपन्यास ‘आमा’ तथा उनका नाटक ‘शत्रु’, डी. बेद्नी तथा अन्य सर्वहारा कविहरुका कविताहरु) । समाजवादी यथार्थवादको विधि , जसको १९१७ पछि सोभियत कलाका सम्पूर्ण क्षेत्रहरुमा विकास भयो (भी. मयाकोव्स्की, एम. सोलोखोभ , एस. एइजेन्स्टेइन , के. स्तानिस्लाव्स्की, ए. देइनेका, डी. शोस्ताकोभिच तथा धेरै अन्य) , विश्वव्यापी परिघटना बन्यो र त्यसलाई बुर्जुवा देशहरु तथा समाजवादी देशहरुमा धेरै शीर्षस्थ प्रगतिशील कलाकर्मीहरुले अपनाए (एच. बाब्र्यूस, एम. एंडरसन–नेक्से, बी. ब्रेख्त, एल. आरागाेें, पी. नेरुदा, एन. हिकमत, जे. अमादु, जे. एल्ड्रिज, जे. फूचिक, आदि) ।

अतीतको कलाका सर्वोत्तम यथार्थवादी परम्पराहरुको नियमसंगत निरन्तरता भएकोले समाजवादी यथार्थवाद मानवको कलात्मक प्रगतिमा एउटा नयाँ चरण हो । यसको सार हो जीवनको सत्यप्रति निष्ठा , जसको अभिव्यक्ति साम्यवादी विश्वदृष्टिकोणको स्थितिबाट प्रस्तुत कलात्मक बिम्बहरुमा हुन्छ । यो दृष्टिकोण कलाकारहरुको लागि चित्रित घटनाहरुको अर्थ बुझ् mन, अतीत तथा वर्तमानको र साथसाथै सामाजिक विकासका प्रवृत्तिहरुको कलामा सही ढंगबाट पुनर्सिजन गर्न संभव बनाउँदछ । साम्यवादी सौन्दर्यात्मक आदर्श नयाँ प्रकारका सकारात्मक नायकमा , श्रमजीवी मानव, योद्धा, साम्यवादी समाजका निर्मातामा मूर्त

हुन्छ । समाजवादी यथार्थवादका मुख्य विचारधारात्मक र सौन्दर्यात्मक सिद्धान्त हुन् साम्यवादी विचारधाराप्रति निष्ठा , जनताको सेवा , पक्षधरता, श्रमजीवीहरुको संघर्षसँग घनिष्ठ सम्बन्ध समाजवादी मानवतावाद , अन्तर्राष्ट्रियतावाद, ऐतिहासिक आशावाद ; आकारवाद, आत्मगतवाद तथा प्रकृतिवादी आदिमवादको अस्वीकृति । आप् mनो विकासको क्रममा समाजवादी यथार्थवादले कलाकृतिहरुको कलात्मक रुप र विचारधारात्मक –सौन्दर्यात्मक अन्र्वस्तुसँग समबन्धित अनेकौं विशेषताहरुको विस्तार गरेको छ । ती विशेषताहरु जीवनको प्रगतिशील विकासमा हर्ष अनुभव गर्ने , नयाँ समाजका निर्माताहरुका महान उद्देश्यहरु र उनीहरुको सामु उद्घाटित भइरहेका उदात्त परिप्रेक्ष्यहरुबाट आनन्द प्राप्त गर्नेजस्ता सौन्दर्यात्मक अनुभूतिहरुको स्रोत हुन् । यसको आधारमा समाजवादी यथार्थवाद कम्युनिष्ट शिक्षा–दीक्षाको सशक्त साधन बनेको छ । समाजवादी यथार्थवदले कलाकारहरुलाई आप् mना प्रवृत्तिहरुअनुसार विविध रुपहरु तथा शैलीहरुको छनौटमा आप् mनो सिर्जनशील पहललाई व्यापक रुपमा उद्घाटन गर्नमा साहयता गर्दछ ।

## समाजवादी राज्य

उच्च संरचनाको राजनीतिक भाग , जुन समाजवादको आर्थिक आधारमा विकसित हुन्छ । समाजवादी राज्य एउटा नयाँ प्रकारको राज्य हो , जुन समाजवादी क्रान्तिको फलस्वरुप बुर्जुवा राज्यको स्थानमा स्थापित हुन्छ । समाजवादी उच्चसंरचनाको निर्माणको प्रक्रिया पूँजीवादबाट समाजवादमा संक्रमणको एउटा सम्पूर्ण अवधिको क्रममा जारी रहन्छ । यो अवधिमा राज्यले सर्वहारा वर्गको अधिनायकत्वको रुप ग्रहण गर्दछ । यो े आप्mना लक्ष्यहरु तथा कार्यभारहको दृष्टिले समाजवादी हुन्छ , किनभने यसले समाजवादको निर्माणको साधनको काम गर्दछ । समाजवादी समाज जब–जब विकसित हुँदै जान्छ , समाजवादी राज्यका कार्यहरु पनि बदलिँदै जान्छन् ; शोषक वर्गहरुको उन्मूलनसँगै तिनीहरुको प्रतिरोधलाई दमन गर्ने कार्य समाप्त हुन्छ , र आर्थिक संगठन , शिक्षा–दीक्षा तथा संस्कृतिको चौतर्फी विकास समाजवादी राज्यको मुख्य कार्य बन्दछन् ।

विश्व समाजवादी प्रणालीको गठन भएपछि विश्व शान्तिको रक्षा गर्ने र देशको रक्षा –व्यवस्थालाई सुदृढ बनाउनुको साथसाथै समाजवादी राज्यको नयाँ बाह्य कार्यको , अन्य समाजवादी देशहरुसँग बन्धुत्वपूर्ण सहयोगको विकास गर्ने कार्यको जन्म हुन्छ । समाजवादी विकाससँगसँगै सर्वहारा अधिनायकत्वको राज्य सम्पूर्ण जनताको राज्यमा , सम्पूर्ण जनताको इच्छा व्यक्त गर्ने निकायमा परिवर्तित हुन्छ । श्रमजीवीहरुले जनसत्ताका निकायहरु र साथसाथै जननियन्त्रणका निकायहरुको माध्यमबाट राज्यको प्रशासनमा भाग लिन्छन् । साम्यवादको निर्माणको प्रक्रियाको अवधिमा राज्यको विलोपको अर्थ समाजवादी राज्य तथा सम्पूर्ण समाजवादी समाजको कम्युनिष्ट सार्वजनिक स्वशासनमा निरन्तर रुपले विकास हो । देशभित्र विकसित साम्यवादी समाजको निर्माण तथा समाजवादको विश्वव्यपी स्तरमा विजय र सुदृढिकरण राज्यको पूर्ण विलोपका आवश्यक शर्त हुन् ।

**स्रोतः दर्शन विश्वकोश**

# वैज्ञानिक साम्यवाद के हो ?

• नयाँ समाज

**वैज्ञानिक साम्यवाद –** माक्र्सवाद–लेनिनवादका तीन संघटक भागहरुमध्ये एक, जसले पूँजीवादी उन्मूलन गर्न र पहिले समाजवादको तथा त्यसपछि साम्यवादको निर्माण गर्नतिर लक्षित सामाजिक आन्दोलनहरुको अध्ययन गर्दछ । यो आन्दोलनको मुख्य प्रेरक शक्ति तथा नेता मजदूर वर्ग हो , जसले सम्पूर्ण उत्पीडित र शोषितहरुलाई आप् mनो वरिपरि एकताबद्ध गर्दछ र जसलाई सम्पूर्ण प्रगतिशील मानवजातिको साहानुभूति प्राप्त हुन्छ , त्यसकारण वैज्ञानिक साम्यवादको मुख्य प्रश्न सर्वहारा वर्गको विश्व–ऐतिहासिक कार्यभारको प्रश्न हो ।

यो प्रस्थपनाको ठोस व्याख्या सर्वहारा समाजवादी क्रान्ति र सर्वहारा वर्गको अधिनायकत्वको सिद्धान्तमा गरियो , जुन समाजवादी समाजको निर्माणका साधन हुन् । त्यसकारण वैज्ञानिक साम्यवादले मानिसद्वारा मानिसको शोषणको उन्मूलन गर्ने तथा समाजको संगठनको एउटा यस्तो नयाँ रुपको निर्माण गर्ने कार्यको वास्तविक , विज्ञानमा आधारित मार्ग दर्शाउँदछ , जुन पूँजीवादका अन्तर्विरोधहरुबाट मुक्त हुनेछ तथा जसको सपना काल्पनिक समाजवादका प्रतिपादकहरुले देख्दथे ।

माक्र्सवादी–लेनिनवादी विज्ञानको एउटा संघटक भागको रुपमा वैज्ञानिक साम्यवादले अन्य दुई संघटक भागहरुलाई – द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादको दर्शन र राजनीतिक अर्थशास्त्रलाई – आप्mनो आधार बनाउँदछ । वर्गसंघर्षको सिद्धान्त तथा अतिरिक्त मूल्यको सिद्धान्तको वैज्ञानिक साम्यवादको लागि विशेष महत्व छ । उता समाजको पुनर्गठनका व्यावहाकि समस्याहरुलाई सैद्धान्तिक चिन्तनको सामु प्रस्तुत गरेर वैज्ञानिक साम्यवादले चिन्तनको द्वन्द्वात्मक विधिको विकास, ऐतिहासिक र सामाजिक नियमहरुको खोज , समाजवादको राजनीतिक अर्थशास्त्रसहित अर्थशास्त्रको थप विकासलाई उत्प्रेरित गर्दछ ।

विश्वदृष्टिकोण तथा राजनीतिक विचारधाराको रुपमा वैज्ञानिक साम्यवादले सर्वहारा वर्ग , अर्थात् त्यो वर्गका हितहरुलाई व्यक्त गर्दछ , जसमाथि समाजको क्रान्तिकारी पुनर्गठनको दायित्व हुन्छ । वैज्ञानिक साम्यवाद मुक्तिआन्दोलनसँग घनिष्ठ रुपले जोडिएको हुन्छ । यो केवल सर्वहाराको वर्गसंघर्ष, समाजवादी क्रान्ति तथा सर्वहारा अधिनायकत्वको अनुभवको मात्र होइन, बरु व्यापक जनवादी आन्दोलनहरु , बुर्जुवा जनवादी तथा राष्ट्रिय मुक्ति क्रान्तिहरुको अनुभवको पनि सामान्यीकरण हो ।

स्रोतः दर्शन कोष

# जनवादी केन्द्रयीताको अभ्यासबारे

• नारायणकाजी श्रेष्ठ, सचिवालय सदस्य, नेकपा

कम्युष्टि पार्टीको संगठनात्मक सिद्धान्त जनवादी केन्द्रीयता हो । यो पनि एउटा त्यस्तो तत्व हो ,जसले कम्युनिष्ट पार्टीलाई अरु पार्टी भन्दा भिन्न वनाउँछ ।
सर्वहारा जनवादको जगमा वैचारीक केन्द्रीयता र त्यस्तो वैचारिक केन्द्रीयतामहाततमा संगठनात्मक केन्द्रीयता नै जनवादस् केन्द्रयता हो । त्यसैले जनवादी केन्द्रीयतालाई संगठनात्मक केन्द्रीयताको नियमहरुको पालनाका रुपमा मात्र संकुचित गरी बुझ्नु गलत हो । पार्टीभित्र सर्वहारावर्गीय दृष्टिकोणका आधारमा पार्टी र क्रान्तिका हरेक सवालमा पर्याप्त छलफल गरेर निष्कर्ष निकाल्नु भनेको सर्वहारा जनवादको अभ्यास गर्नु हो । पार्टीभित्र उन्नतस्तरको जनवाद कार्यकारी हुनुपर्छ । त्यो निश्चित रुपमा पार्टी , वर्ग, जनता र क्रान्तिको स्वार्थका लागि हुनुपर्छ । सर्वहारा जनवादको अभ्यास द्वारा पार्टीभित्र सबैको ज्ञान र अनुभवको केन्द्रीकरण हुन्छ । त्यसरी पैदा भएको वैचारिक केन्द्रियता ९ष्मभययिनष्अब िअभलतचबष्किm ० पार्टीको मुल तत्व हुन्छ । त्यस्तो वैचारिक केन्द्रीयताको वगमा नै संगठनात्मक केन्द्रीयता उभिएको हुन्छ । जनवादी केन्द्रीयताको अभ्यासको स्तर पार्टीभित्रको आमपंक्तिको वैचारिक –सांस्कृतिक स्तर कम छ भने सर्वहारा जनवाद लागू नभएर औपचारिक जनवाद ९ ायचप mब िमझयअचबअथ० लागु भइरहेको हुन्छ किनकि त्यहाँ वास्तविक आलोचनात्मक द्धन्द संघर्ष हुन पाउँदैन । जति सैद्धान्तिक–सांीकृतिक स्तर उन्नत हुँदै जाँछ , त्यति सर्वहारा जावादको अभ्यास पनि उन्नत हुदै जान्छ । सर्वहारा जनवादको अभ्यासले सैद्धान्तिक स्तर उन्नत पार्ने कार्यमा सघाउ पु ¥याइएको हुन्छ । त्यसैले वनवादी केन्द्रीयताको अभ्यासका निम्ति पार्टीभित्र वैचारिक, सांस्कृतिक स्तर उठाउने काम अत्यन्त जरुरी हुन्छ । जनवादी केन्द्रीयताको अभ्यास निरन्तर उन्नत हुँदै जान्छ , तर पूर्ण उन्नत भएर विराम भने लाग्न सक्तैन ।

जनवाद र केन्द्रीयताको संयोजन र संघर्षको प्रक्रियामा जनवादी केन्द्रीयता लागु भइरहेको हुन्छ । सामान्यतः त्यसमध्ये कुनै एउटामा जोड र अर्कोको उपेक्षाले जनवादी केन्द्रीयतालाई निक्ष्प्रभावी वा विकृत बनाइदिन सक्छ । त्यसैले जनवाद र केन्द्रीयता दुवै उत्तिकै ध्यान दिनुपर्ने पक्षहरु ह्ुन् । तर, यो कुरालाई भने बिर्सनहुँदैन कि खास–खास विशिष्ट परिस्थितिमा ती दुईमध्ये कुनै एउटा पक्ष्मा जोड दिनुपर्ने हुन सक्छ ।

### (क) संगठनात्मक केन्द्रीयताको पालना

पार्टी संगठनलाई मूलतः विचारले नै एक बनायने भएकाले जनवादी केन्द्रीयतामा वैचारिक केन्द्रीयता नै त्यसको प्रधान पक्ष् हुन्छ । आधारभूत वैचारिक भिन्नताले पार्टीमा फुट र विग्रह ल्याउँछ । तर , त्यसको अर्थ संगठनात्मक केन्द्रीयताको महत्व छैन वा संगठनात्मक केन्द्रीयतालाई कमजोर बनाए पनि हुन्छ भन्ने होइन । संगठनात्मक केन्द्रीयताका आधारभूत नियमहरु एक , व्यक्ति संगठनमातहत रहन्छ । दुई अल्पमत बहुमतको अधिनस्थ हुन्छ । तीन , तल्लो कमिटी माथिल्लो कमिटीको अधीनमा रहन्छ र चार , सम्पूर्ण पार्टी दीयहरु केन्द्रीय समितिमातहत रहन्छन्लाई कडाईपूर्वक पालना गरिनैपर्छ । नेलिनले भन्नुभएजस्तै ‘पार्टी कार्यको केनद्रीकरणका लागि यसको अतिरिक्त संगठनात्मक केन्द्रीयताको पनि आवश्यकता हुन्छ । कुनै एक त्यस्तो पार्टी , जसले धेर –थोर विकास गरिसकेको छ र जसले मात्र एक पारिवारिक मन्डलका रुपमा आफ्नो अस्तित्व राखेको छैन , एक सुनिश्चित विधानविना , अल्पसंखख्यालाई बहुसंख्याको अधीनमा नराखीकन, अंशलाई सम्पूर्ण अधीनमा नराखीकन

संगठनात्मक एकताको कल्पना पनि गर्न सकिदैन ।' लेलिन भन्नुहुन्छ , 'वैचारिक (संगठनात्मक) केन्द्रीय संस्थाको सत्ता नैतिक तथा बौद्धिक प्रतिष्ठामा आधारित हुनरपर्छ ।

अवश्य म यस कुरासित सहमत छु । संगठनको प्रत्येक प्रतिनिधीले केन्द्रीय संस्थाको नैतिक प्रतिष्ठा कायम रहोस् भन्ने कुरामा ध्यान दिनु नितान्त आवश्क छ । तर , प्रतिष्ठा चाहिन्छ भने सत्ता नभए पनि हुन्छ भन्ने निष्कर्षचाहीँ यसबाट निकाल्नु हुँदैन । वैचारिक प्रतिष्ठा र सत्ताको प्रतिष्ठालाई एक दोस्राविरुद्ध उभ्याउनु अराजकतावादी कुरा हो र यस्तो कुरालाई हामी यहाँ स्थान दिन सक्तैनौ । लेलिनले यस सम्बन्धमा थप भन्नुहुन्छ 'केन्द्रीय संस्थाहरुको नेतृत्वमातहत रहन इन्कार गर्नु भनेको पार्टीलाई बनाउने होइन, गर्नु बराबर हो । पार्टीलाई ध्वस्त पार्नुजत्तिकै हो । यो पार्टीलाई बनाउने होइन ,नस्ट पार्ने तरिका हो र बनाउनुको सट्टा नस्ट पार्ने यस तरिकाले यी मानिसमा सिद्धान्तनिष्ठता र आफ्नो विचारधाराप्रति आस्था रहनेछ भन्ने कुरा दर्शाउँछ ।' लेलिनका उपरोक्त भनाइले संगठनात्मक केन्द्रीयताको महत्व कति छ भन्ने कुरा स्पस्ट पार्छ ।

### (ख) विचार अभिव्यक्तिको स्वतन्त्रता र कामकारबाहीमा एकरुपता

जनवादी केन्द्रीयताले विचार अभिब्क्ति स्वतन्त्रता र कामकारवाहीमा एकरुपताको माग गर्छ । कुनै पनि पार्टी सदस्यलाई पद्धतिसम्मत ढंगले आफ्नो विचारलाई छलफलका निम्ति प्रस्तुत गर्ने अधिकार रहन्छ । अल्पमत वा भिन्नमतलाई कुन्ठित र दमन गरिनुहुदैन । त्यसलाई पार्टीभित्र प्रवाहित गर्ने उपयुक्त अवसर दिइनुपर्छ । कतिपय विषयमा पार्टीभित्र मात्र होइन, सार्वजनिक रुपमा समेत बहस गर्ने पद्धतिको अभ्यास गरिनुपर्छ । तर विचार अभिव्यक्ति स्वतन्त्रताको अर्थ कम्युनिस्ट पार्टीलाई वादविवादको थलो बनाउने छुट होइन र हुनुहुदँैन लेलिनले भन्नुभजस्तै , कम्युनिस्ट पार्टी वादविवादको क्लब नभएर लडाकु सर्वहारावर्गको पार्टी हो । त्यसैले कुनै पनि विषयमा छलफल भएर एउटा निष्कर्ष निकालिसकेको पछि सबैपार्टी सदस्य र पार्टी समितिहरुले त्यसलाई विनासर्त क्रियान्वयन गर्नुपर्छ । आधारभूत र महत्वपूर्ण नीतिसम्बन्धी प्रश्नहरुमा सिंगो पार्टीपंक्तिमा छलफल गरी निष्कर्ष निकाल्नुपर्छ । तर , हरसानातिना विषयमा सदासर्वदा सबै पार्टी सदस्यले छलफल गरेरमात्र निष्कर्ष निकाल्नुपर्छ भन्नु सर्वहारा जनवादको यान्त्रिक बुझाई हुन्छ । त्यसो गर्ने हो भने त प्रत्येक विषयपिच्छे सधैँ महाधिवेशन वा कम्तीमा पनि राष्ट्रिय सम्मेलन गरिरहनुपर्छ , जुन न औचित्यपुर्ण हुन्छ ,न सम्वभ । त्यसैले त्यस्ता विषयमा पार्टी पद्धति अन्र्तगत सम्बन्धित पार्टी अंगहरुकाले निर्णय लिनुपर्छ ।

### (ग) सामूहिक नेतृत्व

कम्युनिष्ट पार्टीमा सामुहिक नेतृत्वको निमार्ण जनवादी केन्द्रीयताको सहि अभ्यास द्वारा नै सम्भव हुन्छ। सामुहिक नेतृत्वको अवधारणालाई औपचारीक कमिटी प्रणाली वा कमिटी निर्णय अत्यन्त जरुरी मात्र होइन अनिवार्य कुरा हो । तर सर्वहारा जनवादको अभ्यासद्वारा आमपार्टी सदस्यहरुको ज्ञान र अनुभवको केन्द्रीकरण झन महत्वपुर्ण हुन्छ । सवैभन्दा राम्रो केन्द्रिकरण जसमार्फत सम्भव छ । , उनै व्यक्तिहरु माथील्लो स्तरका नेता हुन्छन् । त्यसरी मात्र वास्तविक र सामुहिक नेतृत्वको निमार्ण हुन्छ । सामुहिक नेतृत्वको कुरा गर्नुको अर्थ व्यक्तिहरुको विशिष्ट भूमिकालाई अस्वीकार गर्नु होइन । बरु खास नेताहरुको विशिष्ट भूमिका विना सामस्शिक नेत्ृत्वले ठोस र मूर्त रुप लिन सक्तैन । सामूहिक नेतृत्व सर्वहारा जनवादको अभ्यासद्वारा सम्पूर्ण नेता, कार्यकर्ता र सदस्यहरुको ज्ञान तथा अनुभवको केन्द्रीकरणबाट हुन्छ । भो ठोसरुपमा

सामूहिक नेतृत्वको केन्द्रीकृत अभिव्यक्ति खास व्यक्ति मार्फत प्रकट हन्छ । त्यसको अर्थ प्रमुख नेतृत्वमा भएको व्यक्तिले स्वेच्छाचारी ढंगले काम गरेपनि वा सम्पूर्ण पार्टी नेता ,कार्यकर्ता र सदस्यहरुको ज्ञान , चेतना र अनुभवको केन्द्रीकरणको प्रक्रिया नभए पनि सामूहिक नेतृत्वको प्रणाली क्रियाशील भइरहेको हुन्छ भन्ने होइन ।

### (ङ) अन्तरपार्टी संघर्षको सहि सञ्चालन

जनवादी केन्द्रीयताको परीपालन अन्तगत अन्तरपार्टी संघर्षको सहि संचालन पनि पर्छ । कम्युनिष्ट पार्टीमा पनि समाजमा चल्ने समाजमा चल्ने वर्गसंघर्षको प्रभाव पर्छ , त्यसकारणले त्यसभित्र अन्तरसंघर्षदुईलाइन संघर्ष चलिरहन्छ । अन्तरपार्टी संघर्ष जीवित र गतिशील पार्टीको लक्षण नै हो । विचारको द्वन्द्वलाई निषेध गर्नु वा त्यसलाई प्रशासनिक तरिकाबाट हल गर्न खोज्नु उचित हुँदैन । अन्तरपार्टी संघर्ष वैज्ञानिक एवम् स्वस्थ ढंगले संञ्चालन गरिनुपर्छ । भिन्नमतलाई सहियण्ुतासाथ विचार प्रवाह र छलफलको अवसर प्रदान गरिनुपर्छ र बहुमतको निर्णयलाई पार्टी निर्णयका रुपमा क्रियान्वयन गरिनुपर्छ । केन्द्रीयताको नाममा नोकरशाहीपन र जनवादको नाममा अराजकतालाई छुट दिनुहुँदैन । अन्तरपार्टी संघर्ष मैत्रीपूर्ण ढंगले एकतारुपान्तरण , मुख्यतः रुपान्तरण र नयाँ आधारमा सुदृढ एकताको मान्यतामा संञ्चालन गरिनुपर्छ । अन्तरसंघर्षलाई सत्य अन्वेषणको विधि बनाउनुपर्छ ।

*पार्टीभित्र कहिले एउटा र कहिले अर्को प्रवृत्ति मुख्य समस्याका रुपमा देखापर्न सक्छ । हरहमेसा गलत र अवसरवादी प्रवृत्तिविरुद्ध संघर्ष गरिरहनुपर्छ । एउटै ध्येय उद्देश्यले संगठित पार्टीभित्र हुने त्यसप्रकारका अन्तर्विरोधहरु कहिलेकाहीँ असाध्य कस्टकर, पीडादायक र जटिल पनि हुने गर्छन । हाम्ले त्यसलाई बेहोर्ने साहस गर्नैपर्छ । विचारधारात्मक संघर्षको क्षेत्रमा उदारवाद स्वयम् पनि अवसरवाद हो । क. माओले समेत अन्तरपार्टी संघर्ष नै आफुलाई सबैभन्दा पीडादायक हुने बताउनुभएको छ र उहाले जीवनभरि संशोधनवादी र अवसरवादीहरु विरुद्ध अन्तरपार्टी संघर्ष गरिरहनु भयो ।*

### (च) पार्टी अनुशासन

सर्वहारावर्गको पार्टी क. स्टालिनले भन्नभएझै फलामे अनुशासनको आवश्यकता हुन्छ । अनुशासनहीन पार्टीले वर्गसंघर्ष र क्रान्तिको नेतृत्व प्रदान गर्न सक्देन । अनुशासनहीनता। अराजकता र गुटबन्दीको स्रोत पार्टी भित्रको अवसरवाद हो । अराजकवादको स्रोत क. माओले भन्नुभएझैँ अनुशासनप्रतिको निम्नपुँजीवादी अरुचि हो । निश्चय पनि सर्वहारा अनुशासन स्वेच्छिक अनुशासन हो । जनवादी केन्दत्र्ीयताको अभ्यास र वैचारिक सांस्कृतिक स्तर उन्नत पार्ने अभियानले स्वेच्छिक अनुशासनको स्तरलाई विकसित गर्दै लैजान्छ । तर अनुशासन स्वेच्छिक हुन्छ भन्ने नाममा पार्टीभित्र बस्ने तर आफुखुसी गर्ने, पार्टी निर्णयको अवज्ञा गर्ने र गोपनियता भंग गर्ने जस्ता पञ्वृत्तिले छुट पाउन सक्तैनन । अराजक तत्वहरु केन्दीयताको पालना गर्नु , बहुमतको निर्णयलाई आदर गर्नु र क्रियान्वयन गर्नुलाई दासता ठान्छन । त्यसपकारको पञ्वृत्ति हानिकारक हुन्छ । तर फेरी अनुशासनलाई पद्धति , नियम र प्रशासनिक उपायाका आधारमा मात्र कायम गर्ने सोचियो र वैचारीक सांस्कृतिक स्तर उन्नत पार्दै मूलत स्वेच्छिक अनुशासनको जग बलियो बनाउने काममा ध्यान दिईएन भने पनि त्यो गलत हुन्छ । पार्टीैभित्र बहुकेन्द्र र गुटबन्दिलाई भित्रीन दिनुहुँदैन । किनकी त्यसले विषवृक्षको काम गर्छ । जसले फलामे अनुशासणलाई अलिकति पनि कमजोर पार्छ ,उसले वास्तवमा सर्वहारावर्गविरुद्ध पुजिँपतिवर्गलाई सहयोग पु ¥याइरहेको हुन्छ भन्ने लेनिनको

महत्वपूर्ण भनाईको मर्मलाई गम्भीरतासाथ
आत्मासात् गर्नुपर्छ ।

**(६) आलोचना र आत्मालोचना**

यो पक्रिया पनि जनवादी केन्द्रियतासँग जोडिएको
महत्वपूर्ण पक्ष हो । हामीले आलोचना
आत्माआलोचनाको पक्रियालाई पार्टी जीवनको एक
नियमित क्रिया सम्झनुपर्छ । यसले अन्तरपार्टी
जनवादलाई प्रभावकारी ढंगले अभ्यास गर्न
महत्वपुर्ण सहयोग पु ¥याउँछ र पार्टीलाई स्वच्छ
राख्न मद्दत पु ¥याउँछ । यो आत्मालोचनाको
पक्रिया सहि ढंगले चल्न सत्तै mन,त्यहाँ
सकरात्मक द्वन्द्व संघर्षको जनवादी अभ्यास पनि
कमजोर हुन्छ ।

क्रान्तिकारीहरुले आलोचना र आत्मालोचनालाई
मात्र एक औपचारीक पक्रियाका रुपमा लिने गल्ति
गर्नुहँुदैन । यसलाई सर्वहाराभावसाथ अभ्यासमा
लगिनुपर्छ ।

# आन्दोलनविहीन वामपन्थी युवा

*कम्युनिस्ट पार्टीमा आबद्ध चाहे त्यो युवा होस्, चाहे विद्यार्थी, किसान, मजदुर नै किन नहोस्, त्यो शक्तिले बितेका १५–२० वर्षमा कुनै ठूलो आन्दोलन नै गरेको छैन*

खासगरी पुँजीवादले विभिन्न मायावी रूप ग्रहण गरिराख्छ । त्यसक्रममा पछिल्लो कालमा हामीकहाँ पनि पुँजीवादको नवउदारवादी स्वरूपले प्रवेश ग ¥यो । विशेषगरी , ५० को दशकसँगै पालैपालो सरकारको नेतृत्व गरेका कांग्रेस, एमालेले विश्वको पछिल्लो ट्रेन्ड यही हो भन्दै नवउदारवादको नीतिलाई सहज रूपमा अँगाल्न पुगे । माओवादी आन्दोलन यसैको विकल्प दिन सुरु भएको थियो । समयक्रममा यो पनि नवउदारवादकै अँध्यारो सुरुङमा विलुप्त भयो । त्यसयता आजसम्म जे–जति परिवर्तन भए, सरकार फेरिए, उनीहरूले नवउदारवादसँग सम्बन्धविच्छेद गर्न सकेनन् । बरु सबै सरकारले निरन्तर नवउदारवादलाई फलाउने–फुलाउने अनुकूलको काम मात्रै गरिरहे ।

नवउदारवादको मुख्य चरित्र के हो भने यसले तेस्रो विश्वका देशमा प्रवेश गरेपछि वामपन्थी र समाजवादी आन्दोलनलाई शत्रु ठानेर मुख्य तारो बनाउँछ । त्यसपछि क्रमशः प्रतिरोध गर्न सक्ने सबैखाले आन्दोलनलाई त्यसले समाप्त पारिदिन्छ । परिणामस्वरूप सामाजिक आन्दोलनको ठाउँमा एनजिओ–आइएनजिओ देखा पर्न थाल्छन् । त्यसले सामाजिक आन्दोलन र संस्थालाई

प्रतिस्थापन गर्छ । लड्ने क्षमता भएका संस्था र समूहलाई झन्झन् कमजोर बनाउने र समाप्तिको अवस्थासम्म पु ¥याउने त नवउदारवादको आमचरित्रै हो । अ
हिले करिब –करिब विकसित देश नवउदारवादकै कारण निकै ठूलो संकटको भूमरीमा परेका छन् भने हाम्रो मुलुक पनि त्यसैको चपेटामा परेकाले समस्या बढ्दै छ । यसले गर्दा 'सेन्टर लेफ्ट ' शक्तिहरू क्रान्तिकारी बाटो हिँड्न सक्ने त कुरै भएन, बरु उनीहरू जनताको आधारभूत मुद्दामा पनि बोल्न नसक्ने अवस्थामा छन् । उनीहरूको धरातल मजदुर, सुकुमबासी भएकाले चुनाव आउँदा उनीहरूलाई सम्झिएर नारा तय गर्छन् । पाँच वर्षमा हुने चुनावी घोषणापत्रमा मजदुर , किसानका हितका पक्षमा अनेक कुरा लेख्छन् , तर चुनाव सकिएपछि उनीहरू कर्पोरेट हाउस र ठूला व्यापारिक घराना , बिचौलियाको सेवामा लीन हुन्छन् । अहिले हामीकहाँ देखिएको परिदृश्य ठ्याक्कै यही हो । हाम्रै पार्टीको चरित्र पनि झन्डै यही हो भन्दा अन्यथा मानिनेछैन ।

जनताको चेतनास्तरलाई हेर्ने हो भने त्यहाँ लामो समयदेखि कम्युनिस्टको प्रभाव छ । जहाँ कम्युनिस्ट पार्टीको प्रभाव घनीभूत रहन्छ , त्यहाँ नयाँ विचारले पालुवा हाल्न पाउँदैन । यो कम्युनिस्टका निम्ति ठूलै चुनौतीको विषय हो । जहाँ कम्युनिस्ट पार्टी हावी छैनन्, त्यस्ता मुलुकमा बरु समाजवादी विचारधारात्मक सवालमा थोरै भए पनि काम भएको छ । त्यसको विपरीत जहाँ कम्युनिस्ट र मजदुर , किसानको ठूलो पंक्ति छ , त्यहाँ वैचारिक कामै नहुने परिस्थिति देखिएको छ ।

किनभने, कम्युनिस्ट पार्टी छँदैछ भन्ने मनोविज्ञानले सबैलाई परनिर्भर बनाएको हुन्छ । हाम्रो देशमा कम्युनिस्टको प्रभाव भएकै कारण खास गरेर किसान, मजदुर, युवा, विद्यार्थीको ठूलो तप्कालाई संगठनात्मक र वैचारिक रूपमै कुँज्याइयो । जसले गर्दा उनीहरूले स्वतस्फूर्त रूपमा गर्ने प्रतिरोधी क्षमता पनि गुमाउँदै गए । अर्थात्, कम्युनिस्ट पार्टीले जनतामा रहेको जुझारुपनलाई नै समाप्त पारिदियो ।

परिणामस्वरूप नेपालमा के देखिन थाल्यो भने किसानलाई मर्का प ¥यो भने उनीहरू दूध बगाउन तयार हुन्छन्, तर प्रतिरोध गर्न तयार हुँदैनन् । यो अवस्था युवाको हकमा पनि लागू हुन्छ र विद्यार्थीको हकमा पनि ।

कम्युनिस्ट पार्टीमा आबद्ध चाहे त्यो युवा होस्, चाहे विद्यार्थी, किसान, मजदुर नै किन नहोस् , त्यो शक्तिले बितेका १५ –२० वर्षमा कुनै ठूलो आन्दोलन नै गरेको छैन । कम्युनिस्ट पार्टीले पनि आफ्ना जनसंगठनलाई पाँच वर्षमा एकपटक प्रयोग गर्ने औजारका रूपमा प्रयोग गर्न थाले । अन्ततः उनीहरू समाज बदल्ने अग्रदस्ताको भूमिकाबाट अनुहारविहीन मतदातामा परिणत हुन पुगे । आजको युवाको वास्तविक अनुहार पनि यही हो । नेकपाका नेता –कार्यकर्ता केवल मतदानका एजेन्टमा सीमित हुन पुगेका छन् । कम्युनिस्ट क्याडरहरू खानेपानी, वन, विद्यालय र अस्पताल सञ्चालक समितिमा हावी त भए , तर त्यहाँ हावी भएसँगै उनीहरूमा रहेको जुझारुपन पनि उनीहरूले त्यतै कतै विसर्जन गरिदिए ।

यस्तोमा अझै हाम्रो पार्टीले लेनिनवादी संगठनात्मक सिद्धान्त अपनाएको स्वाङ रच्छ । तर, लेनिनको संगठनात्मक सिद्धान्त उनको राजनीतिक, सांस्कृतिक र आर्थिक सिद्धान्तसँग अविभाज्य छ भन्ने उसले बिर्सिसकेको छ । लेनिनको समग्र आत्मालाई छोडिदिएर भित्तामा झुन्ड्याइएको लेनिनको तस्बिरले समाजलाई कति उद्वेलित गर्न सक्ला ? समाजमा त्यसले कति प्रभाव विस्तार गर्न सक्ला अथवा भनौं पुँजीवादविरुद्धको संघर्षमा त्यसले कत्तिको प्रभावकारी भूमिका निर्वाह गर्न सक्ला ? यही प्रश्न आजका युवाको हकमा पनि लागू हुन्छ ।

समाजमा कम्युनिस्ट पार्टीको यो स्तरको बोलवाला छ, संगठनमा उसले यो स्तरको पकड कायम गरेको छ कि सातमध्ये ६ प्रदेशमा उसले आफ्नै नेतृत्वको सरकार सञ्चालन गरिरहेको छ । देशैभरका युवा, कम्युनिस्ट पार्टीमा आबद्ध छन् । यसरी जुझारुपन सकिदिने र वैचारिक कुँजोपन विकास गरिदिने खालको दुर्भाग्यपूर्ण अवस्थामा उभिएका युवासँग हामी के अपेक्षा गर्न सक्छौं ? यति भइसकेपछि नयाँ पुस्ताको राजनीतिक चेतनाको स्तर कहाँ छ भन्ने थप दृष्टान्त दिइरहनु पर्छ र ? यद्यपि, आशा गर्ने ठाउँ जहिले पनि जीवित रहन्छ ।

हामी यो पार्टीलाई ब्युँताउने , प्राण भर्ने, वैचारिक, राजनीतिक मुद्दालाई संघर्षशील बनाउने सोचमा छौं । अहिलेका विवादलाई वैचारिक चरणमा पु ¥याउने प्रयासमा छौं । तर , सफल हुन्छौं कि असफल , अहिले नै भन्न सक्ने अवस्था छैन । यो वैचारिक लडाइँमा हामी पार्टीभित्र असफल भयौं भने यस मुद्दालाई लिएर बाहिरबाट भए पनि विद्रोह हुन सक्छ । किनभने , अनुहारसहितको विकल्प नदेखिँदा अनुहारविहीन विकल्प आउन सक्छ । यसै आलोकमा उभिएर के भन्न सकिन्छ भने राजनीतिभन्दा बाहिर पुगेर खडा भएका वैकल्पिक शक्तिको भविष्य पनि त्यति उज्यालो छैन । यसको ज्वलन्त उदाहरण भारत हो, जहाँ कांग्रेस र बिजेपीको विकल्पमा दुई –चारजना डिग्रीधारी त उभिए, तर कालान्तरमा उनीहरूबाट पनि नहुने रहेछ भनेर देखियो ।

अन्ततः अन्ना हजारेको नैतिक साधकलाई अगाडि ल्याएर आम आदमी पार्टीले कंग्रेस र बिजेपीको गढलाई भताभुंग बनाइदियो । यसले पनि देखिन्छ कि नैतिक बल मात्र त्यो बल हो , जसले धन –बललाई पछार्न सक्छ । त्यो नैतिक बल गुमाएका हाम्रा नेताहरू आज असहाय देखा परेका छन् । त्यसैले हामी नैतिक बल भएकालाई अघिल्लो पंक्तिमा राखेर यही पार्टीलाई वैचारिक र सांगठनिक रूपले बलियो बनाएर अगाडि बढाउन चाहन्छौं, जहाँ वास्तविक युवाहरूले नेतृत्व लिऊन् । हामीलाई लाग्छ , त्यस्तो वैचारिक राजनीतिक संघर्षलाई साथ दिनेको संख्या उल्लेख्य छ । हाम्रो संघर्षले हामीलाई तत्काल प्रधानमन्त्री वा राष्ट्रपति बनाउन नसक्ला, तर वैचारिक ढंगले संघर्ष अघि बढाउन भने त्यो पर्याप्त हुनेछ । हामी असफल भयौं भने हाम्रो असफलताको चिहानमा उभिएर प्रतिगामी र दक्षिणपन्थी शक्तिले आफ्नो पखेटा फिजाउनेछ ।

जनताको बेचैनीलाई सबैले अनुभव गरेका छन् । पत्रपत्रिकामा दैनिक त्यस्ता समाचार आइरहेका

हुन्छन्, जसले हरेकलाई उद्वेलित बनाइरहेको छ । गलत व्यक्तिलाई पोषिएको र इमानदार व्यक्तिलाई दण्डित गरिएको वर्तमान अवस्थामा हाम्रो असफलताले धेरै दिनसम्म निराशालाई आक्रोशमा फेरिनबाट रोक्न सक्नेछैन । किनभने , समाज विकल्परहित कहिल्यै पनि रहँदैन । प्रगतिशील विकल्प भित्रबाट दिन सकिएन भने यसको विकल्पमा अर्को विकल्प बाहिरबाटै भए पनि जन्मन्छ । यसको अनुमान ०६४ मा ह्वात्तै अगाडि आएको माओवादी पार्टीको उत्थान र पतनको इतिहासबाट पनि लगाउन सकिन्छ । माओवादी पार्टी त्यति वेला निर्वाचन जितेर आएको थियो, जति वेला उनले कतै पनि पुल–पुलेसा, बाटो, पोखरी बनाएको थिएन ।

तर पनि एमाले, कांग्रेसकै मतदाताले माओवादीलाई निर्वाचन जिताएर अगाडि ल्याइदिए । जनताको त्यो अपेक्षा पूरा गर्न नसकेको माओवादीलाई अर्कोपटक उनीहरूले चुनेनन् । भन्नुको अर्थ के भने जनताले विकल्प खोजिरहेका हुन्छन् । अहिलेको अवस्था माओवादीसँग मोह भंग हुँदा एमालेलाई चुन्ने र एमालेसँग मोह भंग हुँदा माओवादीलाई चुन्नेजस्तो छैन । यति वेला जनताले विकल्प रोज्नुपरेमा अर्कैतिर जान सक्ने सम्भावना छ ।

यस्तो बेथिति निर्बाध चलेको देख्दा नेपालमा युवापुस्ता नै छैन कि भन्ने भान हुन्छ । तर कुरा त्यस्तो भने होइन । नेपालीमा एउटा उखान छ – तातो दूधले मुख पोलेको बिरालोले मोही पनि फुकेर खान्छ । आन्दोलनका नेताहरूबाट पटक – पटक ठगिएकाले युवाहरू हतपती कसैलाई विश्वास नगर्ने अवस्थामा छन् । तर, उनीहरूको धैर्यको बाँध भत्केको दिन सिद्धान्त र नेताको अभावमा पनि युवपुस्ता यो अवस्थालाई समाप्त पार्न अघि आउनेछ ।

अब कम्युनिस्ट पार्टीले ५० वर्षसम्म विकासको रणनीति र कार्यक्रम बनाउनुपर्ने हुन्छ । त्यसभन्दा पनि महत्वपूर्ण कुरा कम्युनिस्ट पार्टीले कम्युनिस्ट कार्यदिशा अख्तियार गर्नुपर्छ । नवउदारवादी पुँजीवादी कार्यदिशा बोकेर समाजवादको यात्रा असम्भव छ । कार्यदिशा निर्माण गर्दा यो पनि हेक्का राख्नुपर्छ लेनिनको जस्तो एकदलीय सत्ता , हिंसामा आधारित क्रान्ति हुँदैन भने त्यसको विकल्प दिन सक्नुपर्छ । हिजो लेनिन र माओको विकल्प भनेर जुन विकल्प अघि सारियो , त्यो प्रजातान्त्रिक समाजवादभन्दा कुनै पनि मानेमा नयाँ थिएन ।

त्यो फेबियन समाजवादकै नेपाली संस्करण थियो । अब हामीले सर्वाहाराको अधिनायकत्व लागू नगर्ने, एकदलीय शासन नचलाउने हो भने पनि उत्पीडित वर्गको राजनीतिक, सांस्कृतिक र आर्थिक वर्चस्व कायम राखिरहने नयाँ बाटो खोज्नैपर्छ । हामीले नयाँ आर्थिक , राजनीतिक, सांस्कृतिक सिद्धान्तलाई अगाडि सार्नैपर्ने हुन्छ । नेपालका निम्ति ल्याइएको त्यस्ता सिद्धान्तलाई अन्य मुलुकले पनि अनुकरण गर्न सक्छन्, जसरी हामीले विश्वबाट सिकिरहेका हुन्छौँ । नेपालका कम्युनिस्ट र युवाको आजको मुख्य चुनौती नै यही हो ।

हामी र हाम्रो अग्रज पुस्ताले सामन्तवादका विरुद्ध सानदार ढंगले संघर्ष ग ¥यो, तर पुँजीवादसँग आमनेसामने भएपछि हाम्रो नेतृत्वको ठूलो अंश पुँजीवादबाट प्रदूषित बन्न पुग्यो । यस्ता प्रदूषितहरूले पुँजीवादका विरुद्ध लड्न सक्ने कुरै भएन । त्यसैले युवापुस्ताले यो अजंगको पुँजीवादसँग यसरी नै सानदार ढंगले लडाइँ लड्नुपर्छ, जसरी हिजोको पुस्ताले सामन्तवादका विरुद्ध लडाइँ लडेको थियो ।

हाम्रो पुस्ताले युवाहरूसमक्ष यो सत्यलाई कबुल्नैपर्छ कि पुँजीवादसँगको लडाइँमा हामी कमजोर साबित भयौँ । युवालाई भन्नुपर्छ कि तिम्रा अगाडि पुँजीवादसँग लड्ने चुनौती तेर्सिएको छ । सम्पूर्ण सामथ्र्यका साथ पुँजीवादलाई धुलिसात पार्ने महायज्ञमा सामेल होऊ । अन्यथा , पुँजीवादले मान्छे र मान्छेको संसारलाई समाप्त पारिदिनेछ । नेपालका कम्युनिस्ट र युवाको आजको मुख्य चुनौती नै यही हो ।